| पृष्ठ | लाहर | अशुद्ध | शुद्ध |
|---|---|---|---|
| १४८ | ११ | लाग्दै | लाग्दैन |
| १६१ | ७ | गर्दै | मर्दै |
| १७१ | ५ | वज्रथान | वज्रयान |
| १७३ | अन्तिम | राग | रोग |
| १७४ | ११ | पान्चौ | पाँचौं |
| १७५ | 18 | त्यस्तै ने | त्यस्तै नै |
| १७५ | अन्तीम | स्वर्यको | स्वर्थको |
| १८८ | 20 | के दुःख | के दुःख्यो |
| १९० | 13 | त्यसरी ने | त्यसरी नै |
| १९७ | ७ | मरेको | गरेको |
| २०० | १३ | सपना हरी | सपना धरी |
| २०१ | २ | मैत्री/मानिसहरु | मैत्री/मानिसहरुलाई |
| २०३ | १६ | यसरी ने | यसरी नै |
| २११ | २० | गर्दै हुन्थ्यो | गर्दै म |
| २१२ | १४ | आमाको सेवा गर्दो रहेछ | धुप व्यापार गरेर दिनमा आठ आठ कौडी कमाएर आमाको सेवा गर्दो रहेछ। |
| २२० | १७ | दुबै ने | – दुबै नै |
| २२३ | १३ | दाहिने हातमा लिन लो कम से कम -- | – दाहिने हातमा लिनु पर्छ त्यसपछि दाहिनेले देब्रे हातले [illegible] गर्नु पर्छ। |
| २२३ | १६ | काम | – काम नलाग्ने |
| २२७ | १५ | ठुलो चिन्त | – ठुलो चिन्ता |
| २२८ | १७ | ज्ञान बोधलाई | – ज्ञान बोध नभई |
| २२८ | 1 | तीन लाख | – एक लाख |
| २४२ | २१ | हुना | – हुनाले |
| २५० | ७ | जम्म | – जन्म |
| २५० | ४ | धिहिनु | – धुहिनु |
| २५६ | ६ | अभ्यास अधिनमा | – अभ्यास गर्नु पर्छ। निन्द्रा र मन चञ्चलताको अधीनमा |

Rs= 60/

# निर्माण सौन्दर्य मार्ग

( कल साङ थरलम दुवे थेम्के )



मूल लेखक

शेख दोर्जो, (ङावाङ पाल्साङ)

अनुवादक

निमा रिञ्छेन यल्मो (बी.एस-सी.)

(सेटुप छुल्ठीम)

प्रकाशक

**यल्मो प्रकाशन**

आलुवारी

**प्रकाशक :**
यल्मो प्रकाशन
आलुवारी
दार्जीलिङ्ग

**मूल लेखक :**
शेख दोर्जो, (ङवाङ पाल्साङ)

**अनुवादक :**
निमा रिञ्छेन यल्मो  बी० एस-सी०

**मूल्य :**
रु०

**कम्प्यूटर सेट :**
विष्ट कम्प्यूटर सेन्टर
सुपर मार्केट दार्जीलिङ्ग

**मुद्रक :**
आनन्द प्रिंटिंग प्रेस
जगतगंज वाराणसी



**THUPTEN SANGAG CHOLING MONASTERY**

West Point, Dali,
Tenzing Norgay Road,
Darjeeling-734101
India

༄། །སྐལ་བཟང་ཐར་ལམ་བགྲོད་པའི་ཐེམ་སྐས་འདི་བཞིན་འབྲུག་པ་རིན་པོ་ཆེ་གོང་མ་མཆན་ཙམ་བརྗོད་དཀའ་ཡང་། དགོངས་པ་དོན་གྱི་སྙད་དུ་བརྗོད་ན་ཤེས་རབ་རྡོ་རྗེ་འམ། ངག་དབང་དཔལ་བཟང་ཅེས་པ་དེ་ཉིད་ཀྱིས་སྐྱེ་འགྲོ་ཆོས་ལ་བསྐུལ་བའི་ལེགས་བཤད་སྡིག་སྦྱོང་དགེ་སྒྲུབ་ལམ་སྟོན་ཁྱད་དུ་འཕགས་པ་གོང་མ་རང་གི་གསུང་བཟང་གཞིར་བཞག་སྟེ། རང་འདོད་ཀྱི་བསྲེ་ལྷད་མེད་པ་ཀུན་བཟང་བླ་མའི་ཞལ་ལུང་རྒྱས་བསྡུས་ནས་ཕྲན་བུ་ཁ་སྐོང་ཞུས་ཏེ་ནང་པའི་ཆོས་ལ་མོས་ཞིང་ཡུལ་སྐད་མི་མཐུན་པ་རྣམས་ལ་ཕན་དུ་རེ་བས་ལྷག་བསམ་རྣམ་དག་ཐོག་བོད་སྐད་ནས་ནེ་པ་ལའི་སྐད་དུ་ཕབ་བསྒྱུར་ཞུ་མི་རྡོར་གླིང་ཨ་ལུ་སྒྲ་རི་གནས་སྟོད་ཡོལ་མོ་བ་ཉི་མ་རིག་འཛིན་གྱིས་ནང་པ་སངས་རྒྱས་པའི་ལམ་ཞུགས་རྣམས་ལ་ཐུགས་ཕན་གསོས་རྒྱུར་བསམ་ནས་དེབ་འདོན་ཞུས་པའི་དགེ་བའི་རྩ་བ་འདིས་ཁམས་གསུམ་ཡིད་ཅན་མཐའ་དག་ཐར་ལམ་བྱང་ཆུབ་འཐོབ་པའི་རྒྱུར་གྱུར་ཅིག།

འབྲུག་ཐུབ་བསྟན་གསང་ཆོས་གླིང་ནས

ཕྲན་ཤེས་རབ་རྒྱ་མཚོས།

“कल फङ थर लभ डोड्पे थेमके” (भद्र कल्प निर्बाण मार्ग तिर लैजाने सेढ़ी) नामक पुस्तकका मूल लेखक पहिले जन्मका डुकपा रिम्पोछे हुन् । वहाँका परिचय दिनु मुश्कील परे तापनि वहाँलाई चिन्नका निम्ति धार्मीक शुभ नाम चाँहि शेरब दोर्जे अथवा ङावाङ पालसङ पनि भन्दछन् । वहाँले जनप्राणी हरूको उदारको निम्ति, विवेकशील प्राणीहरूलाई धर्म मार्ग देखाउनका लागि, पाप नराम्रो कर्म छोड़ाउने र कुशल धर्म राम्रो कर्म सञ्चय गराउने प्रयत्न गर्दै, कुशल मार्ग देखाउदै विषेश गरी अघिका आर्यहरूका प्रवचन र बुद्धका वाणी मात्र लेख्नु भएको छन् । आफ्नो स्वार्थ र कृतिको इच्छा नराखी, यस्तो स्वार्थ र आफनो प्रख्यातको अलिकति पनि मिलावट नगरी, “कुइन फङ लामे स्याल लुङ” भन्ने पुस्तकबाट अलिकति थपेर बौध धर्ममा चासो र श्रद्धा भएका धर्म अवलम्वीहरू भए तापनि तिब्बती भाषा नबुझ्ने र नजान्नेहरूका निम्ति फाइदा र लाभदायक होस भनि विशुद्ध आन्त्रीक हृदयले तिब्बती भाषाबाट नेपाली भाषामा अनुवाद गर्ने दार्जीलिङ आलुबारी निवासी योहमावा निमा रिन्छेनले बौध धर्म अवलम्बीहरूका लागि केही लाभदायक होस भनि यो पुस्तक छापेका हुन् । यो पुस्तक छापेको पुण्यले त्रीलोकका सर्व प्राणीहरू बोधि ज्ञान र निर्वाण प्राप्त होस ।

डुग थुबतेन सङा छोलिङ

(डाली ठूलो गुम्बा दार्जीलिङ)

लामा शेरब ग्याछो ।

ॐ

## *श्रद्धाञ्जली*

"कल साङ थरपा डोवे थेमके यदि की द्रेद जो शेच्यावा शुगसो" भन्ने ग्रन्थको अनुबाद सरल नेपालीमा गर्न समर्थक भएका श्रेय मेरा पूज्य गुरु स्वर्गीय लामा ज्याम्पल दोर्जेका कृपा र करूणाको बलले भएको हो र यो अनुवाद कतिसम्म सफल भयो यो कुरो जिज्ञासु र पाठकबृन्दका रूचिमा निर्भर गर्छ र यो सफलताको श्रेय पूष्पाञ्जली स्वरूप मेरा पूज्य स्व० गुरूजी (लामा) ज्यम्पल अर्पण हुन्छ।

सदा सर्वदा जन कल्याण कै धारणा गर्ने,

*अज्ञानताको अन्धकारमा प्रकाश दिने,*

*अज्ञानताको अन्धाहरूलाई चक्षु दिने,*

*भवसागरको नाविक भई पार तारिदिने,*

*परम पुज्य गुरु स्व० लामा ज्याम्पल दोर्जे,*

*स्मरण श्रद्धा र भक्ति कै आधार लिई,*

*प्रणाम गर्छु काया वाक चित्तले हजुरलाई॥*

*म र सर्व प्राणीमाथि सदा सर्वदा करूणा रहोस्,*

*हजुरको आशीर्वाद सर्व प्राणी माथि बर्सियोस्।*

*सर्व प्राणीको हृदयमा करूणा र दया जागोस्,*

*सारा संसारमा अशुभ नाश भई मंगलमय होस्।*

## आवरण (Cover) को सम्बन्धमा

आवरण (Cover)

बाहिरी आवरणको नक्सा विषय-यो भावचक्र (सिपाखोर्लो) हो। यो छ भागमा विभक्त भएको छ। माथिल्लो भाग देव, असुर र मनुष्यलोक हुन्। तल्लो भाग पशु, प्रेत र नरकलोक हुन्। छ लोकको ठीकभित्र भागमा मानिसहरूको नक्साले कर्म बुझाउँछ, सेतो भाग अनुहार उकालो फर्काएकोले कुशल कर्म बुझाउँछ। कालो भाग अनुहार तलतिर फर्काएकोले कुकर्म गरेको बुझउँछ। कुशल कर्म गरे फल देवलोक र सुख पाउँछ भनी अनुहार उकालो फर्काएको चिनो हो। अनुहार ओह्रालो फर्काएको चिनो कुकर्म गर्नेहरू दूर्गतिमा जन्म लिने बताएको हो। दुःखको मुख्य कारण कर्म हो। कर्म मुख्य गरी गर्ने कारण तृष्णा,रिस र अज्ञानता (अविद्या) को कारणले गरेको हो भन्ने चिनो चाहिँ मध्यम भागमा सुङ्गुर, चरा र साँप भएको हो। कुशल र अकुशल कर्म सबै नै अविद्या, तृष्णा र रिसबाट आएको हो, अनि दुःखको कारण भएको हो। सुङ्गुरले चाहिँ अविद्या (अज्ञान्ता) बुझाउँछ, चराले तृष्णा बुझाउँछ अनि साँपले रिस बुझाउँछ। खास गरी सुङ्गुरको मुखबाट नै दुइवटा चरा र साँप निस्केको हुनुपर्छ अनि सुङ्गुरको पुच्छर चरा र साँपको मुख भित्र हुन पर्छ। यसको कारण चाहिँ तृष्णा र रिसको मूल स्रोत नै अविद्या हो भनी बुझाएको हो। सुङ्गुरको पुच्छर चरा र साँपको मुखमा भएको कर्मको चक्र निरन्तर भएको अनि एक अर्काको सहायता गर्ने

बुझाएको हो। अविद्या, तृष्णा र रिसको कारणले गर्दा दुःख उत्पन्न भएको हो। दुःख कसरी उत्पन्न हुन्छ भन्दा बाहिरीपट्टि भएको बाह्रवटा चिनो देखाएको छ। यो प्रतित्य समुत्पाद हो॥ यसको कारणले गर्दा यो भएको हो भनी बुझाउँछ। लट्ठी टेकेर हिड्दै गरेको मान्छे अन्धा भएको चिनो हो, यो  अविद्याको चिनो हो। त्यसपछि देब्रेपट्टिबाट गन्ती गरेर जानु पर्छ। कुमालेले हाँड़ी बनाएको संस्कार गरेको हो। बाँदर विज्ञान, नाउ नाम रूप(संज्ञा), घरको नक्सा षड़ायातन (स्रोत) केटा केटीसगै भएको स्पर्श, एउटा मान्छेको आँखामा काँड़ाले घोचेको वेदना हो, केटा केटीसगै भएको भव (वन्धन) हो रूखमा चढ़ेर फल टिप्दै गरेको उपादान हो, स्त्रीमात्र भएको तृष्णा हो, त्यसपछि जरा (जन्म) अनि बृद्ध र मरण हो। अविद्याको कारणले संस्कार गर्छ, संस्कारको कारणले विज्ञानको जन्म हुन्छ, विज्ञानको कारणले नामरूप हुन्छ, नामरूपको कारणले षड़ायातन हुन्छ, षड़ायातनको कारणले स्पर्श, स्पर्शको कारणले वेदना, वेदनाको कारणले भव, भवको कारणले उपादान, उपादानको कारणले जन्म, जन्मको कारणले दुःख, बृद्ध अनि मृत्यु। यसरी चक्र घुमीनै रहन्छ भन्ने बुझाएको हो। बाहिरीपट्टिको तीनवटा आँखा भएको मुखले समातेको र यसको पेटभित्र यो सम्पूर्ण वर्णन गरेको कारण सबै अनित्य हो भनी बुझाएको हो। यो मृत्युपति यमराज हो। यो छ लोकभित्र जन्मेको प्राणी सबै एक दिन मर्नुपर्छ भनी बताएको हो। माथिल्लोपट्टि बुद्धले चन्द्रमापट्टि संकेत गरेको मुक्तिको मार्ग देखाउनु भएको हो जुन मार्गले निर्वाण प्राप्त गर्छ।

यो भाव चक्रको नक्सा कसरी भयो भन्ने इतिहास यसप्रकारको

छ – भगवान् बुद्धका समयमा एउटा टाड़ा देशका राजाले मगधका राजालाई हीरा मोती आदि उपाहार दिँदा, मगधको राजाले पनि त्यस उपहारको बदलीमा उपहार दिने विचार गर्दा त्यस उपाहारको मोल भन्दा बढ़ता केही नहुँदा वहाँले भगवान् बुद्धलाई सोध्नु भएछ कि कस्तो प्रकारको उपाहार दिए उचित होला भन्दा भगवान्ले यो भव चक्र र प्रतित्यसमुदपाद को नक्सा बनाएर दिनु भनी आज्ञा गर्नु भए। जब यो उपाहार टाड़ा देशका राजाले पाए अनि वहाँले राम्रो गरी त्यस नक्साको अर्थ बुझेर ध्यान गर्दा वहाँले निर्वाण प्राप्त गर्नुभयो।

# एक दुई कुरा

सर्व प्रथमतः म त्रिरत्न र तीनै कालका सर्व गुरुजन अनि आचार्यजनलाई मेरो सविनय प्रणाम चढ़ाउँछु। सबै गुरुजनले आ- आफ्नो धर्मका गम्भीर गुणात्मक शिक्षाद्वारा उत्तम मार्ग देखाइरहेका छन्। मेरा प्रिय अनि श्रद्धेय गुरु स्व० लामा ज्याम्पल दोर्जेका अटुट प्रेरणा र सम्झनामा नतमस्तक हुँदै यो सानो हामीले शुरूदेखि नै बझ्न र पालन गर्नुपर्ने शिक्षा ग्रन्थ जिज्ञासु पाठकवृन्द समक्ष टक्र्याइरहेछु।

मेरो सौभाग्यले गर्दा र पूर्वजन्मको सस्कारले गर्दा म लामा ज्याम्पल दोर्जेसित प्रायः बाह्र वर्षसम्म वहाँका सेवा र वहाँबाट शिक्षा ग्रहण गर्दै बसें। वहाँ स्वार्गीय गुरु ङावाङ पालसङ डुक्पा रिम्बुर्छेबाट ज्युङने ब्रत विषय शिक्षा दीक्षा ग्रहण गरी प्रायः नौ वर्षसम्म ल्हासामा उच्च अध्ययन गरिवरी, अनि डुक्पा रिम्बुर्छेले ई० सन १९४५ तिर नश्वर शरीर "फुगपो डुबखङ" भन्ने गुफामा ध्यान अवस्थैमा त्याग्नु भएपछि दार्जीलिङतिर वहाँ आउनुभए। वहाँले आफ्नो गुरुका आज्ञाअनुसार विशेष ज्युङने मौनब्रत विषयमा मात्र शिक्षा र ब्रत पालन गराउनु हुन्थे। वहाँको मूल उद्देश्य के थियो भने मानिस जीवित हुँदा नै केही कुशल कर्म गरे पछि बुद्धत्व प्राप्त गर्ने विऊ हुनेछ भनी यस उसले यता दार्जीलिङतिर धेरै ठाउँमा ज्युङने ब्रत प्रचार गर्नुभए। अझ मेरो कोशिश र विन्ति गरी नेपालीमा ज्युङने पुस्तक **रूपान्तर** गरी प्रकाश गरेपछि अक्षर नजान्ने सबैलाई सजीलो भयो **अनि** यतातिर मात्र अझ न मौलाएर नेपालका पार्वतीय

अञ्चलहरूमा जहाँ जहाँ डुक्पा रीम्बोर्छेका गुम्बाहरू छन् त्यतातिर पनि ठूलो असर पाऱ्यो। यति मात्र होइन वहाँ छँदा डाली थुग्जे रिप्पोर्छेका गुम्बामा पनि रिम्पोर्छेहरूका धर्म व्याकरण नेपालीमा सरल प्रकारले बुझाउनका निम्ति बोलाउनु हुन्थे। आफ्नै डाली गुम्बामा पनि नेपाल पूर्वाञ्चल तथा आसमबाट खोजी आउने लामाहरूलाई कुइनसाङ लामे स्यासलुङ र अरू ग्रन्थहरूका सहज व्याख्य गर्दै मेलैसित बुझाउनु हुन्थे। वहाँका मौलाउने गुणले धेरै धर्म संगतलाई फायदा भयो अनि कतिले वहाँको लीला बुझ्न सकेनन्, वहाँका अगुण मात्र हेर्न लागे। तर मलाई वहाँका शिक्षा दीक्षाले धेरै नै सिकायो र अझ धेरै लुकिएको कुराहरू सोध्ने र धेरै काम गर्नुपर्ने थियो तर अभाग्यवश काल गतिले गर्दा १०-१-९० को दिन वहाँले आफ्नो नश्वर शरीर त्यागेर हामीलाई यस सौभाग्यबाट वञ्चित गराउन भयो। तरै पनि वहाँका उत्साह र आशीर्वादले हामीले जति सक्दो काम गर्दैछौं।

जब हामी आफूलाई बौद्धमार्गी भनी संकेत गर्छौं भने हामी कसरी यो जल्दो संसारमा आफूलाई चलाउनु पर्छ त्यही पनि बुझ्न सक्नु पर्छ नत्र भने यत्र तत्र हावाले उड़ाएको पात पत्कर जस्तै उड़ी हिड़नु पर्छ। अनि फेरि "खाई सार कि लाईसार मरेपछि लम्पसार" भन्नेसम्म मात्र लक्ष्य राखे यो अमूल्य जीवनको केही मूल्य नबुझी पशुसमान मात्र हुन्छौ। यस्तै कुरोहरूलई मध्यदृष्टिमा राख्दै यो सानो पुस्तिका मेरा पूज्य गुरुले बुझाए अनुसार नेपाली भाषामा उल्था गरी जिज्ञासु

पाठकबृन्द अघि टक्र्याउनु सक्ने श्रेय वहाँलाई नै हुन्छ। म वहाँप्रति आजन्म ऋणी छु। वहाँले जुन ज्ञान र शिक्षा प्राप्त गरेका थिए त्यो ज्ञान अज्ञान वर्गका मानिसहरूमाझ फैलाएर ज्ञान बाँटने उद्देश्य र चेष्टा थियो। त्यही कुरोलाई मध्यदृष्टिमा राख्दै यो सानो पुस्तिक पनि वहाँकै इच्छा पूर्ण गर्ने चेष्टा गरिरहेछु! आजको युगमा मानिसहरू मनोरञ्जनमा मात्र रूचि गर्छन्। अहिले वर्तमान अवस्थामा मात्र ध्यान दिएर भविष्यका विषयमा केही चिन्ता गर्दैनन्। मानिसहरू गुरुकहाँ गएर धर्मको प्रवचन सुन्ने समय पनि निकाल्दैनन्, धर्मको प्रवचन एकक्षण मात्र सुनेर मन पाक्दैन, धेरै सुन्नपर्छ तर वर्तामान युगमा समयको अभावले गर्दा र धर्ममा दुःख हुनाले गर्दा आजकल मानिसहरू धर्मप्रति चासो राख्दैनन्। यस्तो प्रकारको स्थीतिलाई पनि मध्यदृष्टिमा राख्दै घरैमा बसेर केही मात्रमा धर्म के हो भन्ने बुझ्न सकोस् भनी यो प्रयत्न गरेको हो। मलाई त यही ग्रन्थले धेरै फायदा गर्‍यो, धर्म भनेको के हो बुझ्न सके, जति सक्दो यही ग्रन्थानुसार अभ्यास पनि गरिरहेछु। अरू पनि कुनै व्यक्ति धर्ममा रूचि भए उसलाई पनि केही फाइदा गर्छ कि भन्ने आशा राख्दछु।

यो पुस्तिका प्रकाश गर्ने पर्ने जोड़ वर्तमान पुज्य गुरु ङावङ रवेन्रब डुक्पा रिन्पोर्छेका आज्ञाले हो। यो प्रस्तुत पुस्तक साधारण बर्गका मान्छेले पनि बुझ्न सक्ने नेपाली भाषामा हुनु पर्छ भन्ने आदेश गर्नु भयो। यस भन्दा अघि वहाँलाई म १००० चोटि ञ्युङने गर्ने छु भनी विन्ती चढ़ाएको थिएँ, तर वहाँले भन्नु भए

"यो १००० ज्युङ्ने गरेको त राम्रो हो, तर तिम्रो आफ्नै लागि मात्र फायदा हुन्छ। १००० ज्युङ्ने बसेको भन्दा पनि ठूलो फल तिमीले यो पुस्तक नेपालीमा अनुवाद गऱ्यौ भने लाखौं मानिसहरूको कल्याण हुन्छ कारण ज्युङ्नेको नेपाली रूपान्तर किताबले नेपालको कुनाकानी मा धेरै फायदा गरेको छ, त्यसकारणले झट्टै गरिहाल्नू "भनी बारम्बार भनिरहनु हुन्थे। साँच्चै नै जब हामी हाम्रो शरीर र मन साथै हुँदा अनि उमेर छँदै सांसारिक कर्ममा लिप्त हुनुपरे पनि, अलिक समय निकालेर धर्ममार्गमा आफूलाई ल्याउनु अति फलदायक हुन्छ जुन कुरो स्व० कवि देवकोटाज्यूले सरल प्रकारले भनेका छन् -

*" जिन्दगीको मौसम रहँदै खन खन दिलको खेत।*
*बाँझो नहोस पानी पर्दै चेतन जल शुद्ध सफेद॥*
*अनन्त ठूलो सागरबाट घुमि घुमि मौसम आयो।*
*खुब फुल्छ दिलको माटो, वर्षाले गान सुनायो॥*
*इन्द्रिय गोरू शरीर हलोमा बाँधी खन खन खेत।*
*बीऊ छन जगमा कर्म हजारौं, रोप फलाउ लह लह खेत।*
*जिन्दगीको मौसम रहँदै खन खन रोप फलाऊ।*
*पर्खन्न कसैकन काल निठुरो हाय ! यसै ननिदाऊ।*
*रोप रोप यी बीऊ सब अहिले, अन्न फलोस पछिलाई।*

*नरून्नु पछाड़ि आउँछ जहिले हिउँदो काँड़ा तिमीलाई॥*

*त कुरो आयो विऊ फलको जस्तो रोप्छ त्यस्तै फल्छ।*

*कोदोको विऊ छरेर धान फल्दैन। यस कुरोलाई*

*ध्यानमा राख्नु पर्छ। पछि मर्ने बेलमा जब*

*शरीरले केही गर्नु सक्दैन, रोगको वशमा परेर*

*आफ्नो मन वंशमा ल्यउन सक्दैन, त्यस बेला धर्ममा*

*कोशिश गर्छु भन्ने व्यर्थको कुरो हुन्छ, त्यस*

*बेला अति ढिलो भइसकेको हुन्छ।*

यति नै आशा र ध्येय लिएर गुरुजनका अधिष्टान र आशीर्वादसहित यो पुस्तिका टक्र्याइरहेछु, विद्वता दर्शाउनु होइन। अझ जिज्ञासा छ भने राम्रो गुणिलो ज्ञानी लामा गुरुजनसित यस विषयमा अझ राम्रो स्पष्टिकरण खोजे झन फायदा हुन्छ। केही त्रुटीहरूलाई सच्याउँदै पढ़ेर यो पुस्तिकाले पाठकबृन्दमा चित्त मौलाउन सके मैले गरेको प्रयास सार्थक सम्झन्छु।

अन्तमा कति गूढ़ कुरोहरू फस्टाइ दिनुभएकोमा "खे रिम्पोर्छे प्रोफेसर जिम्बा" अनि डाली सङ छोलिङ गुम्बाका मित्रहरू र खेरिम्पोछे सबैलाई मेरो आन्तरिक हृदयबाट धन्यबाद। साथै साझा प्रकाशनका मेरा मित्र श्री मधुसुदन बिष्टजी जसले भाषा त्रुटीहरू सकेभर संशोधन गरिवरी वहाँकै

देखरेखमा र अरू प्रकाशनका मित्रवर्गका सहायताले यो पुस्तिकाले आफ्नो रूप लिन सक्यो त्यस्को निम्ति वहाँहरू प्रति धन्यावादसहित आभारी छु। श्री दावा ग्यान्जे (टिवेटन आर्टिस्ट) जसले नरक विवरण नक्साहरू कष्ट नमानी बनाइदिनु भयो अनि श्री वाङ्छु लामाले उत्साहसहित पूज्य लामा ज्यम्पल दोर्जेले लेखाई राख्नु भएको खाता मलाई सुम्पिनु भएकोमा, जसले गर्दा मलाई धेरै नै सजिलो पर्‍यो उल्था गर्नमा, वहाँहरूलाई मेरो आन्तरिक धन्यवाद ।वहाँहरूप्रति म सदैव ऋणी छु।

मेरो संकल्प - यस पुस्तिकाद्वारा भएको पूण्य सञ्चय, षष्ट गतिमा परेका माता पिता स्वरूप सर्व प्राणीहरूले प्राप्त गरून्, अनि यस पूण्यबलले षष्टगतिका दुःखबाट मुक्त भई निर्वाणको मार्ग पाउ सकुन् भन्ने आन्तरिक प्रार्थना छ। सर्व मङ्गलम् ।

निमा रिञ्छेन यल्मो (सेटुप छुल्ठीम)

ॐ

# स्तुति

सर्वमङ्गलमय, सदाविजयी, करूणाको सागरले भरिएको हृदयकोष, सदा सर्वदा श्रद्धालुगण, छः लोक प्राणीका आफ्ना आफ्ना श्रद्धा र विश्वासको आधारमा निर्मल रूप व्याप्त भएको, भव-निर्वाण गराउने प्रकाशक, सर्वव्यापी गुरु आर्य अवलोकितेश्वरलाई प्रणाम चढ़ाउँछु। मभित्र ज्ञान र ज्ञान बोधक हेतु नभए तापनि, अलङ्कृत छन्दादिमा निपूण पनि छुइनँ, सुगम सारगर्भ मूल मुक्तिको मार्ग संक्षेपमा बुझाउन उनीहरूलाई जसले मुक्ति पाउने इच्छा गर्छ; कर्म पनि योग्य भएको जिज्ञासुलाई चित्त र मन प्रकाशको निम्ति केही ज्ञान विषय उसलाई भन्छु । सर्वगुण ज्ञानले सम्पन्न भए, ज़सले पारलौकिकको सजिलो ज्ञान दिने शक्ति भए, बोधिचित्त हेत्तु बोध गराउन समर्थ भए, सार्थक उपदेश दिने योग्य भए, त्यस्ता श्रेष्ठ गुरुका चरणधुली आफ्नो शिरोपर लिनु पर्छ। यदि कसैले समुद्र द्वीपबाट चिन्तामणि ल्याउने इच्छा भए, त्यहाँ जानुको निम्ति एउटा जहाज र जहाज चलाउने निपूण नाविकको आवश्यकता पर्छ, **कारण** जहाज र नाविक बिना त्यहाँ पुग्नै सकिँदैन मणि लिनुको निम्ति, त्यस्तै गरी मुक्ति पाउने प्रयास र इच्छा भए, गुरु कल्याण मित्र नभई मुक्ति पाउने उपाय नै छैन। गुरु भनेर आँखा चिम्म गरेर गुरु थाप्नु पनि हुँदैन। **"कुइन सङ लामे स्यालुङ"**

भन्ने ग्रन्थमा यो बताइएको छ कि गुरुको चालचलन ज्ञान गुण आफूले विचार गर्नुको लागि तीन वर्षसम्म समय लिनुपर्छ, फेरि गुरुले चेलाको चाल चलन स्वभाव बुझ्नुको निम्ति तीन वर्ष समय लाग्ने छ भनि बताएको छ। जम्मा छ वर्ष त त्यसै लाग्ने छ त्यस पछि मात्र चेलाले गुरु थाप्ने गुरुले चेलालाई उपदेश दिए उचित हुनेछ। कल्याण मित्र गुरुमा हुनु पर्ने ज्ञानगुण र लक्षण छ या छैन कौशल उपाय र विवेकले हेर्नु पर्छ गुरु योग्य छ या छैन विवेक गर्नु पर्ने छ। यदि गुरुमा हुनु पर्ने गुण ज्ञान सबै युक्त भए, कुनै दोष नभए त्यस गुरुलाई आफ्नो प्राणभन्दा बढ़ता प्रेम र माया गरी भक्तिपूर्वक गुरुको शरणमा जानु उत्तम हो।

## गुरु कल्याण मित्रलाई मुख्य श्रद्धा गर्नुको विषयः-

गुरु प्रति तीन प्रकारको श्रद्धा हुन पर्दछ, (१) स्वच्छ हृदयले प्रसन्न भएर गुरुको भक्ति गर्ने। (२) निर्मल अटुट विश्वास, श्रद्धा भक्ति भएको। (३) यस्तो प्रकारको श्रद्धा, भक्ति र विश्वास हुनुपर्छ गुरुप्रति कि आफ्नो प्राण गए तापनि केहि वास्ता नगरिने, कसैले आफूलाई मार्छु, यदि त्यस गुरुलाई विश्वास श्रद्धा भक्ति गऱ्यो भने तापनि आफ्नो प्राण गए पनि जावस तर म गुरु प्रति विश्वास छोड्दिनँ भन्ने अटल रहने हुनुपर्छ। यस्तो प्रकारको विश्वास, श्रद्धा र भक्ति गरी दिन रात सदा सवर्दा धर्म आफ्नो

शिरोमणि बनाई आफ्नो गुरुलाई भगवान् बुद्ध साक्षात हुन् भन्ने श्रद्धा, भक्ति र विश्वास गर्नु पर्छ। जसरी लाखौं करोडौं प्रकाशले आकाश ढाक्छ एउटै सूर्यको किरणले त्यस्तै त्रीरत्न, बुद्ध र सागरमय बोधिसत्वगण पनि गुरुकै चित्तबाट उत्पत्ति भएको हो, सर्व बुद्धका विधाता नै गुरु हुन्। गुरु बिना ज्ञान कहाँ पाईन्छ, उखु बिना चिनी कहाँ हुन्छ र ? आफूले कम्ती र ज्यादा ज्ञान जस्तो पाए तापनि, आशीर्वाद या वर, कम्ति या ज्यादा पाउनु आफैमाथि निर्भर छ, कसरी भने जति ज्यादा श्रद्धा, भक्ति र विश्वास गुरुप्रति छ, त्यसैको आधारमा आशीर्वाद पनि ज्यादै पाइन्छ। गुरुप्रति श्रद्धा, भक्ति र विश्वास पनि कम्ति भए आशीर्वाद र ज्ञान पनि कम्ति नै पाइन्छ। श्रद्धा, भक्ति र विश्वास भाँड़ा जस्तो हो, भाँड़ाभित्र हाल्ने धर्मको गम्भीर ज्ञान हो साधारण रूपले भनौ भने बाहिरी भाँड़ा श्रद्धा, भक्ति र विश्वास हो। भाँड़ाभित्र हाल्ने धर्मको ज्ञान हो। ज्ञान हाल्ने भाँड़ा पनि राम्रो सफा र नचुहुने हुनुपर्छ, भाँड़ा नै ठीक भएन भने भित्र जे जस्तो ज्ञान हाले तापनि काम लाग्दैन, जस्तै :- चुहुने भाँड़ामा दुध या पानी हाले चुहेर जानेछ, भाँड़ा मैला भए दुध बिग्रेर जान्छ। दुध हाल्ने भाँड़ा सफा र नचुहुने छ भने दुध पनि राम्रै हुन्छ, त्यस्तै गरि श्रद्धा भक्ति र विश्वास पनि भाँड़ा जस्तो हो, गुरुको वचन धर्म दुध जस्तो हो। आकाशबाट बर्षेको पानी गुरुको आशीर्वाद जस्तो हो, आकाशको पानी थापेर सक्दैन, पानी थाप्ने भाँड़ा जति ठूलो भए पनि पानी त्यति नै ज्यादा थाप्न सकिन्छ। भाँड़ा सानु भए पानी पनि कम्ति नै थाप्न सकिन्छ, यसरी धर्मको मूल आधार नै श्रद्धा, भक्ति र विश्वास हो। सर्वगुण जड़ित कुशल सत्कर्मको मूल आधार नै अटुट विश्वास, श्रद्धा र भक्ति हो। सुत्र तंत्रको धर्म चक्र जुनै गरे तापनि अरूको भलाई र लोक कल्याणको निम्ति बोधि चित्तको विचार उत्पन्न भएको सबै बुद्धगणका स्वभाव स्वयं सत गुरुका माध्यमबाट

भएका हुन्. सबै बुद्धहरू गुरुका कृपाले नै बुद्धत्व प्राप्त भएको हुन् भनी गुरु प्रति साँचो र असल श्रद्धा र भक्ति गरी गुरुबाट धर्म उपदेश शिक्षा लिएर गुरुको वचन अनुसार पालन गरे, सत् धर्मको मूल मर्म, आफ्नो मन, चित्ता पाकी, मुक्ति पाउने आशिष सजिलैसित पाउन सक्छ। साथै बुद्धत्व चारकायाको सिद्धि फल प्राप्त हुने बिऊ पनि सजिलैसित पाइन्छ। गुरुलाई श्रद्धा र भक्ति यस्तो हुनु पर्दछ कि वहाँको दर्शन हुन साथ आफ्नो शरीरको रौंहरू सबै ठाड़ो खड़ा हुनु पर्दछ यस्तो प्रकारको श्रद्धा र भक्ति भए आशिष पनि आफूले सजिलैसित पाउन सकिन्छ र मुक्ति पनि पाउन सकिन्छ। फेरि गुरुलाई हामी जस्तो साधारण मानिस त हो भनी विचार राखे, गुरुप्रति श्रद्धा र भक्ति पनि छैन भने आफूमा यस्तो किसिमको विचार राखी गुरुबाट जस्तै गम्भीर आत्मा ज्ञान, गुह्य ज्ञान, अभिषेक (वाङ) मेलैसित पाए पनि गुरुबाट सबै शिक्षा लिई जीवन भर योग र ध्यान गरी तपस्या गरे तापनि ज्ञानको अनुभव र सिद्धि फल प्राप्त गर्नु आकाश झैं टाड़ो दुर्लभ हुन्छ। गुरुप्रति अटल स्थिर विश्वास श्रद्धा र भक्ति भएको भक्त भए, उसले धर्म उपदेश शिक्षा ज्यादा नसुने तापनि, भावना, ध्यान, तपस्या, शंका रहितको ज्ञान र गुण कुनै नभए तापनि, नगरे तापनि तर उ चाँहि गुरु भक्त छ भने यदि श्रद्धा, भक्ति र विश्वास स्थिर छ भने उसलाई गुरुका कृपा र आशिषको बल र कारणले सम्यकसम्बुद्ध सजिलैसित प्राप्त गरी यो भव संसारबाट मुक्ति पाउन सक्ने रतिभर पनि शंका छैन।

## गुण स्मरण गर्नु पर्ने बिषय :-

त्यसैकारण गुरुको गुण मनमा गहिरो प्रकारले लिनु पर्ने कारण हो। अघि संसारमा जीना पुत्र, बोधिसत्व, भगवान् बुद्ध स्वयं पालनु भएको थियो भनी हामीले इतिहासमा पढ्छौं। वहाँहरूको दया र करूणा हामी

सर्व प्राणीमाथि भएर पनि आफ्नो कर्मको कारणले गर्दा हामीलाई बचाउनु नसकी हामी अहिले नटुंगिने भवसागरको दुःखचक्रमा परेका छौं। अघि भारतवर्ष र भोट देशमा धेरै ज्ञानी महापण्डित, सिद्ध पुरूष तपस्वी र सत् पुरूषहरू अनगिन्ती जन्म लिए तापनि, वहाँहरूको दर्शन पाउन पनि हाम्रो भाग्य नभएको, वहाँहरूका धर्म उपदेश सुन्न त परै जावस् दर्शनसम्म पनि हामीले पाउन सकेनौं। भगबान् बुद्ध र अरू सिद्ध पुरूषहरू यस संसारमा आउनुहुँदा हामी यही छः लोक भित्र दुर्गतिमा जन्म लिएको थियौं हाम्रो कर्म, पुण्य र भाग्यको कारणले गर्दा, यसकारण बहाँहरूको दर्शन पाउन नसेकेका हौं। अहिले मानिसको जीबन पाए तापनि कुकर्म, पापकर्म र दुष्टाचारमा मात्र लागेर गर्नुपर्ने कुशल कर्म नगरी, नगर्नु पर्ने कुकर्म गरी, केही नबुझी नजानी पशुतुल्य अति लाटो अबस्थामा हामीमाथि असीम महाकरूणाको बिचार लिएर हाम्रा असह्य दुःखबाट मुक्ति दिलाउनलाई साधारण मानिसको चोलामा जन्म लिई असह्य दुःखको पीड़ा शीतल गर्ने दबाई नै भई जन्म लिनुभएको हो। धेरै कल्पसम्म दर्शन पाउनु कठिन (सतधर्म) र उत्तम मार्गको जस-जसलाई जस्तो जस्तो विश्वास छ, त्यस्ता त्यस्तै स्वरूप धारण गर्दै त्यस्ता त्यस्तै धर्म उपदेश दिँदै, सर्वप्राणी लोककल्याण गरी खुबै निपुणतासाथ दुर्गतिको बाटोबाट फर्काउन उत्तम उपाय गर्दै हामी अज्ञानीलाई यही जीवनमा बोधि ज्ञानको मार्गमा डोऱ्याउने कल्याण मित्र गुरु स्वयं भगवान् बुद्ध नै हुन् भन्ने अटल विश्वास, श्रद्धा र भक्ति हुनु पर्दछ। आफ्नो गुरु अरू सतगुरुहरू भन्दा अभिन्न भए तापनि, आफ्नो निम्ति सर्व बुद्धहरूले गुण गरेको भन्दा पनि ज्यादा गुण गर्नु भएको सम्झी गुरुको लीला र उत्तम चरित्र विचार गर्दै मनमा सम्झना गर्दा आँखामा आँसु आउँदै शरीरको रौँ पनि ठाड़ो हुने गरी श्रद्धा, भक्ति र विश्वास गरी आफू आजदेखि बोधिज्ञान प्राप्त नभएसम्म सुख दुःख राम्रो नराम्रो जे

जस्तो परे पनि गुरु हजुरले जान्नुहवस्, बुझ्नुहवस् भनि यस्तो विचार सम्झना गर्दै, बाहिरी रूपले मात्र श्रद्धा र विश्वास नगरी, भित्री मनले गुरुको शरणमा जानु पर्छ अनि एकचित्त भई आन्तरिक प्रार्थना गर्नुपर्छ।

## गुरुको वचन पालन गर्ने विषय :-

सधैं गुरुलाई खुशी राख्ने वा गराउने उपाय गरी काम गर्नु पर्छ, के गर्दा कसो गर्दा गुरु कसरी खुशी हुनुहुन्छ ? जसरी भए पनि कुनै उपाय गरी गुरुलाई सधैं खुशी राख्ने काम गर्नुपर्छ। गुरुले जे जसो भने पनि, जस्तो आज्ञा गरे पनि वहाँको सबै वचन भगवान् बुद्धकै वाणी हुन् भनि, साँचो हो भनि आज्ञा पालन गर्नुपर्छ। गुरुले पानीमा हाम फाल भने पनि, आगोभित्र पस्नु भने पनि, भीरबाट हाम फाल भने पनि, विष, फोहोर वा अखाद्य खानु भने पनि, खुशीसाथ गुरुको आज्ञा पालन गर्नुपर्छ। तिलोपा र नारोपाका चरित्रमा बताए झैं पालन गर्नु पर्छ। अघि भारतवर्षमा गुरु तिलोपा र चेला नारोपा थिए। संक्षेपमा वहाँहरूको जीवन चरित्र यसप्रकार छ – नारोपा नालन्दा विश्वाविद्यालयका उत्तर ढोकाका पण्डित वा शिक्षक थिए। एक दिन वहाँलाई योगीनी देवीले मानिसको रूपमा दर्शन दिएर आज्ञा गर्नु भयो कि "यहाँ देखि उत्तर दिशामा एक सिद्ध पुरूष छ वहाँको नाम तिलोपा हो र तिमी त्यहाँ गएर उहाँकोबाट दीक्षा, ज्ञान लिए तिमी पनि चाँडै सिद्धि प्राप्त गर्नेछौं। पण्डित नारोपा पनि वहाँको वाणी अनुसार गुरु तिलोपाकहाँ जानुभयो। एउटा नदीको किनारमा गुरु तिलोपा माछा मार्दै अनि पोलेर खादै गरेको रहेछ, खाईसकेपछि माछाको हड्डी जम्मा गरी एक चुटकी बजाउँदा हड्डी आकाश तर्फ उड़ेर जाँदो रहेछ, यस्तो लीला गरेको देख्दा वहाँ नै तिलोपा रहेछ भनि उहाँकहाँ गएर म हजुरलाई गुरु थाप्छु भनि बिन्ती गर्दा, वहाँले म त केही जान्दिन भन्नु भयो। तरै पनि नारोपा उहाँसंगै



चैत्य र पुस्तक भतकाएको
पापको फल भोगेको



फलामा किट बिलएको नदी
छुवो रबमे नदी

## नरको चित्र

जसको विवरण भित्र बताएको छ।



अवीचि : बज्र नरकः



उत्पल ठण्डा नरक

बस्नुभयो। एक दिन दशतल्ला घरको छप्परमा गुरु तिलोपाले भन्नु भयो "धर्ममा कोशिष गर्नेले त यो दश तल्ला घरबाट हाम फाल्नुपर्छ।" यसो भन्दा नारोपाले यो त मलाई नै भन्नु भएको हो भनि त्यहाँबाट हाम फाल्नुभयो। गुरु तिलोपा तल आएर नारोपालाई सोध्नु भएछ, "कस्तो छ" भन्दा नारोपाले यो शरीर र लाशमा केही फरक छैन भनि भन्दा, गुरुले स्पर्श गर्दा अघिको दुःख सबै लुप्त वा जाति भयो। यस्तो प्रकारको महादुःख बाह्रवटा र सानु दुःख बाह्रवटा भोग्नु भयो। गुरुले चेलालाई एक अक्षर पनि सिकाउनु भएन। गुरुले जे आज्ञा गर्नु हुन्थ्यो दुःख नमानी खुशीसाथ आज्ञा पालन गर्नुभयो। यसरी गुरुका आज्ञा पालन गरी, गुरुलाई सधैं खुशी पार्ने उपाय गरी, कुनै दिन पनि गुरुले चेलालाई धर्म नसिकाई नै नारोपाले सिद्धि प्राप्त गर्नुभयो। गुरुको आज्ञा जस्तो भए पनि आफ्नो सुख सबै त्यागी, आज्ञा पालन गर्नुपर्छ। यहाँसम्म कि आफ्नो शिर, आफैले काट भने तापनि, आफ्नो छोरा र गुणकारी माता पिताको हत्या गर भने तापनि, हत्या गरेर मात्र होइन उनीहरूको मुटु कलेजो निकाल भन्ने आज्ञा गरे तापनि यी सब आज्ञा गर्नु भएको कारण सर्वप्राणी चाँड़ै मुक्ति गराउने उपाय हो भनी गुरुको आज्ञा हर्षसाथ पालन गर्नु पर्छ।

## गुरुको सेवा गर्ने विषय तीन प्रकारको छ।

### (१) प्रथम श्रेणीको सेवा गर्ने विषय :-

आफूले "गुरु बन्धन (सताधार)" को ठीक रूपले पालन गरी, गुरु संग झगड़ा नगरी, गुरुलाई कड़ा वचन नगरी, गुरु संग कहिले पनि झगड़ा रिस गर्नु हुँदैन। गुरुको चित्त अलिकति पनि दुःखाउने काम गर्नु हुँदैन। आफ्नो आँखा जसरी जोगाइन्छ सानु धुलो पनि पस्नु नदिई, त्यसरी

नै गुरुको आज्ञाको पालन गर्नुपर्छ। बैरागी मन र संसारको प्राणीको भलो र उपकार गर्ने बोधिचित्त यी दुइको मूल आधारमाथि पूण्य संचय गर्ने काम, पापको पश्चात्ताप गर्ने काम, देवताको पूजा उत्पन्नक्रम र सम्पन्नक्रम मेलैसित योगध्यान गर्ने इत्यादि ठीक ठीक रूपले अभ्यास गर्ने कोशिष गर्नु पर्छ।

## (२) दोस्रो श्रेणीको (मध्यम श्रेणी) सेवा गर्ने विषय

शरीर, मन र वचनको कारणले भएको दश अकुशल कर्म र पाप पश्चात्ताप गर्नुको उत्तम उपाय आफ्ना मूल गुरु स्वयं बुद्ध बज्रधारा हुन् भनि अटल विश्वास र श्रद्धाकोसाथ, आफ्नो शरीरले गुरुको सेवा भन्दा अरू कुनै उपाय ठूलो छैन। त्यसर्थ आफ्नो गुरुलाई सधैँ प्रसन्न राख्नुको लागि आफूले गुरुको सेवक हुने कोशिष गर्नुपर्छ। गुरुको दर्शन हुँदा वहाँको अनुहार सधैं हेररहुँ हुने, कहिले तृप्त नहुने। वहाँको वचन जति सुने पनि अझै सुनिरहुँ हुने, कहिले तृप्त नहुने, गुरुसँगै वर्षौ दिन बसे तापनि गुरुसँग अलग हुने इच्छा नगर्ने अझै गुरुसँगै बस्ने इच्छा हुने यस्तो प्रकारको गुरुप्रति श्रद्धा र भक्तिको आनन्द हुने सधैं हुनुपर्छ। गुरुको सामु बस्दा उत्ताउलो र छिल्लिएर बस्नु हुँदैन। खेल ठट्टा र असत्य बोली गर्नु हुँदैन। उहाँको सामू आफू रिसाएको कालो अनुहार पनि देखाउनु हुँदैन, उहाँलाई केही सोध्न परे श्रद्धा भक्तिपूर्वक, सम्मान, आदार गरी सोध्नुपर्छ। उहाँ आउनु हुँदा आफू झट्टै उठ्नु पर्छ, गुरुले आसानमा बसिसकेपछि, उहाँले मन पराउने रूचि भएको चिजहरू चढ़ाउनु पर्छ। गुरु कतै जानु हुँदा उहाँको सेवाको लागि सँगै जानुपर्छ। उहाँसँग जाँदा धेरै कुरा याद राख्नुपर्छ, गुरुको ठीक पछि पनि हिँड़नु हुँदैन कारण उहाँको पाइलाको छापसम्म पनि हामीले कुल्चिनु हुँदैन, यदि कुल्चिहाले हाम्रो पूण्य घटेर जान्छ, साथै

पाप पनि लाग्नेछ। फेरि हामी गुरुको दायाँपट्टि सँगै गए गुरु भन्दा हामी ठूलो भएको बुझिन्छ, कारण गुरुजन जहिले पनि बस्नु हुँदा दाहिनेपट्टि बस्नुहुन्छ, पंक्ति मिलाएर बस्दा पनि सबैभन्दा ठूलो गुरु दाहिनेपट्टि बस्नुहुन्छ, त्यसपछि सबै आफ्नो आफ्नो दर्जाअनुसार देब्रेपट्टि हुँदै बस्नु पर्छ। यसैले गर्दा हामी गुरुको दाहिनेपट्टि कहिले बस्नु हुँदैन हाम्रो पूण्य घटेर जान्छ। आफू गुरुको अघि पनि जानु हुँदैन, कारण आफ्नो पीठ गुरुलाई देखाएकोले यो कुलक्षण र अशुभ हुनेछ। यसकारण यी सबै कुरोको ध्यान राखेर आफू चाहिँ गुरुको देब्रेपट्टि अलिकति अघि पछि गरेर हिँड्नु पर्छ। कत्तै बाटो सानु छ भने, गुरुको आज्ञा लिएर कि अघि कि त पछि हिँडे पाप लाग्ने छैन, गुरुको आज्ञा लिनु जरूरी छ। गुरु घोड़ामा चढ्नु हुँदा, जुत्ता, वस्त्र लगाउनु हुँदा उहाँको छायाँसम्म पनि आफूले कुल्चिनु हुँदैन, कारण छायाँसम्म पनि कुल्चे आफ्नो पूण्य घट्नेछ। त्यसकारण वहाँको सेवा गर्दा चोखोसंग गर्नुपर्छ। गुरु घर भित्र बस्नु हुँदा वहाँलाई के के चाहिन्छ त्यस्तै त्यस्तै चीज ल्याएर उहाँको सेवा गर्नुपर्छ। उहाँलाई जे जस्तो चाहिन्छ त्यस्तै प्रकारले सेवा गर्नु पर्नेछ। बाहिरी काम, व्यापार गर्नु परे पनि, खेती किसानको काम गर्नु पठाए पनि या चौकीदारी वा रक्षक गर्नु भने पनि यी सबै गुरुको सेवा गरेको भनि दुःख नमानी हर्षसाथ गर्नुपर्छ। धर्मको काम बाहेक सांसारिक काम जस्तै घर बनाउनु लगाए पनि, देवल लगाउनु लगाए पनि, फेरि धर्मको काम गुम्बा, चैत्य र पूजाको निम्ति जे बनाउनु भने पनि, जस्तै साह्रो काम भए पनि गाह्रो नमानी खुशीसाथ गर्नु पर्छ, जस्तै गह्रौं भारी बोकाए पनि दुःख नमानी बोक्नु पर्छ। जस्तै ठूलो दुःख कष्ट गरे पनि, मैले गुरुको सेवा गर्दा यस्तो दुःख गरे उस्तो गरे भनि घमण्ड गर्नु हुँदैन। गुरुको सेवा गर्दा या कुनै काम गर्दा ज्याला या भाड़ा नदिए पनि ज्याला त परै जावस्, खानु निम्ति सानु तिलको दाना जति पनि खाना नदिए पनि लगाउने

लुगा एक टुक्रा नदिए पनि मनमा अलिकति पनि दुःख नमानी प्रसन्न हुनुपर्छ। गुरुसेवा गर्दा उहाँले हामीलाई केही नदिए पनि उहाँले हामीलाई धर्मको बाटो, मुक्तिको बाटो देखाउनु भएको गुण मनमा स्मरण गर्नुपर्छ। यस्तो ठूलो गुण गरेको सम्झी गुरुको सेवा गर्नु सधैं तत्पर हुनुपर्छ। शोक सुर्ता दुःख त्यागी भित्री हृदयले सधैं गुरुको सेवा गर्ने कोशिश गर्नुपर्छ। फेरि अरू पनि गुरुको धर्मपत्नी, छोरा छोरीहरूको सेवा र नोकरी गर्नुपर्छ, गुरुकहाँ आएका पहुनाहरू, उहाँका चेलाहरू भिक्षु भिक्षुनी वहाँका इष्टमित्र सबैको सेवा गर्नुपर्छ। आफ्नो गुरुले रूचाएका सबैजनालाई उहाँ सन्तुष्ट प्रसन्न हुने गरी सेवा गर्नुपर्छ। सबैलाई खाना, पिउने, लगाउने आदि चढ़ाएर उनीहरू प्रसन्न गराउनु पर्छ, यसो गर्दा गुरु प्रसन्न हुनुहुन्छ। गुरुको रूचि नभएको वस्तु या मन नपराउने मानिसको सेवा गर्नु हुँदैन, उहाँको रूचि नभएको सबै चिज मनमा ध्यान राख्नु पर्छ। गुरु के कसो गर्दा प्रसन्न, हर्षित हुन्छन्, सन्तुष्ट हुने काम आफूले विचार गरेर, विवेकले सेवा गर्नु पर्छ। फेरि राजाको कर तिर्नु परे जस्तो, करैले मात्र जबरजस्ती, आफ्नो इच्छा नभइ नभइ राजाको हुकुम भए जस्तो, मनमा दुःख मानेर, नगरी पनि नहुने गरौं पनि एक पैसा पनि नपाउने भन्ने यस्तो विचार लिएर गुरुको सेवा गरे आफूले पूण्य र राम्रो कर्मफल त पाउँदैन, सेवा गरेको व्यर्थै खेरो मात्र जान्छ। त्यसैले गर्दा यस्तो देखावटी, छलकपट नगरी गुरुप्रति ठूलो श्रद्धा र विश्वास गरी उहाँको सेवा प्रसन्न मनले गरे पूण्य र वहाँको आशिष आफूले पाउने छ।

उहिले तिब्बत देशमा **योगी मिला रेपा** हुनुहुन्थ्यो, उहाँले जस्तो गुरुको सेवा र आज्ञा पालन गर्नु पर्छ, उहाँले गुरुको सेवा र आज्ञा पालन गर्नु भएको छोटकरीमा यसप्रकार छ। गुरु जेचुन मर्पाले वहाँको पाप कटाउने उपाय गर्नु हुँदा, चेला मिला रेपालाई आफ्नो छोराका निम्ति दश

तल्ला घर बनाउने आज्ञा गर्नु भयो, त्यो पनि एक्लैले, ढुंगा बोक्नु पनि आफै, माटो बोक्नु, पानी बोक्नु पनि सबै आफै नै गर्नुपर्ने। घर बनाउँदा ढुंगा बोक्दा बोक्दा वहाँको पिठयूँमा र छात्तीमा ढुंगाले पिल्सिएर, घाऊ भई त्यसबाट रगत र पीप निस्के तापनि, आफ्नो कष्ट र दुःखको वास्ता नगरी यी सब गुरुले मेरै भलाईको निम्ति यस्तो पाप काटने उपाय गर्नु भएको सम्झी प्रसन्न मनले आफ्नो दुःख कष्ट सबै सहेर सहनशीलतापूर्वक गुरुका आज्ञा पालन गरी दश तल्ला घर बनाई एकै जीवनमा बुद्ध ज्ञान प्राप्त गर्नुभयो। यस्तो जीवन चरित्र हामीले पढ्नु पर्छ।

गुरुको धनसम्पत्ति अन्न खाद्य लगाउने लुगा एउटा सानो सियोदेखि लिएर सुन चाँदी बहुमूल्य वस्तुसम्म केही खेरो नजावस्, चोरी नहोस् भनि आफ्नो प्राण भन्दा ज्यादा ध्यान दिई रक्षा गर्नुपर्छ। गुरुको धन-सम्पत्ति, खाने खाद्य, वहाँको आज्ञा बिना खाए या चोरी गरेर खाए या आफ्नो अधीनमा पारे, आफूले भोग गरे ठूलो पाप लाग्नेछ। हामीले अरू साधारण मानिसको धनसम्पत्ति खाने कुरो खाए या चोरी गरे हामीलाई पाप त लाग्नेछ, झन गुरुको सम्पत्ति आदि खाए या चोरी गरे सय गुणा ज्यादा पाप लाग्नेछ। यसकारण गुरुको धन सम्पत्ति, अन्न आदिको रक्षा गर्नु पर्छ आफ्नो प्राणभन्दा पनि ज्यादा गरी। अघि अघिको समयमा कसै कसैले ता गुरुको घरको पानीसम्म पनि पिउँदैन थिए। यस्तो प्रकारले गुरुको सेवा गरेको वर्णन पाइन्छ।

## सबभन्दा निम्न वर्ग सेवा चाहिं धन सम्पत्ति आदि चढ़ाउने विषय :-

त्रिकालका समस्त भगवान् बुद्धगणका पूजा गरिएका फलभन्दा

पनि ठूलो महत्वपूर्ण फल पाइन्छ गुरुको एउटै रौ भएपनि पूजा गरेकोमा। उत्तम शुभकार्य, पूण्यसञ्चय, पूजा दान आदि गरेको फलभन्दा पनि यदि हामीले गुरुलाई अति प्रसन्न गराए भने महत्वपूर्ण फल पाइन्छ। गुरु प्रसन्न गराउनु जस्तो महत्वपूर्ण पूजा अरू कुनै पूजाको तुलना गर्नु सक्तैन। आफ्नो गुरु प्रसन्न भए या गराउनु जस्तो ठूलो पूजा अरू कुनै हुँदैन। आफ्नो धन सम्पत्ति सानो सियोदेखि लिएर ठूलोमा हाथीसम्म जे जति सम्पत्ति भए भरको योभन्दा अझै महान् आफ्नो शरीर स्वास्नी, छोरा, छोरी सब परिवार समेत, आफ्नो मनमा अलिकति पनि शोक र सुर्ता नमानि श्रद्धा र भक्ति मनले गुरुलाई चढ़ाउनु पर्छ। "तग तु ङु" नामक एक सिद्ध बोधिसत्व थिए। यसको अर्थ "सधैं रूने" हो। उहाँले आफ्नो गुरु छ्योफग नामक बोधिसत्वलाई गुरु दक्षिणा चढ़ाउनका लागि बजार हाटमा आफूलाई बेच्न जानुभयो, त्यहाँ आफ्नो शरीर किन्ने कोही भएन तर एक जना ब्राह्मणको रूप धारण गरी आएको व्यक्तिले खुट्टाको हड्डी भित्र भएको मासी बेच्ने हो भने म किन्ने छु भनी भन्दा उहाँले आफ्नो खुट्टाभित्रको मासी बेची, गुरुको सेवा गरेको वर्णन पाइन्छ। गुरुलाई आवश्यक भएको वस्तु उहाँले मन पराउने चिज आफ्नोमा नभए पनि कुनै प्रकारको उपाय गरी ल्याएर उहाँलाई चढ़ाउनु पर्छ। गुरु सन्तुष्ट गर्नका निम्ति आफूले कोशिश र कष्ट गरेर तर पाप नगरी उहाँलाई चाहिने चिजहरू चढ़ाउनु पर्छ। यसरी कष्ट गरी गुरूको सेवा गरे पुण्यको फल ठूलो पाइन्छ। समुद्रको पानी नापेर यति पानी छ भनि नाप्नुं सकिन्छ तर गुरुको सेवा गरेको फल यति हुन्छ भनेर भन्नु सक्तैनौं। अरू मानिसहरूलाई उपाय र प्रज्ञाद्वारा गुरुका शरीर, वचन र चित्तको गुण प्रशंसा गरी वर्णन र स्तुति गर्नु पर्छ। पूण्य कमाउने कर्म गरी, या पूण्य संचय गराउने मार्ग बताई सत् धर्मको मार्ग देखाउने कोशिश गर्नु अति उत्तम हो।

## गुरुले जस्तो लीला गरे तापनि सुदृष्टिले हेर्नु पर्ने विषय :-

आफ्नो गुरु प्रब्राजक, भिक्षु या तांत्रिक जे भए पनि, व्यापार औ सांसारिक काममा व्यस्त भई फुर्सद नपाउने भए पनि, मामला मुकद्दमा झगड़ा आदिमा खुशी मान्ने भए पनि, चोरी गर्ने भए पनि मद मदिरा पिउने भए पनि सय मानिस एकै चोटि मार्ने भए पनि स्त्री सम्भोग गर्ने चरित्रहीन भए पनि, झूट बोल्ने भए पनि कुकर्म मात्र गर्ने भए पनि गुरुप्रति कुदृष्टिको विचारको छायासम्म पनि लिनु हुँदैन। गुरुको चाल चलन चरित्र जस्तै भए तापनि, चरित्रहीन भए पनि नराम्रो नजरले कहिले हेर्नु हुँदैन। उदाहरण – यसप्रकार छ। तिब्बत देशमा एकजना आर्य सोङ्चेन गम्पो नामक राजाले राज गर्थे। त्यस समय तिब्बत का मानिसहरूले कानून भनेको जानेका थिएनन्। उनीहरूलाई सभ्य गराउनका निम्ति कानुन सिकाउनका लागि दश कुशल धर्म र दश अकुशल पाप हो भनी बताउनका निम्ति राजाले आफ्नो शक्तिको बलले जादु जस्तो गरी जादुकै माया जाल जस्तो मान्छेहरू सृष्टि गरी उनीहरू एक अर्कामा एकले अर्कोलाई मार्‍यो, अनि फेरि त्यस हत्यारालाई कानुन अनुसार सजाय दिन्थे, चोरी गरेको जस्तो देखाई फेरि त्यस्तै प्रकारको सजाय दिने गर्थे। कसुरदारलाई आफ्नो कसुर अनुसार सजाय दिने गर्थे। कसैको टाउको नै काटि दिने कसैलाई चाहिँ फाँसी दिने, कसैको हात खुट्टा काटिदिने, आँखासम्म पनि निकालिदिने, मुटु आदि निकाल्ने गर्थे। यस्तो प्रकारको लीला गरेर मानिसको लाश थुपारेर आफ्नो जनतालाई देखाउँथे। थरी थरीको कसुर पाप आदि माया जाल जस्तो गर्दै सजाय दिने गर्थे। वास्तवमा ती सबै मायाजाल मात्र गर्थे यस्तै प्रकारले आफ्नो जनताहरूको भलाईको निम्ति अनि सभ्य मार्गमा ल्याउनका उत्तम उपाय गर्नु भएको इतिहासमा वर्णन पाइन्छ। यस्तै प्रकारले आफ्नो गुरुले

आफ्नो चलन नराम्रो कुबानी गर्नु भएको हामीलाई शिक्षा दिनका लागि यस्तो प्रकारको उत्तम उपाय र लीला गर्नु भएको हो भनि सम्फनु पर्छ। जसरी हामीले अरू मान्छे अथवा गुरु आफैले जुनै नराम्रो गरेको चोरेको, नराम्रो चरित्र भएको मन पर्दैन। हाम्रो आफ्नो दोष र अवगुण आफैले त देख्न सक्दैनौं त्यसकारण आफ्नो गुरुले हाम्रो निम्ति यस्तो राम्रो नराम्रो लीला गर्नु भएको हो। यी अवगुण र दोष, देखाउनका लागि यस्तो उपाय गर्नु भएको हो। यस्तो प्रकारको उपायको लीला चाहिँ बुद्ध र बोधिसत्वहरूले लीला गर्नु भएको भन्दा पनि उच्च र महान् हो। यस्तो प्रकारले शिक्षा दिने गुरुप्रति हाम्रो नराम्रो भावना, दुर्गुणको गन्धसम्म पनि हटाएर सुगुणको भावना मनमा लिनु पर्दछ। यस्तो भावना लिई गुरुप्रति आफ्नो श्रद्धा, भक्ति र विश्वास विशाल रूपले बढ़ाउने कोशिश गर्नुपर्छ। गुरुका रीस, राग, द्वेष, अंहकार, अशुद्धता, भूल, नराम्रो गुण जस्तै देखिए तापनि यी सब अवगुण पाँच क्लेश आदि आफूभित्र छ र यी अवगुण सबै त्याग्नु पर्छ भन्ने इशारा गर्दै गुरुले धर्म उपदेश दिनु भएका हुन भनी बुझ्नुपर्छ। जस्तै मलेरिया रोग भएको कारणले हिम पर्वत पनि निलो देखिन्छ, पित्त रोगको कारणले सेतो शंख पनि पहलो देखिन्छ। हिमाल सेतो छ तर आफू भित्र भएको रोगको कारणले गर्दा हिमाल निलो देखिए भैं, शंख सेतो छ तर आफ्नो भित्र पित्त रोगको कारणले पहलो देखे भैं औ त्यस्तै गरी आफ्नो भित्र, पाप, क्लेश, द्वेष, अंहकार, राग रीस, अज्ञानता मोह इत्यादि अवगुण भएको कारणले आफ्नो गुरु र अरू मानिसको दोष देखिएको मात्र हो। वास्तवमा गुरु वा अरू मानिसको दोष र अवगुण केही छैन आफ्नो अवगुणको कारणले गर्दा अरूको अवगुण देखिएको मात्र हो, जस्तै आफू भलो त जगत् भलो भन्ने उखान पनि छ। आफू राम्रो भए सबैलाई राम्रै देखिन्छ, आफू चोर भए अरूलाई पनि चोर नै देख्छ, आफू मूर्ख भए

अरूलाई पनि मूर्ख नै देख्छ। त्यसकारण गुरुले जे जसो गर्नु भए तापनि उहाँको द्वेष, दोष अवगुण होइन तर आफूभित्र भएको द्वन्द्व, क्लेश,पाप र अवगुणको कारणले भएको हो भनि बुझ्नु पर्छ। गुरु रिसाएर, गाली गरे हिर्काए आफ्नो धनसम्पत्ति सबै अधिकार गरी लुटे तापनि आफूले नोक्सान खप्नु परे, विना दोषमा दण्ड भोग्नु परे या आफूले कष्ट धेरै सहन परे तापनि गुरुलाई कुवचन गर्नु हुँदैन। गुरुले यसो ग गे त्य .. गऱ्यो भनि उहाँको निन्दा गर्नु हुँदैन् गुरुमाथि कुदृष्टिको भावना एकै क्षण पनि राख्नु हुँदैन। गुरुले हामीलाई कष्ट दिएको हाम्रो कुकर्म र पाप चाड़ै पखालिने पश्चाताप गराउने उत्तम उपाय गर्नु भएको हो। कारण कुकर्म र पापको कारणले हामी अर्को जन्ममा दुर्गति भएर नरकमा प्रेत र पशुको जन्म लिनेछौं। त्यसैकारण हामीमाथि गुरुको महाकरूणाको दया लिएर दुर्गतिको मार्ग बन्द गर्ने उत्तम उपाय गर्नु भएको हो भनी बुझ्नु पर्छ।

## गुरुका बचन सबै सत्य हुन भन्ने विषय :-

सांसारिक व्यवहारिक शब्द प्रयोग गरी सबै कुरो उल्टा भने पनि दिनलाई रात हो रातलाई दिन हो भने तापनि धरतीलाई आकाश हो आकाशलाई धरती हो भने तापनि आगोलाई पानी हो पानीलाई आगो हो भने तापनि देवतालाई मार हो मारलाई देवता हो भने तापनि, यस्तो प्रकारले सबै कुरो नै उल्टा भने तापनि आफ्नो गुरु स्वयं त्रिकालको बुद्ध हो, उहाँले तीनै काल भूतकाल, वर्तमानकाल र भष्यिकाल सबै नै जान्दछन्, सर्वज्ञ हुनुहुन्छ गुरुले उल्टा बताउनु भएको होइन उहाँको बचन साँचो हो भनि जान्नु पर्छ। अन्धाले जसरी केही देख्दैन त्यसरी नै आफूमा अविद्या भएको कारणले गर्दा अज्ञनतामा परेर यी सब आफैले भूल या उल्टा देखेको हो, यी सब आफ्नै भूल हो भनि सम्झी गुरुले जे जसो भने तापनि

उहाँको भूल होइन आफ्नै भूल हो भनि बुझ्नुपर्छ। सबै भूल आफ्नै नै रहेछ भनि बुझ्नुपर्छ। गुरुले अधर्मकै प्रवचन भने तापनि वा पाप कर्म बताए पनि आफूले श्रद्धा र विश्वास गरी गुरुको वचन पालन गरे, आफूले सत्यज्ञान पाउन सकिन्छ। यस्तो प्रकारले बुद्धज्ञान प्राप्त गरेको अघि भारत वर्ष र तिब्बत देशमा धेरै वर्णन गरिएको पढ्न पाउछौं। ...म्नै अगुंलीमालाले आफ्नो गुरुको वचन सत्य हो भनी गुरुले उसलाई एक हजार मान्छे मार र तिमीलाई म सत्यज्ञान दिन्छु र तिमीले बुद्धज्ञान पाउनेछौं भन्दा, अंगुलीमालाले नौ सय निनानब्बे मान्छे मारे तापनि उहाँले गुरुको वचनको कारणले हत्या गरेको पाप नलागेर बुद्धज्ञान प्राप्त गर्नु भयो। तसर्थ गुरुले जे जसो आज्ञा गर्नु भए तापनि सत्य धर्म हो भनि श्रद्धा र विश्वास गरी आज्ञा पालन गर्नु नै उत्तम धर्म हो।

## गुरुबाट जे जति ज्ञान पाए तापनि उहाँ प्रति कस्तो प्रकारको श्रद्धा र विश्वास राख्नु पर्ने विषय :-

आफूलाई मूल गुरुले तीन मुख्य ज्ञान दिन्छन्

(१) प्रथम आफूलाई अभिषेक (वाङ) गर्छन्

(२) (लुङ) मंत्रणा दिन्छन् यो उपदेश भगवान् बुद्धबाट नटुटी, लगातार एकदेखि अर्कोलाई उपदेश दिदैं र लिंदै आएको लगातार उपदेश र मंत्रको धारा हो। यस्तो प्रकारले गुरु र चेला हुँदै अटुट लगातार धारालाई "लुङ" भन्दछन्। यस्तो धारा कि हिमाल पर्वतदेखि बगेर आएको पानीको धारा तल समुद्र नपुगेसम्म लगातार हुन्छ त्यस्तै अटुट धाराको अति जरूरत हुन्छ ज्ञान पाउनका निम्ति। यस्तो प्रकारको मंत्रणा जसलाई गुरु मंत्र पनि भन्दछ, आफ्नो मुख्य मूल गुरुले उपदेश

र मंत्र दीक्षा दिन्छन्।

(३) धर्म ग्रन्थको सिद्धान्त आदि कुराको तात्पर्य अर्थ स्पष्ट बुझाउने लाई "ठि" भन्दछन्। धर्म ग्रन्थको सिद्धान्तको गम्भीर अर्थ स्पष्ट गरी बुझाउने काम आफ्नो मूल गुरुले गर्दछन्।

यस बाहेक अरू कुनै गुरुबाट अभिषेक दीक्षा व्यहारिक विद्या, धर्म शास्त्रको ज्ञान जुनै लिए तापनि उहाँहरू सबैलाई भगवान् बुद्धकै स्वयं अवतार हुन भनी श्रद्धा र विश्वास गर्नुपर्छ। गुरुका उपदेश एकै अक्षर सुने तापनि गुरुप्रति संस्कार अथवा उहाँप्रति विचार र भावना राम्रो नभए, सयपल्ट कुकुरको जन्म लिनु पर्छ, त्यसपछि वेश्या स्त्रीको जन्म लिनु पर्छ भन्ने आज्ञा गर्नुभएको छ। बालक अवस्थामा क, ख अक्षर आदि चिनाउने र सिकाउने गुरुसम्मलाई पनि उल्टा विचार र दृष्टिले हेरि अविश्वास गऱ्यो भने आफूले जति कोशिष गरेर ध्यान समाधि तपस्या जे गरे तापनि बुद्धज्ञानको फल प्राप्त गर्नु सक्तैन भनि ठूला ठूला ग्रन्थमा वर्णन गरिको छ।

## गुरुको चित्त दुखाएको फल र पश्चात्ताप गर्ने विधि विषय :-

भव (संसार) र निर्वाण धातुमा पुऱ्याउनको निम्ति गुरुको आज्ञा जस्तो शक्तिशाली अरू कसैको आज्ञा वा वचन छैन। गुरु खुशी भए सबै बुद्ध प्रसन्नभई कुनै पनि कर्म क्लेशले बिगार्नु सक्दैन। अनि आफ्ना ज्ञान र शक्ति बड़ेर गम्भीर द्वन्द्वात्मक ज्ञानको सिद्ध पाउन टाड़ा हुने छैन। कतै आफ्नो शरीर वचन र चित्त (मन) द्वारा भूल भएर गुरुको मन दुखायो भने, दशौ दिशाका बुद्धहरूका प्रतिज्ञा भंग भई आफूलाई अनगिन्ती महापाप

लाग्नेछ। यसरी आफूले भूल गरे गुरुका चित्त दुःखाए यो जीवनमा पनि आयु छोटो हुनेछ, धेरै रोग कष्ट लाग्ने छ, अशुभ हुनेछ। परलोकमा पनि असाध्य दुःख भोग्न पर्ने बज्रनरकमा जन्म लिनु पर्नेछ अनि कहिले मुक्ति हुने छैन। यसरी गल्ती कसूर गरेको खण्डमा गुरु सामू क्षमा माग्नु पर्छ। यदि क्षमा नमागे यस्तो प्रकारको बज्रनरकबाट, दुःख र कष्टबाट मुक्ति हुन गाह्रो पर्छ। त्यसर्थ गुरुका सामू भूल स्वीकार गरी क्षमा माग्नु उत्तम र मूल कुरा हो। प्रतिमोक्ष सुत्र बोधिचित्त वा तांत्रिक सम्बन्धित सबैको प्रतिज्ञा भंग भए वा शीलमा कुनै प्रकारको भूल भए आफ्ना गुरुलाई पश्चातापसहित माफ मांगे भूल जे भए तापनि सबै शुद्ध भएर माफ पाउने छ। आफ्नो गुरुसंग प्रतिज्ञा वन्धन भंग भए या कुनै भूल भए या झगड़ा भए अर्को गुरुकहाँ गएर क्षमा माग्न पाउने छैन। जसरी भूइँमा लड़ेको खाँबो उठाउन परे भूइँमा नटेकाई उठाउने उपाय नै छैन, त्यस्तै गरी एक गुरुका चित्त नपर्ने भूल गरी, झगड़ा गरी अर्को गुरुकहाँ गएर कसरी क्षमा पाउँछ र ? जुन गुरुसंग प्रतिज्ञा बन्धन भूल भएको छ वा जोसँग झगड़ा भएको छ वहाँका सामु नै पश्चाताप गरी क्षमा माग्नु पर्नेछ अनि मात्र क्षमा पाउने छ। आफ्नो गुरुको निन्दा गर्ने गुरुसँग रिस गर्ने, इर्ष्या तथा द्वेष गर्ने, उहाँलाई विश्वास नगर्ने गुरुप्रति कुदृष्टिले हेर्ने मानिसको संगत एकक्षण पनि गर्नु हुँदैन अनि यस्तो संगत त्याग्नु पर्छ। यसरी नै बुद्धत्व प्राप्त गर्ने मूल प्राण मार्ग आफ्नो गुरुलाई मान्नु पर्छ। अरू गुरूहरूका महिमा र लीलाको विषय जीवन कथा, अरू ग्रन्थहरू पनि पढ्नु र अध्ययन गर्नुपर्छ। यस्तै प्रकारको धेरै ग्रन्थहरू पढेर केलाउँदै प्रेमपूर्वक सारगर्भको धारणा लिई ग्रन्थमा बताए अनुसार गुरुका वचन र आज्ञा पालन गर्नुपर्छ। यो जीवनदेखि जन्म जन्मान्तर आफ्ना गुरुसँग नछुटिने प्रार्थना गर्नुपर्छ। उपरोक्त तीन प्रकारले उहाँका सेवा गरी गुरुलाई प्रसन्न गरी उहाँका बाहिरी भित्री

र अभ्यन्तर आशिष र ज्ञान गुण सबै कुनै पनि बाँकी नरही आफूले प्राप्त होस भनि प्रार्थना गर्नुपर्छ।

## क्षण सम्पदीय जीवन प्राप्त गरिने विषय :-

### १. स्वभाविकताबाट पनि मानव जीवन पाउन कठिनको विषयः-

अघि पूर्वजन्ममा लाखौं करोडौं राम्रो पूण्य संचय गरेको कारणले अहिले हामीले यो मानव जीवन प्राप्त भएको हो। यस्तो मानव जीवन बाहेक अरू पनि जीवन धेरै छ जसले चाहिँ धर्म गर्नु पूण्य गर्नु भलो चिताउने कर्म गर्न सक्तैन् तिनीहरू चाहिँ नरकलोक, प्रेतलोक, पशुलोक, असुरलोक, देवलोक हुन्। मनुष्यलोकमा जन्म लिए तापनि इन्द्रिय पूरा नभएको लाटा, लाटी कुकर्म गर्ने हत्या या प्राणी हत्या गरी धर्म हुन्छ भन्ने उल्टा भावना भएको मानव, या ता नास्तिकको विचार भएको मानव अनि भंगवान् बुद्धको धर्मको शासन सकिएको समयमा जन्म भए त्यस व्यक्तिले पनि धर्म गर्नु सक्दैन। यस्तो नराम्रो जन्मबाट मुक्ति भएर राम्रो कर्म गर्नु सक्ने विवेकशील जन्म पाए यस्तो मानव जन्मलाई अष्ट सम्पत्तिले युक्त भएको भन्दछ। यस्तो नराम्रो लोक जस्तै नरक प्रेत आदि लोकमा जन्म भए धर्म गर्नु सक्तैन कारण यस प्रकारको दुःख छ।

### २. नरक लोक :-

यस लोकमा जन्म लिए हामीले धर्म गर्न पाउँदैनौं कारण दुःखै दुःख मात्र छ, नरक लोक जम्मा अठार (१८) वटा छ। आठ वटा गरम आगोमा जलाउने, तेलमा पोल्नेको दुःख भोग्नु पर्छ, आठ वटा ठण्डा अति

जाड़ो शरीरमा एउटै लुगा हुँदैन तरै पनि हिऊँ वरफ भित्र जन्म लिनु पर्नेको दुःख हुन्छ। रात दिन गर्मी र जाड़ोको दुःख खप्नु र भोग्नु पर्ने हुनाले धर्म गर्नु एक सेकेण्डको फूर्सद हुँदैन।

## ३. प्रेत लोक :-

यस लोकमा जन्म भएको प्राणी सधैँ नै भोक र प्यास (तिर्खा) को दुःख छ। दिन र रात खाना नपाएर पानी नपाएर भोक र तिर्खाको कारणले खाना र पानी कहाँ पाउँछ भनि दिन र रात मन यस्तै चित्त भंग रहेको कारणले धर्म गर्न एक क्षण पनि फुर्सद पाउँदैन।

## ४. पशुलोकको दुःख :-

पशु लोकमा जन्म भएको प्राणी अज्ञानतामा परेको कारणले राम्रो र नराम्रो कर्म छुटाउने विवेक र चेतना हुँदैन। राम्रो कर्म गरे सुख पाउँछ नराम्रो कर्म गरे दुःख पाउँछ भन्ने विवेक पनि हुँदैन, खानुसम्म भए हुने बोल्न पनि नसक्ने यस्तै कतिपय कारणले गर्दा धर्म गर्नु सक्दैन।

## ५. दीर्घजीवी देवलोक :-

यस लोकमा जन्म लिईसकेपछि धर्म गर्ने विचार हुँदैन। अघि पूर्वजन्ममा राम्रो पूण्य गरेको कारणले अहिले अति सुखमय जीवन प्राप्त भएको हो। यति सुख र आनन्दमय जीवन एकक्षण पनि दुःखको अनुभव गर्नु पर्नेछैन। यस्तो आनन्द र सुखको भोक कल्प कल्पसम्म लामो आयु लिई बाँच्नु पर्नेछ, प्रथम कर्मको समाधि देखि नछुट्टिनेसम्म सबै देवहरू चेतनाहीन रहनु पर्छ, यसरी अटल समाधिमा रहेको कारणले धर्म गर्ने मन हुँदैन।

### ६. म्लेच्छ वा असभ्य देश :-

मानव जीवन पाए तापनि असभ्य वा म्लेच्छ देशमा जन्म लिए, त्यस देशमा प्राणीको हत्या गरेर भगवान्‌लाई चढ़ाएर धर्म हुन्छ भन्ने प्रथा र रीति हुन्छ। यस्तो हिंसा गरेर धर्म हुन्छ भन्ने विचार गरे राम्रो धर्म गर्नु सक्दैन। अहिंसा परमो धर्म भन्ने धर्म नगरी, हिंसा गरी धर्म कहाँ गर्नु सकिन्छ ? यस्तो देशमा जन्म लिए धर्म गर्नु सक्दैन।

### ७. नास्तिक :-

मान्छेको जन्म लिए तापनि विचार नास्तिक भए त्यस व्यक्तिले पनि धर्म गर्नु सक्दैन। कर्मफलको विश्वास नगर्ने नास्तिक हो।

### ७. लाटो :-

मान्छेको जन्म पाए तापनि बोल्न नस्कने, सुन्न नसक्ने, बोले तापनि ठीक रूपले बोल्न नस्कने बोली लाग्ने भए पनि मनको लाटो, विवेक र चेतना नभएको कारणले धर्म गर्न सक्दैन।

### ८. बुद्ध धर्मको शासन नभएको :-

मान्छे भएर जन्म लिए तापनि भगवान् बुद्धको धर्मशासन सकिएको, पछिको बुद्ध पनि नआएको यस्तो धर्म रित्तो भएको समयमा जन्म लिए धर्म नभएको कारणले धर्म बुझ्न र सुन्न पनि पाउँदैन र धर्म गर्नु सक्दैन। यस आठ जन्मलाई अष्टावक्षणा भन्दछ। यी माथि बताएको आठवटा जन्म अशुभ या लक्षण नभएको हो र यी आठ जन्मबाटा मुक्ति छ भने अष्ट सम्पत्तिको युक्त भएको जीवन भन्दछ।

यस्तो अलक्षण जन्मदेखि मुक्त भएको अठार (१८) लक्षणले युक्त भएको जीवन पाउन अति कठिन हुन्छ। यस्तो अमूल्य मानव जीवन धर्म गर्नु पनि पाउने अति उत्तम जीवन तर पनि हामी आफैले हामीमा १८ लक्षण छ या छैन विचार गर्नु पर्छ। अठार लक्षण मध्ये आठवटा माथि बताएको हो र बाँकी दशवटा यस प्रकार छ।

अरू दश लक्षण मध्ये पाँच लक्षण आफूमा हुनु पर्ने हो।

१) अष्ट अलक्षण जन्मबाट मुक्ति भएर धर्म गर्ने मानव जीवन पाएको।

२) हाम्रो जन्म धर्म भएको देशमा भएको।

३) शरीरको सबै अंग पुरा भएको पञ्च इन्द्रिय पूर्ण भएको हुनु पर्छ, अन्धा, बैरा यस्तो कुनै नभएको कारण अन्धा भए पनि धर्म गर्नु सक्ने छैन इत्यादि।

४) आफ्नो मन पनि धर्ममा श्रद्धा भएको हुनु पर्छ। धर्ममा श्रद्धा र विश्वास छैन भने धर्म गर्ने मन हुने छैन।

५) कुनै कुकर्मबाट रहित भएको जस्तै आमा, बाबु, अर्हत, धर्म गुरुको हत्या गरेको हुनु हुँदैन। भगवान्‌को प्रतिमा नष्ट गरेको पनि हुनु हुँदैन। यी मध्ये कुनै एक नराम्रो कर्म गरे भिक्षुको शील पाउने छैन।

यी पाँच गुण आफूमा छ र पछि आफूले यस्तो कुनै नराम्रो कर्म गर्छ गर्दैन त्यो आफूले विचार गर्नुपर्छ। यी पाँच गुण आफूमा छ भने पञ्च गुणले युक्त भएको मानव जीवन भन्दछ अघिको आठ लक्षण र पाँच लक्षण गरेर जन्मा तेह्र लक्षणले युक्त भएको मानव जीवन भन्दछ।

## अर्को पाँच शुभ लक्षण अरूबाट युक्त हुनु पर्ने विषय :-

१) भगवान् बुद्ध यस संसारमा जन्म लिनु भएको समयमा हामी जन्म लिनु पर्ने या भएको।

२) भगवान् बुद्ध संसारमा आउनु भएर पनि फेरि धर्म दिनु या धर्म चक्र परिवर्तन गर्नु भएन भने पनि नहुने। यसकारण हामी धर्म चक्र परिवर्तन भएको समयमा जन्म लिनु या भएको हुनुपर्छ।

३) धर्म शासन पनि भएको देशमा जन्म भएको हुनु पर्दछ। यो भारतवर्ष देश धर्मको दृष्टिमा अति महत्वपूर्ण भूमि हो, कारण यहाँ भगवान् बुद्धले बुद्धज्ञान प्राप्त गर्नु भएको हो, ज्ञान प्राप्त गरेर धर्म चक्र परिवर्तन पनि गर्नु भएको हो। अहिले बुद्ध धर्मको शासनको आयु पनि भएको। शासनको आयु भन्नुको अर्थ (मतलब) एक दिन धर्महीन हुने समय पनि आउँछ र बौद्ध शासनको आयु पाँच हजार वर्ष तोकिका छन् स्वयं भगवान् बुद्धले। अहिले बौद्ध शासन लगभग दुइ हजार सात सय बितिसक्यो। यसकारण धर्म शासन भएको समयमा जन्म हुनु पर्ने हुनाले हामी यस्तो समयमा जन्मनु पर्ने।

४) यस्तो समयमा आफू पनि बौद्ध धर्ममा लागेको हुन पर्छ, लागेर मात्र हुँदैन तर पालन पनि गर्नु पर्छ। सत्य धर्म गर्ने मन पनि हुनु पर्छ।

५) यी माथिका चारवटा लक्षण सबै युक्त भएर मात्र हुँदैन आफूलाई सत्य धर्मको मार्ग देखाउने गुरू पनि चाहिन्छ। गुरु भन्दैमा आँखा चिम गरेर गुरु मान्नु पनि भएन, गुरुले सत्य ज्ञान दिनु सक्छ वा सक्दैन आफूले विचार गर्नुपर्छ। सत्य ज्ञान दिन सक्ने सार्थक गुरुबाट दीक्षा या ज्ञान लिनु

पर्दछ । सत धर्म गुरुबाट ज्ञान पाउन सके अरूबाट पाउनु पर्ने पाँच शुभ लक्षण पनि पुरा हुन्छ ।

यसरी जम्मा अठार (१८) वटा लक्षण पुरा हुन्छ । तसर्थ अघि पूर्वजन्मको राम्रो कर्मको फलको कारणले आठ लक्षण पनि आफूमा भएको । पाँच शुभ गुण र लक्षण पनि भएको अनि अरूबाट पाउने पाँच शुभ लक्षण पनि पुर्ण भए जम्मा (१८) अठार लक्षणले युक्त भएकोलाई अमूल्य मानव जीवन भन्दछ । यस्तो मणीभन्दा पनि बहुमुल्य मानव जीवन पाएको समयमा हामीले धर्म गर्नु सकेनौ भने, अन्धा मान्छे र घाम जस्तो हुन्छ । अन्धा भए उसलाई घाम लागेको र नलागेको केही फरक पर्दैन । आँखाले त देख्न सक्दैन । उसको लागि घाम भएको र नभएको केही फरक पर्दैन ।

यस्तो अठार लक्षणले युक्त भएको बहुमूल्य जीवन, एकै छिनको छोटो क्षणिक सपना जस्तो, पानीको तरंग जस्तो, अहिले छ तर भरै छैन । यस्तो वहुमूल्य जीवन पाएको बेला सांसारिक रंगीचंगीमा नै भुलेर जीवन त्यसै खेरो फाले नष्ट गरे, यस संसारको बहुमूल्य सुन असंख्य दाम तिरेर किनेको सुन मैला फोहोर टट्टीमा फ्याँकिएको जस्तो हुन्छ । सुन पाएर पनि मैलामा फ्याँकिदिए त्यस सुनको महत्व नै केही भएन त्यस्तै गरी बहुमूल्य ज़ीवन पाएर पनि धर्म नगरी त्यसै खेरो फाले मानव जीवन पाएको अर्थ हिन हुनेछ ।

अठार लक्षण पुरा नभई बुद्धज्ञान या मुक्ति पाउन सक्दैन । अठार लक्षण मध्ये एउटै पनि अधुरो भए मुक्ति पाउन कठिन पर्छ जस्तै उदाहरण :- कुनै यात्री बाटामा जाँदा चिया पिउने इच्छा भएछ, उसकोमा चियापत्ति, चिनी, भाँड़ा, पानी, दाउरा सबै रहेछ तर आगो सल्काउने माचिस (सलाई) छैन रहेछ त्यस कारणले गर्दा एक गिलास चिया पिउनु पाएन । त्यस्तै गरी

कुनै एक शुभ लक्षण नभए मुक्ति पाउन सक्दैन।

## प्रमाणबाट पनि यो मानव जीवन पाउन कठिनको विषय :-

बुद्धत्व प्राप्त गर्न सक्ने ज्ञान जो अहिले हामीले सुन्न र बुझ्न पाउँछौं त्यो ज्ञान चाहिँ भगवान् बुद्ध स्वयंले दुःख कष्ट गरि प्राप्त गर्न भएको हो अरू प्राणीको कल्याण र हीतको निम्ति। सर्व प्राणी यो दुःखमय संसारबाट मुक्ति गराउन र सुखमय भवनमा पुऱ्याउनको निम्ति भगवान् स्वयंले दुःख र कष्ट गर्नु भएको हो। जस्तै आफ्नो माता र पिताले आफूले दुःख कष्ट सहेर नखाई नखाई धनसम्पति आफ्नो छोरा छोरीको निम्ति जोगाड़ गर्छन्। उहाँहरूले हाम्रो छोरा छोरीले दुःख कष्ट नपावस्, सुख पावस् भन्ने विचारले आफ्नो सन्तानको निम्ति धन सम्पत्ति कमाउँछन्। त्यस्तै गरी भगवान्को विचार पनि त्यस्तै हो। यसरी यो मानव जीवन देव जीवन भन्दा पनि उच्च जन्म हो। कारण देव जीवन देखि मुक्ति पाउन सक्दैन। देव जीवनमा अघिको राम्रो पूण्य गरेको कारणले गर्दा सुखै सुख छ र सुख भएको कारणले धर्म गर्नु मन आउँदैन र मुक्ति पाउन सक्दैन। मानव जीवनमा दुःख-सुख दुवै छ र धर्म गर्नु सक्ने, बुझ्न सक्ने जीवन हो। अनि धर्म गरेर मुक्ति पाउन सक्ने जीवन भएको कारणले उत्तम जीवन भनिएको हो। देव जीवन र मानव जीवनमा धेरै फरक छ। जस्तो कि कालो र सेतोमा जतिको फरक छ त्यतिको फरक पर्छ।

यो मानव जीवन परम अर्थ सिद्धि गर्नु सक्ने जीवन हो। यस्तो उत्तम जीवन पाउन अति कठिन र दुर्लभ छ, उदुंवारा फूल जस्तै दुर्लभ हो। उदुंवारा फूलको प्रमाण राखिएको कारण यो उदुंवारा फूल भगवान् बुद्ध र

चक्रवर्ती राजा यस संसारमा जन्म हुँदा मात्र उहाँहरूको पूण्यले गर्दा मात्र संसारमा उम्रेर फूल फुल्छ अरू बेला यस संसारमा हुँदैन र मानव जीवन पनि करौडौं लाखौं पूण्य गरेको कारणले मात्र मानव जीवन पाउँछ फेरि फेरि मानव जीवन पाउन दुर्लभको कुरो हो । त्यसकारणले भगवान् बुद्धले यस मानव जीवनको प्रमाण उदुंवारा फूलसित तुलना गर्नु भएको हो। चिल्लो ऐनाको भित्तामा मटरको दाना छरि दिए, ऐनामा टाँसिनु सक्दैन तर कुनै जादु या शक्तिले मटरको दाना एकै क्षण पनि टाँसिनु सक्ला, तर त्यो भन्दा दुर्लभ र कठिन पर्छ मानव जीवन पाउन।

यस्तो दुर्लभ मानव जीवन अहिले मात्र पाएको हो पछि फेरि यस्तो बहुमूल्य जीवन कहाँ पाइन्छ र ? मटर ऐनामा टाँसिनु त असम्भव हो तरै पनि असम्भव सम्भव हुन सक्ला, त्यति सजिलो यो मानव जीवन पाउन सक्दैन।

## गन्तीबाट पनि यो मानव जीवन पाउनु कठिनको विषय :-

महादेशका राजाका जनताहरू जम्मा गरेर एकपट्टि राखेर अर्कोपट्टि चाहिँ एउटा कमिलाको गुँड़मा जति कमिला छ, यी दुइमा तुलना गरे, एउटै गुँड़को कमिलाको बराबर हुँदैन। राजाका जनताहरू गन्ती गर्नु सकिन्छ तर कमिलाको गन्ती गर्नु सकिन्दैन। त्यस्तै गरी सारा संसारका मानिसहरू गन्ती गर्न सकिन्छ। गन्ती गर्नु असम्भव हुँदैन।

दुर्गतिको जीवन लिएर जन्म भएकोमा पशुसम्मको मात्र विचार गर्दा वर्षा कालको समयमा एउटै पोखरीको पानीभित्र भएको कीरा फटेंग्राको संख्या यति छ भन्ने बताउनु सकिँदैन, झन प्रेत र नरकलोकमा भएका

प्राणीहरू यति छ भनेर भन्नु सक्दैन, अन्दाज कसरी गर्न सकिन्छ ? दुर्गतिमा जन्मेका प्राणीहरू पृथ्वीमा जति माटो र ढुंगा छ त्यति नै छ। नरकलोकमा जन्मिएका प्राणीहरू पृथ्वीमा जति माटो र ढुंगा छ त्यति नै छ। प्रेतलोकमा नदीको किनारको बालुवा बराबर छ। असुरहरूले निशा (छयाङ) खाएर फ्याँकिको छोक्रा बराबर पशु प्राणी छ। मानवजीवन र देवजीवन हाम्रो नङ माथिको धुलो बराबर छ। यसरी संख्या र गन्ती गर्दा सबैभन्दा कम्ती संख्या भएको यो मानव जीवन यी सबै भगवान् बुद्धले वाणीमा बताउनु भएको छ। यस्तो बहुमूल्य मानव जीवन प्रमाण र गन्ती बाट पनि पाउन कठिन रहेछ, यस्तो दुर्लभसंग प्राप्त भएको बहुमूल्य हाम्रो यो मानव जीवन रहेछ भनि आफूले घरि घरि विचार गर्नुपर्छ। यस्तो उत्तम जीवन पाएको बेला त्यसै खेरो फाल्नु हुँदैन भनि मनमा सधैं सम्फना गर्नुपर्छ।

## बिऊबाट पनि यी मानव जीवन प्राप्त हुन कठिनको विषय :-

शुद्ध शील पालन गरेको फलले मात्र यो मानव जीवन पाउन सकिन्छ। शील पालन नगरी अरू ठूलो ठूलो पूण्य गरेर यो जीवन पाउँदैन। आफ्नो धन सम्पत्ति सबै दान गरे तापनि क्षान्ति र वीर्य (कोशिश) को धर्म गरे तापनि समाधि र प्रज्ञाको ध्यान गरे तापनि कुनै ठूलो पूण्य गरे तापनि यस्तो पूण्यको फलले मात्र मानव जीवन पाउँदैन। मानव जीवन प्राप्त गर्नुको निम्ति शुद्ध शील पालन गर्नु अति आवश्यक छ। शुद्धशील पालन गरे मात्र यो मानव जीवन पाउन सकिन्छ भनि भगवान् बुद्धले "धो धे" सुत्रमा बताउनु भएको छ। आफ्नो मन बाक्लो क्लेशको अधीनमा परेर साधरणतः शरीर, वचन र चित्तले दश अकुशल पाप गरी अनि साधरणतः "ञेतुङ" भन्ने पाप कर्म एक दिन पनि नगरी बस्ने छैन यसरी सधैं पाप कर्म

मात्र गरे एकै दिन पनि शुद्ध शील पालन गर्ने फुर्सद नभए कसरी फेरि यस्तो अमूल्य मानवजीवन पाइन्छ, बिऊ बिनाको फल कहाँ हुन्छ ? मुक्ति र बुद्ध ज्ञान पाउने बिऊ शुद्ध शील हो - फल मुक्ति या बुद्ध ज्ञान हो।

तसर्थ बिऊ र फलको विषयमा राम्रो गरी, विवेक र विचार गरी अहिले अमूल्य जीवन पाएको बेला सधैं धर्माचरणमा सार गर्भ लिने कोशिश गर्नुपर्छ।

**अमूल्य जीवन पाएको बेला सारगर्भ लिने विषय :-**

गृहस्थीको आचरण छोड़ी धर्मको सारगर्भ बुझि धर्म गर्नु पर्ने कारण जसरी समुद्र पार गर्नुको लागि एउटा जहाजको जरूरत पर्छ त्यस्तै नै यो मानव जीवनको आवश्यकता पर्छ बुद्ध ज्ञान प्राप्त गर्नको निम्ति। जहाज मानव जीवन हो, समुद्र दुःखको संसार समुद्र पारि मुक्ति अर्थात बुद्ध ज्ञान प्राप्त हुने स्थान हो। यसकारण बुद्धज्ञान प्राप्त गर्नुको निम्ति यो मानवजीवन नभई हुँदैन। अहिले यो बहुमूल्य मानवजीवन पाएको बेला भविष्यको विषयमा आफ्नो मनमा राम्रोसंग विचार गरेर अर्को जन्ममा बुद्धज्ञान प्राप्त गर्ने कोशिश नगरी यही सांसारिक काममा मात्र भुलेर जीवन बिताउँछ जस्तै व्यापार, खेती किसान कोही कोही खानुको लागि मात्र दुःख गर्ने, कति वकिल जस्तो तर्क बाद विवादमा सिपालु हुने इच्छा गर्ने कति दर्जा ठूलो पाउने मात्र इच्छा गर्ने, कति घर गृहस्थी गरेर छोरा र छोरीको इच्छा गर्ने, कति इष्टमित्र धेरै बनाउने इच्छा गर्ने, कति धन सम्पत्ति जमाउनुमा कोशिश गर्ने। यस्तै सांसारिक काम कहिले टुँगिदैन या त केहिले पनि समाप्त हुँदैन, केटा केटीको खेल जस्तो हो। कारण केटा केटीहरूले खेल्ने चिज खेलेर कहिले सक्दैन। खेलेको खेलेकै हुन्छ। जबसम्म थन्काउँदैन

तबसम्म खेलिबस्छ। जब खेल्ने चिज राख्छ तब मात्र खेल समाप्त हुन्छ। त्यस्तै नै हो यो सांसारिक काम कहिल्यै सकिँदैन। जब मृत्यु हुन्छ तब मात्र समाप्त हुन्छ। हामीले यो विचार गर्छौं कि यो काम नगरी हुँदैन मैले गरिनँ भने हुँदैन उ आफैले त्यो काम गर्नुपर्छ, उ नभई हुँदैन भनी त्यस काम आफैले नै गर्छ। तर यो विचार गर्दैन कि आफू मरेपछि त्यो काम अधुरो पनि त रहँदैन, राजा या मंत्री मरे पनि केही फरक पर्दैन, कुनै काम अधुरो रहने छैन एक राजा मर्छ तर त्यसको साटो अर्को राजा भईहाल्छ। यस्तो कुरोको विचार मनमा कसैले लिँदैन। यस्तै प्रकारको अर्थहीन सांसारिक काममा मात्र भुलेर यो बहुमूल्य जीवन त्यसै नष्ट गरे, यो मानवजीवन पाएको अनर्थ हुन्छ। यस्तो बहुमूल्य जीवन त्यसै नष्ट गराए, यस्तो मानिसको मनमा नराम्रो ग्रह, भूत पसेको पो हो कि ? अथवा पागल भएको पो हो कि ? अथवा केही नजान्ने लाटो भन्दा पनि लाटोमा फरक के छ र ? यस्तो बहुमूल्य जीवन त्यसै नष्ट गरे त्यो जस्तो ठूलो भूल अरू केही छैन, लाटा र पागल भन्दा पनि खेरो गएको हो।

यस्तो बहुमूल्य जीवन व्यर्थै बिताए त्यो जस्तो ठूलो भूल अरू केही छैन। यसरी यो जन्मको भूलको कारणले गर्दा भविष्यमा हामी अनेकौं जन्म जन्म भूलमा परेर दुःख भोग्नु पर्छ। यो अहिले पाएको जीवन तल र माथि जाने सीमाना हो। जस्तो कर्म गरे त्यस्तै फल पाउँछ। राम्रो कर्म गरे सुख पाउँछ, नराम्रो कर्म गरे दुःख पाउँछ। बाँसभित्र साँप हाले त्यसको जाने बाटो दुईवटा मात्र हुन्छ, तल कि माथि त्यस बाहेक अरू कतै जानु सक्दैन। हामी विवेकशील प्राणी हौं, राम्रो र नराम्रो छुटाउन सक्छौं। जानेर बुझेर बुझ्दा बुझ्दै पनि यो जीवन नष्ट गरी दिए हामी ठूलो भूलमा पर्छौं। यस्तै भूलको कारणले जन्म जन्मान्तर भूलमा पर्छौं र दुःख भोग्नु पर्नेछ।

यसकारण यस्तो जीवन पाएको समयमा एक चित्त गरेर धर्म गर्नुपर्छ। फेरि एक चित्त नगरेर गृहस्थीपट्टि पनि ध्यान दिने साथमा धर्म पनि गर्छु भन्ने दुईपट्टि टुप्पा भएको सियो जस्तो हो, दुईपट्टि टुप्पा भएको सियोले लुगा सिलाउन सक्दैन त्यस्तै नै गृहस्थी र धर्म साथमा हुन सक्दैन। गृहस्थी पनि गर्छु साथमा धर्म पनि गर्छु भन्ने मुखमा सतुवाको पिठो खाँदै बाँसुरी फुके जस्तो हुन्छ। गृहस्थी र धर्म दुइवटा एकसाथ हुनसक्दैन, यो दुइमा गृहस्थी सफल होला तर सत्य धर्माचरण हुन सक्दैन। त्यसैले गर्दा धर्म गर्नु इच्छा भएको मान्छेले प्रथम आफू जन्मेको देश मातृभूमि मार र राक्षसको जेलखाना सम्झेर त्याग्नु पर्छ। आफ्नो बाबु, आमा इष्टमित्र सबै जेलखानाको प्रहारीदार सम्झी सबै त्याग्नु पर्छ। यस्तो बहुमूल्य जीवन एक क्षण पनि सांसारिक व्यवहारमा नभुलेर धर्ममा ध्यान दिन पर्छ। सांसारिक धन्धामा एक क्षण पनि यो मन भूलिए अफसोस (सुर्ता) मान्दै यो जीवन त्यसै खेरो जाँदैछ भनि पश्चाताप गर्नुपर्छ। एक जना स्त्रीको सुन्दर केशमा आगो लागे त्यस स्त्रीले सबै कुरो त्याग गरी आफ्नो केशको आगो निभाउन लागे जस्तो हामीले पनि सांसारिक कार्य सबै त्याग गरी धर्ममा लाग्नु पर्छ। यसरी सांसारिक व्यवहार सबै महत्वहीन मानि धर्मको निम्ति दिनको खाना (भोक) र रातको निद्रा सबैको वास्ता नगरी दिन र रात एकै बनाई सतधर्मको आचरण बाहेक अरू सबै त्यागेर आफ्नो मनमा त्रिरत्नको दृढ विश्वास गरी आफ्नो शरीर र मन सबै त्रिरत्नको शरणमा परि धर्म गर्दा भोकले मर्नु परे पनि वास्ता नगरी जाड़ोले मरे पनि मनमा अलिकति पनि पश्चाताप नमानि सत धर्मको निम्ति शरीर र प्राण छुट्टिए पनि केही वास्ता नमानि, यस्तो विचार गरी यो मायाजाल जस्तो सांसारिक भावना घृणा सहित त्याग्नु उचित हो। हृदयभित्रबाट यस संसारमा जन्म लिएको प्राणी सबै नै दु:खी छ भनि बुझि, अन्तिमको सुख पाउने धर्माचरणमा आफू सधैं

लाग्नु पर्छ। धर्म गर्दा आफूलाई मान्छेको गन्ती नगरे तापनि कारण धर्ममा लाग्दा यो सांसारिक व्यवहारबाट अलग भएको कारणले गर्दा यो सांसारिक मान्छेहरूले उसलाई मान्छेको गन्तीमा गन्दैन, आफूलाई पशुतुल्य कुकुरकै गन्तीमा राखे पनि वास्ता नगरी आफू सबैभन्दा नीच भई अरूभन्दा तल्लो दर्जामा बसि लुगा पनि फाटेको लगाएर माड्ने जस्तो भई मिठो मसिनो खाना छाड़ी जस्तो पाए त्यस्तै खाना खाई जति पाए त्यसमा नै सन्तोष गरी धर्म गर्नुपर्छ। इष्टमित्रसंग गफ गर्नु, माया ममताको चर्चा गर्नु पनि सबै छाड़नु पर्छ। जस्तै दुःख कठिन र पीर सहनु र खप्नु परे तापनि धर्मको निम्ति कष्ट गर्नुपर्छ। शरीर र मनले कुनै **कष्ट** नगरी धर्ममा कोशिश गरेन भने अन्तिममा बोधिज्ञान अनि महा**सुख अर्थात** बोधिचित्त प्राप्त गर्नु साह्रै पर्छ। धर्मको निम्ति सुख त्याग गरी **कष्ट सहेर** भोक तिर्खाको वास्ता नगरी धर्मको मार्ग अपनाए बुद्धज्ञान पाउन सकिन्छ। भगवान् बुद्ध स्वयंले वाणी गर्नु भएको छ कि संसारमा सबभन्दा ठूलो कोशिश हो कोशिश गर्ने व्यक्तिको निम्ति कुनै कुरो असम्भव छैन त्यसकारण बुद्धत्व प्राप्त गर्नुको निम्ति सबभन्दा ठूलो कोशिश बाहेक अरू केही छैन। यही कुरा "डुकपा कुइनले" भन्ने महासिद्ध पुरूषले पनि भन्नु भएको छ – "भगवान् तिमी र म त पहिलो (पूर्व) जन्ममा एउटै प्राणी थियौं साथी साथी जस्तो तिमी कोशिश गरेर बुद्ध भयौ, म अल्छी गरेर यही संसारमा जन्म लिनु पऱ्यो।" उहाँको भनाईमा पनि कोशिश गर्नु भन्ने बताईएको छ, कोशिश गरे बुद्धज्ञान पाउन कठिन छैन भनि बुझाउँछ।

**प्राचीन कालमा सबै सिद्ध महापुरूषहरूले कठोर कष्ट गरेर बुद्धत्व प्राप्त गरेको प्रमाणलाई हेरेर धर्मको सार गर्भ लिनु पर्ने विषयः-**

अघिको इतिहासमा हामी सबैले पढ्न पाउँछौ कि अघि गौतम बुद्धले पनि छ वर्षसम्म नैरञ्जन नदीको किनारमा कठोर कष्ट सही तपस्या गरी बुद्धज्ञान प्राप्त गर्नु भएको हो। अघि भारतवर्षका महापण्डित नारोपा (नदपद) ले आफ्नो गुरुका आज्ञानुसार बाह्रवटा ठूलो कष्ट र बाह्रवटा सानु सानु कष्ट गर्नु भएको उहाँको जीवन चरित्रमा पढ्न पाइन्छ। जम्मा चौबिसवटा कठोर कष्ट भोग्नु परेको थियो। ती मध्ये एउटा यस्तो प्रकार छ - पण्डित नारोपाको गुरु तिलोपा हुन्, गुरुले जस्तो जस्तो आज्ञा गर्नु हुन्थ्यो त्यस्तै आज्ञा पालन गर्नु हुन्थ्यो, उहाँको आज्ञा नारोपाले कहिले उल्लंघन गर्नु भएन। एक दिन नारोपालाई बाँस ल्याउने आज्ञा गर्नु भएछ, उहाँले बाँस ल्याउनु भएर गुरुलाई दिनु भएछ, गुरुले फेरि आज्ञा गर्नु भएछ, आगो सल्काउनु भनि, उहाँले आगो पनि तयारी बनाईदिनु भएछ, त्यसपछि गुरुले बाँस काटेर दशवटा चुच्चो चुच्चो किला बनाएर तेल लगाउँदै आगोमा सेक्दै नारोपाको नङ भित्र त्यो बाँसको किला हाली दिएछ, अनि एक हप्ता त्यतिकै राख्नु भएछ। गुरुले उहाँलाई म नआए सम्म यतिकै बस्नु भन्नु भएछ। नारोपाले पनि दुःख कष्ट सहन्दै गुरु आउनु नभए सम्म त्यसरी नै बस्नु भएछ, सात दिन बितेपछि गुरु आउनु भएर बाँसको सिन्का औंलाबाट निकालि दिँदा नङबाट पीपको भल बगेको थियो। यस्तो पीड़ा खपेर गुरुको आज्ञा पालन गर्नु भएको थियो पण्डित नारोपाले। यस्तै प्रकारले असाध्य दुःख कष्ट पण्डित नारोपाले चौबिसवटा गर्नु भएको थियो। अहिले हामीले उहाँको जीवन चरित्र पढ्दा मात्र पनि आँखाबाट आँसु झर्छ, शरीरको रौं झरर भएर आउँछ भने यस्तो कष्ट कसरी गर्नु भयो भन्ने हाम्रो मनमा कल्पना पनि गर्न सक्दैनौं।

फेरि जेचुन मिला रेपाले डाकर तासो भन्ने गुफामा बाह्र वर्षसम्म

सिस्नु मात्र खानु भएर कठोर तपस्या गर्नु भएको थियो। सिस्नुको खोले मात्र सेवन गर्नु हुन्थ्यो, त्यो पनि केही नहालेको तेल नून खोर्सानी इत्यादि केही पनि नभएकोले गर्दा यसरी नै बाह्र वर्षसम्म बस्नु भएको थियो।

श्रीपर्वतको ओडारमा **लामा गोछङ**ले दिनको भोक र रातको निन्द्रा सबै त्याग गरेर कठोर तपस्या गरेको थियो। नम्छो थारू भन्ने ठाउँमा **लामा लोरे** ले खाना र पिउने केही नखाई बाह्र वर्षसम्म कठोर तपस्या गर्नु भएको हो।

लामा जीफुग छ्योडाकले पाँच माना सतुवा (चम्बा) लिएर सात वर्ष मौन व्रत उपवास (न्युईने) गर्नु भएको हो। पाँच माना जति सतुवाको पिठो लिएर सात वर्षसम्म कठोर तपस्या गर्नु कतिको साह्रो हुन्छ त्यो कल्पना गर्नु पनि सक्दैनौ। हामीले एक दिनको भोक त खप्नु सक्दैनौं यसरी नखाई नखाई बाह्र वर्ष, सात वर्ष तपस्या गर्नु त परै जावस्। यस्तै प्रकारको इतिहास अरू पनि धेरै छ। अघि अघिका सत्पुरूष महासिद्ध पुरूषहरूले अनेकौ दु:ख, कष्ट, कठोर तपस्या नगरी बुद्धज्ञान प्राप्त भएको कहाँ छ र ? दु:ख र कष्ट नगरी सुख पाउन कसरी सक्छ र ? हामी एक छाक खाएर एक क्षणको सुखको निम्ति त कतिको दु:ख गर्नु पर्छ त्यो त सबैलाई थाहा छ। दु:ख नगरी मेवा कहाँ खान पाइन्छ भन्ने उखान पनि छ। हामी राम्रो खानु र राम्रो लगाउनका निम्ति त कति परिश्रम गर्नु पर्छ, दु:ख परिश्रम नगरेसम्म एक छाक खाना पाउन पनि मुस्किल पर्छ। झन बुद्धज्ञान, मुक्ति र अटल सुख पाउनको निम्ति कतिको कष्ट दु:ख गर्नु पर्छ त्यो त आफैले विचार गर्नुपर्छ। प्राचीन कालमा महापुरूषहरूले खाने, पिउने र लगाउने सबैको वास्ता नगरी आफूले नोक्सान खपेर, कष्ट सहेर, यो संसारको विचार त्यागेर, आफ्नो शरीरलाई गरम र ठण्डाको वास्ता नगरी

दिन र रात एकै गरी धर्ममा लागि एकाग्र भई कठोर तपस्या गर्नु भएको दुःख कष्ट भोग्नु भएको पवित्र जीवन चरित्र सुन्दा र पढ्दा आँखाबाट आँसु आउँने। यस्तो अचम्भको दुःख र कष्ट गरेको सम्झँदा मात्र पनि शरीरको रौंहरू झर झराउने, कसरी गर्नु भएको होला भन्ने विचार मनमा आउँछ। यस्तो दुःख कष्ट गर्नु भएको फल बोधिज्ञानको सुख प्राप्त गर्नु भएको हो। अहिले हामीहरू यही संसारको काममा व्यस्त भई इच्छानुसारको मिठो मिठो खाना खाएर, मद मदिरा पिएर मौज मजा गरी, आरामसंग सुति सुति सुख र आनन्दसंग धर्म गर्नेहरू बोधिज्ञान प्राप्त गर्नु त परै जावस् फेरि मनुष्यको जीवन पनि पाउने छैन। अल्छी गरेर, मन चञ्चल गरी जताभावि कुव्यवहार गरी सुतिसुति धर्म गर्नेहरूले एक दिनको धर्म गरेको जस्तो गरे जजमान (दाता) ले एक दिन भोजन दिएको र आफूले खाएको त गुण तिर्न सक्दैन भन्ने आफूलाई सधैं भोजन दिने दाताको श्रद्धा र गुण कहिले तिर्न सक्छ र ? यस्तो कुव्यवहार, सुत्न मात्र खुशी हुने, अल्छी गरी धर्म कहाँ हुन्छ र ? आफ्नो भलाईसम्म पनि हुँदैन पछि दुर्गतीमा जन्म लिनु पर्छ। अरूको भलाई र हित कसरी हुन्छ। यस्तो धर्मले बुद्धत्व प्राप्त गर्नु त असम्भव हो, मनुष्यको जीवन पनि पाउँदैन्। श्रद्धाले चढ़ाएको खाना पचाउन चाहिँ अति गाह्रो छ भनी भगवान्‌को वाणीमा बताएको छ। त्यस खाना या दान जे ग्रहण गरे पनि त्यसलाई कोर भन्दछ। यस्तो भनाई पनि छ कोर खानु र फलामको चिउरा चपाउनु एउटै हो। यस्तो श्रद्धाको भोजन र दान ग्रहण गर्ने पनि सत् धर्म गर्ने पनि बोधि चित्त भएको हुनुपर्छ तब मात्र ग्रहण गर्नु उचित हुन्छ। धर्म गरेको जस्तो बाहिरी रूप चाहिँ भिक्षु वा लामा जस्तो भएर भित्र मनमा चाहिँ पाप, लोभ, रीस इत्यादि बोकेर दान ग्रहण गर्ने चाहिँ फलामको चिउरा खाएको जस्तो हुन्छ पचाउनु सक्दैन र पछि दुर्गतिमा जन्म लिनु पर्छ।

## "कोर" को विषयमा दण्ड र सजाय भोग्नु पर्ने कुरालाई विचार गरेर धर्मको सार लिनु पर्ने विषय :-

धर्म दाताहरू र यजमानहरूले श्रद्धा र भक्तिसाथ धर्मको रूपमा भोजन चढ़ाए धन सम्पत्ति दान गरे, ग्रहण गर्ने लामा, भिक्षु र सघं जो भए तापनि दान पाए पछि भोजन सेवन गरी सकेपछि उनीहरूले दाताहरूको निम्ति पूजा र प्रार्थना राम्रो नगरेर दान पाए पछि खुशी भई दान पाएको धन चाहिँ राम्रो कर्ममा नलगाएर आफ्नु सुखको निम्ति खर्च गरे, मद मदिरा या त धन जम्मा गर्नु थाले त्यो सबै धर्मको सम्पत्ति नष्ट गरेको ले गर्दा कोरको दण्ड भोग्नु पर्छ। यसरी सधैं दान पाएर श्रद्धाको खाना खाएर मौज मजा गरे कोरको विष लाग्दै जान्छ। यसरी विस्तार विस्तार कोरले मात्दै जान्छ। यसरी कोरको निसा लागे बिस्तारैसँग मानसिक विकास पनि नास हुँन्दै जान्छ, आयु पनि छोटो हुन्छ, मनमा लोभ, रीस, तृष्णा अभिमान आदि बढ़ेर जान्छ। सुकर्म गर्नु मन नलाग्ने, सुत्न र अल्छी मात्र लाग्ने हुन्छ। आफ्नो गुरु लामाहरू प्रति श्रद्धा नहुने, सत्कार नगर्ने हुन्छ। पहिला प्राणीमाथि दया, माया र मैत्री भएको पछि विस्तारै घट्दै जान्छ। यो सब नास हुँदै गएको कारण कोरको विषले मातेर हो। यसरी अरूको ऋण र कोर खाएको फल मृत्युपछि पनि भोग्नु पर्छ। मनुष्य जीवन पाए तापनि नीच नोकर चाकरको जन्म लिनु पर्छ। पूर्वजन्ममा जसको ऋण र कोर खाने नोकर भएर ऋण र कोर तिर्न पर्छ। पशुमा जन्म लिए घोड़ा, खच्चर, गधा, चौंरिगाई आदिको जीवन लिएर अनेक दुःख कष्ट गरेर, विमार भएपनि काम नगरि धरै पाउँदैन, यसरी अनेक प्रकारको दुःख गरेर भारी बोकेर मान्छे बोकेर हलो जोतेर पूर्वजन्मको ऋण तिर्न पर्छ। जबसम्म पूर्वजन्ममा खाएको ऋण र कोरको भार सकिँदैन तबसम्म दुःख भोग्न

पर्छ। म गर्दिन, तिरो तिर्दिन भनि धरै छैन्। यसरी दूर्गतिमा जन्मेर अनेक प्रकारको दुःख र कष्ट भोग्नु पर्छ भनि धेरै ग्रन्थमा बताएको छ। यस्तै प्रकारको कोरको असरले गर्दा दुःख भोग्नु परेको धेरै छ। महाकोरको वशमा परि यहि संसारको काममा भूलिबसे यस्तो राम्रो मानिसको जीवन पाउनु पनि अति कठिन यस्तो क्षण सम्पत्तिले युक्त भएको जीवन प्राप्त गर्नु नसक्ने दुर्लभको जीवन व्यर्थै खेरो फाले, केही ठोस कर्म नगरी खाली हात फर्के हाम्रो मनमा नराम्रो ग्रह पसेको हो कि ? अनि मुटु नै कुहेको जस्तो किन नसम्फेको हामीले ? हाम्रो शरीरको मूल अंग मुटु हो, मुटु नै कुहेर गए यो शरीरमा प्राणनै रहँदैन, त्यस्तै नै हामीले यो मानव शरीर पाएको समयमा कुशल कर्म गर्नु सकेनौं भने हाम्रो मुटु कुहेको जस्तो हो।

यसकारण कोरको विष नलाग्ने उपाय हामीले गर्नुपर्छ। कोरको अमर कम्ति हुने उपाय कसरी गर्छ भने, खाना नखाएर मौन व्रत (ज्युङ्ने) बस्ने उपषोध व्रत, एकै आसनमा बस्ने, एक छाक मात्र खाना खाने गरेर जीवन चलाउँछ। अरू पनि धेरै प्रकारले कोरको असर नलाग्ने वताउँछ कन्द मूल, फल, साग-सब्जी आदि खाएर बसे कोरको विष लाग्ने छैन। यस्तै प्रकारले कोरको विष नलाग्ने उपाय हामीले गर्नुपर्छ। आफ्नो स्मृति ज्ञान ठीक रूपले राखेर प्रज्ञाले विवेक गरेर कुशल र अकुशल चिनेर जानेर छुटाउन सक्नु पर्छ। यी तीन कुरा (क) स्मृति (ख) विवेक (ग) प्रज्ञा, सधैँ नै मनमा राख्नु पर्छ। अर्कोको धन श्रद्धाको खाना र धर्मको सम्पत्ति नष्ट गरेर कोरको दण्ड भोग्नु पर्छ भनि सधैं स्मृति गर्नुपर्छ। स्मृति गरेर यस्तो कोरको वशमा नपरोस्, कोरको दण्डबाट छुटकारा पाउनुको निम्ति हामीले पूण्यको कर्म गर्नुपर्छ। शरीर वचन र मनले दश कुशल कर्म गर्नुपर्छ। शरीरबाट हुने पाप (क) हत्या, (ख) चोरी, (ग) अब्रह्मचार, वचन

बाट हुने पाप (घ) झूट बोल्ने (ङ) कड़ा वचन (च) चुकली गरेर फूट गराउने (छ) व्यर्थैको गफ गर्ने, मन बाट हुने पाप (ज) अरूलाई बिगार्ने कुभलो चित्ताउने (झ) लोभ गर्ने (ञ) उल्टा दृष्टी हेर्ने। यी दश अकुशल कर्म त्याग्नु पर्छ र दश कुशल कर्म गर्नुपर्छ। आफूले जति जानेको छ, जति धर्म बुझेको छ त्यसलाई नै मनमा सधैं स्मृति राखेर धर्म गर्नुपर्छ। यो बहुमूल्य जीवन पाउन अति कठिन स्वभाव प्रमाण संख्य आदि बाट पनि प्राप्त गर्न कठिन यो मानव जीवन पाइएको बेला अल्सी नमानी भित्री हृदयबाट यो कुरोलाई बुझेर मुखले मात्र होइन यस्तो मानव चोला पाउन अति कठिन रहेछ भनि शून्य ठाउँमा बसेर ध्यान गर्नुपर्छ।

जति पनि संसारका पदार्थ वा द्रव्य छ, भौतिक र प्राकृतिक जुनै भएता पनि यी सबै अनित्य हो। यसको कारण यहाँ दुइ प्रकारले वर्णन गरिएको छ -

**अनित्यता को ध्यान गर्ने विषय :- (१)अनित्यता संक्षेपमा वर्णन (२) बृत्तान्तमा बताउनु।**

**१) अनित्यता संक्षेपमा वर्णन :-**

प्रथम त्रिलोक (क) काम धातु (ख) रूप धातु (ग) अरूप धातु संस्कारले बनिएको हुनाले सबै अनित्य हो। संस्कारको अर्थ साधरण रूपले यस्तो हो एउटाको कारणले अर्को बनिएको हो, जस्तै माटोको कारणले हाँड़ी इत्यादि। संस्कारले बनिएको जे जति पनि छ त्यो सबै नाश भएर जानु प्रकृतिको स्वभाव छ। भाँड़ा जस्तो बाहिरी यो संसार सबै नाश भएर जाने छ। संसार भित्र भएको सबै प्राणी पनि अनित्य हो नाश भएर जान्छ। संसारमा भएको खाना खाद्य-सम्बन्धि धन सम्पत्ति सबै अनित्य हो। अहिले

छ त भरे छैन मायाजाल जस्तो भनि बुझ्नु पर्छ।

## दोस्रो बृत्तान्त वर्णन :- यो लोक धातुको संसार पनि अनित्य हो भन्ने विषय

यो पृथिवी लोक धातुको सबभन्दा फेदमा वायु मण्डल छ, वायु मण्डलमाथि पानीको मण्डल छ पानीको मण्डलमाथि पृथिवी मण्डल छ पृथिवीकोमाथि सुमेरू पर्वत छ। सुमेरू पर्वतको तीन भाग पानीभित्र छ एक भाग मात्र पानीमाथि छ। सुमेरू पर्वतको तल्लो भाग, दोस्रो भाग र तेस्रो भागमा गन्धर्व, अनि नाग लोकको स्थान छ। पानीमाथिको भाग चतुर महाराज देवगणको देवस्थान हो। सुमेरू पर्वतको टुप्पापट्टिको भागमा कामधातु देवलोकको तैंतीस कोटी देवस्थान छ। कामधातु देवहरूले आफ्नो धातु (वीर्य) देखेर, स्पर्श गरेर, सुनेर मात्र पनि प्रयोग गर्न सक्छन् सम्भोग गरी आफ्नो धातु स्पर्श गरेर देखेर मात्र पनि प्रयोग गर्ने छ। यसको अर्थ यस्तो हो कि कामधातु देवले कुनै स्त्री रूचाए या कसैले कामधातु देवको नाम लिएर आराधना गर्छ त्यस स्त्रीसंग काम भोगको सम्भोग नगरी नै आफ्नो धातु प्रयोग गरी स्त्रीले गर्भधारण गर्न सक्छे। यसको उदाहरण महाभारत ग्रन्थमा कुन्तीले सूर्य देवको आराधना गर्दा गर्भ धारण गरी कर्ण जन्मको हो। कामधातु देव लोक छः प्रकारको छ। कामधातु देवस्थान माथिलोपट्टि रूपधातु देवस्थान छ। रूपधातु देवलोकमा जम्मा सत्रह (१७) वटा मध्ये नौ वटा मात्र देवहरू छन्। त्यसलाई त्रि समाधि देवस्थान भन्दछ। यी त्रि समाधि देव स्थानदेखि तल्लो कामधातु देवलोक र मुनि वायु मण्डलदेखि माथिको प्राणी पृथिवी समेत सबै समय अनुसार आगो लागेर सबै नष्ट गर्ने पानीले सबै बगाएर नष्ट गर्ने हावा आँधी तुफान चलेर सबै नष्ट गरि दिन्छ। यस्तो प्रकारले नष्ट भएर जान्छ कि यहाँ यस्तो थियो भन्ने

नमुना समेत नराखी खाली हुन्छ, चिनो सम्म पनि पाउँदैन यो सिद्धान्त चाहिँ डारवीन (Darwin) र लेममार्क (Lammark) भन्ने वैज्ञानिकको theory मा स्पष्ट गरि बताएको छ। हामी त झन मर्ने र जन्मनेको केही टुङ्गो नभएको भुसुना जस्तो जीवन छ नमर्ने त कुरै छैन। आगोले घिऊ जस्तो बिलेर जान्छ, पानीले नून जस्तो बिलाउँछ हावाले धुलो जस्तो उड़ाउँछ, यस्तो प्रकारले सबै अनित्य हो। अरू पनि रूपधातु आठ विभागका देवलोक र अरूप धातुका चार विभागका देवलोक जम्मा बाह्रविभागको देवलोक सबै संस्कारले बनिएको हुनाले स्थान त रहन्छ तर त्यहाँ बस्ने देवहरू रहँदैन यस्तै प्रकारले सबै अनित्य हो भनि बुझ्नुपर्छ।

## दिन र वर्ष पनि अनित्य हो भन्ने विषय :-

मेलैसंग वर्ष महिना समय सबै सकिएर जान्छ, वर्ष एक एक महिना गर्दै सकिन्छ, महिना एक एक दिन गर्दै सकिन्छ, दिन एक एक घड़ी (धण्टा) गर्दै सकिन्छ, घण्टा एक एक मिनेट गर्दै सकिन्छ मिनेट एक एक सेकेण्ड गर्दै सकिन्छ। यस्तै संसारिक विचार र धन्दा गर्दा गर्दै दिन र रात पनि एकै चुटकीको समयमा पल पल सबै सकिएर जान्छ. यस्तै प्रकारले सबै नै अनित्य हो भनि बुझ्नु पर्छ।

## चारै ऋतु पनि अनित्य हो भन्ने विषय :-

यस्तै प्रकारले ऋतुहरू पनि मेलैसंग वर्षा, शरद, हिँउद बसन्त हुँदै बदलिन्छ। निलो निर्मल आकाशमा पनि बादल लागेर वर्षा लागी पानी पर्न लाग्छ। अघिको नाङ्गो रूखमा नयाँ पौला पलाएर हरियो भएर आउँछ। सुखा उजाड़ धर्तीमा पनि झार पात उम्रेर हरियो भएर आउँछ। गर्मी मौसम पनि विस्तारैसित वर्षा कालमा परिणत हुन पुग्छ। गर्मी मौसम र

वर्षा काल पनि केही समयपछि बदली भएर धरती सबै ठण्डा भएर माटो पनि कक्राउँदै कड़ा भएर तीखो जाड़ो भएर ठण्डा मौसममा परिणत हुन्छ। रूखका पातहरू पनि सबै झर्न थाल्छ। अघिको रमाइलो पहाड़ जंगल मैदान गाउँ बस्ती सबै बदली भएर उजाड़ भएर आउँछ। वर्षा कालको शीतल बतास नै बदलिएर गृष्मकालको तिखो जाड़ो भएर आउछ। यस्तै प्रकरले ऋतुले पनि अनित्य हो भनि प्रमाण दिएको बुझ्नुपर्छ। बितिसकेको ऋतु फेरि फेरि फर्किन्दैन। सबै नै नाश भएर जाने अनित्य हो भनि जान्नुपर्छ।

## संस्कारले बनिएको चार अनित्यको विषय :- बनाएको घर आदि पनि अन्तमा भत्केर जााने अनित्यको विषय :-

उहिलेको समयमा धन सम्पत्तिको बलले देव लोकको इन्द्र भगवान्को महल जस्तो, सुन्दर सुन्दर राज दरवार सबै नै ध्वंश नष्ट भएर गएको निशानसम्म मात्र भएको पाउँछौं। पहिलाका गाउँ शहर देवस्थान मन्दिर चैत्य इत्यादि सबै प्रायः जस्तो भत्की सकेको अवस्थामा पाउछौं। जस्तै - नालन्दा विश्वविद्यालय, महेन्जोदरो, हरप्पा, अजन्ता, इलौरा, दिल्लीको लाल किल्ला, मैसुरको राज महल आदि अहिले निशान र चिनो मात्र भएको पाउँछौं। भगवान् बुद्धले बुद्धज्ञान प्राप्त गरेको स्थान बुद्धगया, स्वयं भगवान्ले पवित्र र मंगल आशिष गरेको स्थान पनि पहिलाको झै नरहेर अलि अलि परिवर्तन बनिएको हामीले देख्छौं। त्यसकारण संस्कारले बनिएको सबै प्राकृतिक वस्तु एकदिन भत्किएर जान्छ नाश भएर जान्छ। यो त प्रकृतिको नियम नै हो भनि हामीले अनुमान लगाउन सक्छौं। यसको विषयमा Darwin र Lammark भन्ने वैज्ञानिकको सिद्धान्तमा बताएको छ। यस्तै प्रकारले हामी सबैले बुझ्नु पर्छ कि संसारको जो जति पनि प्रिय अप्रिय वस्तु छ सबै एक दिन नाश भएर जान्छ, फलाम जस्तो बलियो त एक दिन सौ दुइ सौ

वर्ष पछि खिएर नाश भएर जान्छ, ठूला ठूला चट्टान पनि सबै नाश भएर जान्छ, हाम्रो शरीरको त झन के कुरा नाम र निशानसम्म पनि रहँदैन सबै खरानी भएर जान्छ। यो सबै अनित्य हो भनि बुझ्नु पर्छ।

## २) जम्मा गरेको सबै वस्तु एक दिन त सकिने छ भनि अनित्य बुझाउने विषय :-

उहिलेको समयमा कुबेरको जस्तो धन सम्पत्ति भएको धेरै राजा महाराजा थिए। उनीहरूले आफ्नो प्रजाहरूलाई दान गर्नु सक्थे। आफ्नो इच्छाअनुसारको कर्म र धर्म गर्नु सक्थे। उनीहरूको यति धन सम्पत्ति थिए भनि अन्दाज पनि गर्नु सकिँदैन थियो। यस्तो धन सम्पत्ति भएको मालिक राजा महाराजा पनि धन सम्पत्ति सकिएर गरीब भएर एकै दिनको खाना जुटाउनु पनि धौ धौ परेका धेरै छन्। दिन र रात खाना र लगाउनु खोज्ने काममा भुलेर बस्ने धेरै छन्। जस्तै हरिशचन्द्र राजा यस्तै दरिद्र भएको अरू पनि धेरै छन्। आफ्नो गाउँ शहरतिर पनि धेरै छन् यस्ता प्रकारका अघि धनी भएर अहिले गरीब अवस्थामा परेका। यसकारण जम्मा गरेको सञ्चय गरेको वस्तु धन सम्पत्ति सबै एक दिन सकिन्छ यो त स्वभाविक नै हो भनि अनित्यता बुझाउँछ अनि अनित्यको स्वभाव बुझ्न पर्छ। हाम्रो जीवन पनि यस्तै हो भनि बुझ्न पर्छ।

## ३) भेला भएको एक्रता भएको सबै छुटिन्छ भने अनित्य बुझाउने विषय :-

भेला हुनको अर्थ नै बिछोडिनु हो। एउटै गाउँ शहर देशमा जन्मेको मानिसहरू एउटै गुरुका चरणमा बसेर धर्म अध्ययन गरेका चेलाहरू धर्म बन्धुहरू, एउटै पाठशालामा पढ़ेको विद्यार्थीहरू, एउटै घरका जहान परिवार

सबै नै एक दिन बिछाड़िने हो। जस्तै हाट बजारमा मानिमहरू बिहानदेखि बेलुकीसम्म सबैसगै हाट गरि आफ्ना आफ्ना घर फर्किए पछि हाट शून्य हुन्छ। मेला तमासा खेल हेर्न जम्मा भई फेरि मेला आदि सकिए पछि आफ्ना आफ्ना घर फर्की सबै शून्य हुन्छ। यसकारण भेला भएको सबै वस्तुको अन्त छुट्टिन बिछोडिनु त प्रकृतिको नियम नै हो। धन दौलत जम्मा गर्नुको अर्थनै खर्च गरेर सकिनु हो। आफ्ना घरमा चामल अन्न आदि थुपार्छ के को लागि भन्दा खाएर सकिनुको निम्ति हो। पिउने पानी घरमा ल्याउँछौं त्यो पनि सकिन्छ, एक नाश भएर जस्ताको त्यस्तै बस्ने कुनै वस्तु छैन। मानिसहरू पनि यस्तै प्रकारले बिछोड हुन्छ, कोही मानिस आफ्नो कर्म संस्कार सकिएको कारणले मृत्यु भएर बिछाड़िनु पर्छ। कोही आयु सकिएकोले गर्दा मृत्यु भए बिछोड़िने हुन्छ। कोही आफ्नो सन्तानदेखि अलग भएर टाड़ो देश बिदेशमा गएर बस्नु पर्ने हुन्छ। धेरै जस्तो सगैं बस्ने भाग्यमा नभएकोले गर्दा सगैँ बस्नु पाउँदैन। यसरी कोही मरेको कारणले गर्दा नदेख्दा कोही टाडामा भएको हुनाले नदेख्दा मुखले मात्र त भन्छ मेरो यस्तो उस्तो छ भनेर तर देख्दैन् केवल सम्झना मात्र रहेकोले मनमा दुःख लाग्छ। यस्तै प्रकारले सबै छुटिएर जानेछ यी पनि अनित्य हो भनि बुझ्न पर्छ।

## जन्मको अन्त मृत्यु हो भन्ने अनित्य बुझाउने विषय :- खास गरी मर्नुको विषय

विशेष गरी संसारका समस्त प्राणीको केही भरोसा छैन अचानक कहिले के हुन्छ, केही भन्न सक्तैन। यसरी नै प्राकृतिक घटनाहरूको कारणले सजिलैसंग प्राणीहरू नष्ट भएर जान्छन्। सिद्धार्थ गौतमले पनि कठोर तपस्या गरी बुद्धज्ञान पाउनु भयो साथै आफ्नो शरीर पनि कहिले र कसैले

पनि नष्ट गर्नु नसक्ने बज्र काया पाउनु भएको थियो अमर जीवन प्राप्त गर्नु भएको थियो। त्यस्तै नै अरू अर्हतहरूले पनि बज्रकाया अमर जीवन प्राप्त गर्नुभएको थियो। तर उहाँहरूको अमर जीवन हुँदा हुँदै पनि आफ्नो शरीर त्यागी महापरिनिर्वाण हुनुभयो। कारण हामी जस्तो अज्ञानतामा परेको साधरण मानिसहरूका निम्ति हो। मृत्यु एक सत्य हो जन्मेपछि त्यसको अन्त मृत्यु हो भन्ने शिक्षा दिँदै भगवान् बुद्धले आफ्नो बज्रकाया त्याग गरि महापरिनिर्वाण प्राप्त गर्नुभयो। उहाँले त मरेको जस्तो मात्र गरेका हुन् जस्तै बाँदरहरू झगड़ा पर्दा आफूले नसक्ला जस्तो भए आफू मरेको जस्तो गर्छ, जब अर्को बाँदरले सम्झिन्छ कि मर्‍यो भनेर तर केही क्षण पछि उठेर भाग्छ। भगवान् बुद्ध जस्तो बज्रकाया प्राप्त भएको त मृत्यु हुँदो रहेछ झन हामी साधारण मानवको त के कुरा एक दिन मर्नु त पर्छ भनेर मनमा सधैं सम्झना गराउनका लागि भगवान् बुद्धले महापरिनिर्वाण प्राप्त गर्नु भएर मृत्युको नमुना राखीदिनु भएको हो।

अघि भारतवर्ष र तिब्बतमा धेरै सिद्ध महान् पुरूषहरू थिए। उनीहरू स्वयं उड़न सक्ने शक्ति भएका थिए बुद्धज्ञान प्राप्त भएका थिए, तरै पनि उहाँहरू सबै नै मर्न पर्‍यो। कारण मृत्यु एक सत्य हो झूठो होइन। तसर्थ उहिलेका महात्मा पुरूष र सिद्ध पुरूषहरूलाई श्रद्धा र भक्ति मात्र गर्नु सक्छौं दर्शन गर्नु पाएनौं कारण नमर्ने कोही छैन। यस्ता महान पुरूष बुद्धज्ञान प्राप्त भएकाहरू त सबै मर्नु पर्छ भने झन हामी षष्ट गतिका प्राणीहरू कुकर्म मात्र गर्नेहरूको त के कुरा ? पोहर साल देखेको मानिस यो वर्ष देख्दैन। हिज राम्रै अवस्थामा देखेको मानिस आज देख्न पाउँदैन, मृत्युको केही निश्चित हुँदैन। खबर गरेर मृत्यु आउँदैन, अचानक मृत्यु आउँछ। मानिसको पञ्चम अवस्था हुँदै, मृत्युको मुखमा पुग्न पर्छ। पञ्चम

अवस्थाको पहिलो चरण जन्म हो। दोस्रो चरण बालक अवस्था, तेस्रो चरण जवान अवस्था, चौथो चरण वृद्ध अवस्था, पाँचौ मरण अवस्था हो। मुत्यु हुनु मानव र प्राणीको जन्मसिद्ध अधिकार हो। मृत्युको केही निश्चित समय हुँदैन। हाम्रा साधारण विचारले सोच्दा भन्छौं कि बूढा बूढी भए पछि मात्र मृत्यु हुन्छ तर यसो होइन मृत्यु मेलैसंग पनि आउँदैन। मृत्युले बालक, जवान, बुढ़ा, साना-ठूला उच्च नीच धनी गरीब राजा प्रजा भनि छुटाउँदैन। कति त गर्भमा नै मुत्यु हुन्छ। कति बालक कालमा, जवानी काल र वृद्ध कालमा मृत्यु हुन्छ। कति बालककालमा, जवानीकाल र वृद्धकालमा मृत्यु हुन्छ। कतिपय उदाहरण हामीले देख्छौं कोही सानुमा नै मृत्यु भएको, कोही जवान भएर मृत्यु भएको इत्यादि टाड़ा देश विदेशमा भएका मानिसहरू मरे भनेको धेरै सुन्छौं। कति पशु-पंक्षीहरू एकै दिनमा असंख्य मरेको र मारेको देख्छौं। यस्तै प्रकारले हाम्रो पनि मृत्यु निश्चित छ, एकदिन मर्नुपर्छ, भनि सधैं मनमा स्मृति गर्नु नै धर्मको उत्तम मार्ग हो। जन्मेर मृत्यु नहुने ठाउँ कहाँ छ र ? यस बष्ट गतिमा जन्म-लिएपछि एक दिन मृत्यु निश्चित छ। अघि अघि जन्मेका मानिसहरू मृत्यु नभई अमर जीवन भएका यस संसारमा कहाँ छ र ? पानी उम्लिँदा भाँड़ाको फेदबाट पानीको फोका माथि आईपुग्दा नपुग्दा फुटेर गएको जस्तो दीयोको तेल सकेर निभे झैं हाम्रो पनि आयु र संस्कार सकिएको कारणले मृत्यु हुन्छ। मरणको समय आएपछि कसैले रोक्न सक्दैन। आफ्ना इष्टमित्र, धन सम्पत्ति वीर सेना, राजा महाराजा कसैले पनि मृत्युलाई रोक्न सक्दैन। अन्तमा हामी मर्न पर्ने रहेछ भनेर मनमा याद राख्नु पर्छ।

## विशेष गरी मृत्यु रोक्ने उपाय नभएको विषय :-

## मृत्यु चाड़ै हुने विषय :-

हाम्रो आयु जन्मेपछि बिसाउने समय एक क्षण पनि छैन, न त दिनमा न त रातमा दिन रात एक एक सेकेण्ड गर्दै आफ्नो मृत्युकाल नजिक हुँदैं आउँछ। हामी जन्मेपछि हाम्रो आयु घट्दै जान्छ। नानीहरू ठूलो ठूलो हुँदै जाँदा हामी खुशी हुन्छौं तर आयु सकिएको थाहा छैन जति बड्दै जान्छ त्यति नै मृत्यु नजिक हुँदै नै जान्छ। प्रामाण एक कैदीलाई फाँसी दिन लाँदा एक एक पाइला सार्दा उसको मृत्यु नजिक नजिक हुँदै जान्छ। त्यस्तै नै एक बलवान धनुषधारीले धनुमा वाण चढ़ाएर आफ्नो निशानामा हिर्काउँदा, त्यो वाण आफ्नो निशाना र लक्ष्यमा नपुगेसम्म एक क्षण पनि रोकिँदैन त्यस्तै गरी प्राणीको आयु पनि जन्मेपछि एकै क्षण जस्तो लाग्छ, आयु सकिएर मृत्युको समय आएको थाहा नै हुँदैन। दिनै पछि आयु घटेको विचार नै गर्दैनौ हामीले।

## मृत्यु कहिले हुन्छ त्यो थाहा नहुने विषय :-

विशेष गरेर हामीलाई आफ्नो मृत्यु कहिले हुने हो त्यो थाहा हुँदैन। हामी आज बेलुकीसम्म बाँच्छौं भनी निश्चित हुँदैन आज राती सुतेको सुतेकै पो हुन्छौं त्यो पनि भन्न सकिन्दैन अथवा भोलि पर्सि या त महिना दिन या त वर्ष दिनसम्म बाच्छौं कि जीवित रहँछौ त्यो पनि निश्चित छैन। अथवा धेरैं लामो आयुसम्म बाँच्छ मृत्यु कहिले हुन्छ निश्चित हुँदैन। कोही त माताका गर्भमा नै मृत्यु हुन्छ, कोही जन्मनुसाथमा मृत्यु हुने। कोही बालककालमा, जवान अवस्थामा र वृद्धकालमा मर्नु पर्छ। वृद्ध अवस्था भएर मात्र मृत्यु हुन्छ भनि निश्चित नियम छैन। फेरि मृत्यु पालैसित हुन्छ भनि कुनै नियम छैन।

## मरणको कारण धेरै छ बचाउने उपाय कम्ति छः-

हाम्रो प्राण नष्ट गराउने कारण धेरै छन्। जस्तै बाहिरी हो भने चार तत्व, आगोले जलेर मर्ने, पानीमा डुबेर, नदीले बगाएर मर्ने, पहिरोले थिचेर मर्ने, आँधी तुफानको कारणले मर्नु पर्छ। आफ्नो शत्रुले मार्ने हुन्छ, बाघ भालु जस्ता हिंसक जनावारले मार्ने र मर्नु पर्ने हुन्छ। रूप र शरीर नभएको आत्मा मात्र भएको वायुमा हिँडने ग्रह, भुत प्रेत विघ्न बाधाको कारणले मर्नु पर्छ। ग्रह ३६० प्रकारको छ अठार (१८) वटा एकदम डरलाग्दो र शक्ति भएको हुन्छ, (१५) पन्ध्रवटा बालक नानीहरूलाई मात्र सताउँछ। प्रमुख ग्रहरूको नाम यस प्रकारको छ -ः देव ग्रह, नाग ग्रह, दानव ग्रह, पवन ग्रह, गरूड ग्रह, गन्धर्व ग्रह, किन्नर ग्रह, उरग ग्रह, यक्ष ग्रह, राक्षस ग्रह, भूत ग्रह, प्रेत ग्रह, पिशाच ग्रह, कबन्ध ग्रह, जर्जर वा पूतन ग्रह, मायावी ग्रह, खडेरी ग्रह, समप्रभोप ग्रह (स्मृति हराउने ग्रह) आस्तारक ग्रह Narcotic उन्माद ग्रह, पक्षी ग्रह, माटका ग्रह, आगमुक ग्रह, कण्टक ग्रह इत्यादि। हाम्रो दिन बलियो छैन भने यस्तो प्रकारको ग्रहहरूले सताउँछ र लागु भागु लागेर मृत्यु हुन्छ। शरीर भित्रको रोगहरू झण्डै (४४४) चार सय चवालीस प्रकारको छ। जस्तै पित्तको रोग, वायु रोग, प्रक्षेक रोग, सुकेनाश, मुटुको रोग, एड्स , क्यान्सर इत्यादि जस्तो भयनाक रोग लागेर मृत्यु हुन पर्नेछ। हावा बतास चलिरहेको ठाउँमा कुनै दीयो बत्ती राखे तेल नसकिए पनि हावा बतासले निभाइदिन्छ। हाम्रो आयु भए पनि यस्तै प्रकारको कारणहरूले गर्दा मृत्यु हुनु सक्छ। एउटा दुलो परेको कलशमा पानी हाली राखे त्यहाँ पानी रहँदैन अलिअलि गरेर चुहेर सकिन्छ। हाम्रो पनि मर्ने इच्छा नभइ नभइ पनि मर्नु पर्छ। दुलो परेको कलशको पानी

चुहेर गए जस्तो हाम्रो आयु पनि विस्तार विस्तार सकिँदै जान्छ, आयुलाई रोकी राख्ने कुनै उपाय छैन तरै पनि हामीहरू अनेक इच्छा गर्छौ, तर मर्नुको सम्झना गर्दैनौ। यस्तै प्रकारले हाम्रो प्राण चुड़ाउने कारण धेरै छ, वचाउने उपाय एकदम कम्ति छ। हामी एकदिन मृत्युको मुखमा पुग्न पर्छ भन्ने सम्झना गर्नु पर्छ।

## कुनै उपायले पनि मृत्युलाई रोक्न नसक्ने विषय :-

हामी सबै कर्मको अधीनमा भएको कारणले मृत्यु पनि काल गतिको कारणले हामी मर्नु पर्छ। यस्तो मृत्यु काल आए हामीलाई मृत्युबाट कसैले पनि बचाउन सक्दैन। जस्तै शक्तिवान राजाको बल, हक र लाखौं फौजले पनि मृत्युलाई रोख्न सक्दैन। धन सम्पत्ति करड़ौ करड़ौ पैसा रूपियाँ, सुन, हिरा, मोती भए पनि मृत्युलाई रोक्न सक्दैन। आफ्नो बन्धु बान्धव, इष्टमित्र, सार सन्तान धेरै जम्मा भएर पनि मृत्युलाई रोख्न सक्दैन। डाँड़ाबाट लडेको ढुंगा फेरि डाँड़ामा फर्कन कहाँ सक्छ र ? पश्चिम दिशामा अस्ताउन लागेको सुर्यलाई एक क्षण पनि समातेर राख्न सक्दैन, रोक्न पनि सक्दैन। सूर्य समय अनुसार अस्ताउँछ। त्यसरी नै हाम्रो यो सुन्दर शरीर माटोमा विलिन भएर मृत्युको मुखमा पर्नुपर्छ।

## मुत्यु कसरी हुने विषय :-

मानिसको मृत्यु हुने विषय : मृत्यु हुँदा दुई प्रकारको विच्छेदन (विसर्जन) हुन्छ। बाहिरी विच्छेदन र भित्री विच्छेदन। बाहिरी विच्छेदन शारीरिक इन्द्रिय ज्ञान र तत्व विलिन हुने हो।

भित्री विच्छेदन मुठमा, जम्मै अंश कुनीतिसम्पन्न धुर्त विचारहरू

हुन।

प्रथम हाम्रा शारीरिक गठन र बनावट कस्तो छ र कसरी सृष्टि भएको छ त्यो जान्नु जरूरी छ, कारण मृत्युको समयमा सबै अंग भाग भाग छुटिएर जानेछ। हाम्रा वास्तविक अस्तित्वको अविचलित माटो तत्व, पानी तत्व, आगो तत्व, हावा वा वायु तत्व र आकाश तत्वद्वारा हुन्छ। यी पञ्चतत्वद्वारा हाम्रा शरीर गठन भएको हुनाले जब सबै तत्व एक अर्कामा लीन (विलय) भएर जान्छ तब हाम्रा मृत्यु हुन्छ। यी पञ्च तत्वहरूको प्रभाव र गुण हाम्रा मन, वा मानसिक बुद्धिमा घटित हुन्छ। सबै प्रकारको अनुभव गर्ने मनको योग्यता भएको आधार माटो तत्व हो। यसै तत्वको स्थिरता र उपयुक्त पार्ने काम पानी तत्वको हो, पानी तत्वको शुद्धता र सामर्थ्य योग्यता अग्नी तत्व हो, अग्नि तत्व कै अटुट लगातार सञ्चालन वायु वा हावा हो, वायु कै असीम आकाश तत्व हो।

शारीरिक इन्द्रियको सचेत अवस्था हाम्रा मनबाट उत्पन्न भएको हो। हाम्रा शरीरमा भएका मासु, हड्डी, गन्ध थाहा पाउने इन्द्रिय नाकको गठन माटो तत्वबाट बनिएको हो। शरीरमा सञ्चालन हुने रगत तरल पदार्थ जस्तै आँसु, राल, सिङान आदि हामीले स्वाद थाहा पाउने इन्द्रिय जिब्रो यिनीहरूको गठन चाहिँ पानी तत्वबाट बनिएको हो। शरीरको ताप दृष्टि इन्द्रिय आँखा र रूप चाहिँ आगो तत्वबाट बनिएको हो। हाम्रा श्वास, प्राण वायु वा दम शरीरले स्पर्श भएको थाहा पाउने इन्द्रिय अनि हाम्रा शरीरमा स्पर्श हुने चाहिँ वायु वा हावा तत्वबाट बनिएको हो। शरीरभित्र जति पनि खोक्रो ठाउँ छ जस्तै नाकको छेद, कानको छेद, आँखाको छेद, पेट भित्र खोक्रो भएको आदि र हामीले शब्द सुन्ने इन्द्रिय कान र शब्द चाहिँ आकाश तत्वबाट बनिएको हो।

## बाहिरी विच्छेदन :-

प्रथम हाम्रा शारीरिक इन्द्रियहरूले काम गर्नु छोड्ने छ जस्तै कानले शब्द सुनेता पनि केहि बुझ्दैन, आँखाले रूप राम्रो देख्दैन, आफ्नो अघि मान्छे आए तापनि मान्छेको आकार मात्र देखिन्छ तर को हो चिन्नु सक्दैन। नाकले गन्ध पाउन छोड्छ, जिब्रोले स्वाद पाउँदैन, शरीरले स्पर्श पाउन छोड्छ अनि कुत कुती लगाए पनि कुतकुती लाग्दैन। यस्तो प्रकारको चिनो पाएर आए मृत्युको प्रथम विच्छेदन हुने चिनो हुन्।

यसपछि आफ्नो बल घटेर जानेछ शरीरमा एउटै पनि शक्ति हुने छैन। यसकारण हामी उठ्न, बस्न पनि सक्दैन, हामी ठाड़ो बस्नु पनि सक्दैनौं, हाम्रो टाउको पनि थाम्नु सक्दैनौं, टाउको लुलो भएर जानेछ। हामी आफैलाई माटोमुनि भासिएको जस्तो लाग्छ, कुनै गहिरो माटोमुनि भासिएको जस्तो लाग्नेछ। शरीर एकदम गह्रौं-भारी हुनेछ। जस्तै नरम तोसक, डनलप, रूवामा राखे ता पनि कुनै सुविस्ता हुँदैन, अफठ्यारो हुनेछ। आफू तल झरेको जस्तो हुँदा कसैले मलाई माथि निकाल्नु, तान्नु भन्छ, सिरानी होचो भयो अलिक अल्गो लगाईदिनु भन्छ। सिरक, कम्बल ओड़ेको भए फ्याँक्ने गर्छ। अनुहारको ज्योति हराएर जानेछ। हाम्रा गाला भित्र पसेर जानेछ, दाँतमा कालो कालो दाग बस्नेछ। आँखा खोल्नु र बन्द गर्नु पनि सक्दैन यसरी रूप सबै विच्छेदन हुँदै जानेछ। आफूलाई अल्छी लागेर आउने छ। यस्तो प्रकारको चिनोहरू भएको कारण माटो तत्व पानी तत्वमा लीन (विलय) आएको हो।

हाम्रा शरीरमा भएको तरल पदार्थलाई आफ्नो अधीनमा राख्न सक्दैन जस्तै राल, सिगान आँसु आदि। यस बेला आँखाबाट आँसु आउछ, नाक

सुकेर सुक्खा हुन्छ यस अवस्थामा हामी छट्पटाउँछौ। कुनै कुरो पनि मनमा राख्न सक्दैन स्मृति शक्ति हराएर जानेछ। हामीले आफ्नो जिब्रो पनि चलाउनु नसक्ने हुन्छौ। आँखा पनि सुक्खा भएर भित्र पस्ने छ, मुख ओंठ, नाक सुकेर आउने छ त्यस समयमा तिर्खा लागेर चिसो पानी पिउन माग्ने छ। शरीर काम्नु थाल्नेछ, थाकेको जस्तो लाग्ने छ, आफूलाई झट्का लागेका जस्तो हुनेछ शरीर तानेको जस्तो लाग्नेछ। यस्तो प्रकारको चिनो भए मरणको दुर्गन्ध आउनेछ। शारीरिक चैतन्य, स्पर्शशक्ति विलीन भएर जानेछ अनि शारीरिक चैतन्य, स्पर्शशक्ति विस्तारो विस्तारो कम्ती कम्ती हुँदै अल्पँदै जानेछ। यस बेला सुख आनन्दबाट दुःख कष्टमा परिणत हुनेछ, गरम भए जस्तो ठण्डा भए जस्तो लाग्नेछ। हाम्रो मन धमिलो र अस्पष्ट भएर आउनेछ निराश हुनेछ। यस अवस्थामा हामी झर्को मान्छौं, झिंजो लाग्नेछ, केही भने पनि चाँड़ै रिसाउने छ, रिसाउने प्रकृतिको हुनेछ। अत्तालिएर, डराएर र तर्सिने प्रकृतिको हुन्छ।

अब यस अवस्थामा पानी तत्व आगो वा अग्नी तत्वमा विलीन भएर जानेछ यस बेला शरीरबाट वाफ उड़ेको जस्तो देख्ने छ।

हाम्रो मुख, जिब्रो र नाक सबै सुकेर सुक्खा भएर आउने छ। हाम्रो शरीरको ताप पनि हात र खुट्टाबाट बिस्तार बिस्तार चिसो चिसो हुँदै आउनेछ। यस बेला शिरबाट वाफ निस्केको जस्तो पनि देख्ने छ। हामीले श्वास फेर्दा, नाकबाट प्रवेश गर्दा एकदम चिसो लाग्ने छ। यस अवस्थामा हामीले केही पिउन र खान सक्दैनौं, खाए ता पनि पचाउनु सक्दैनौं कारण हाम्रो अनुभव शक्ति विलीन भएर केही बुझ्न नसक्ने हुनेछ। हाम्रो मन स्पष्ट, विमल र व्याकुल भएर आउने छ, हामीले आफ्ना शाखा सन्तानका नाम पनि बिर्सिन्छौ केही थाहा हुँदैन कसैलाई पनि चिन्दैन।

यस अवस्थामा अब अग्नि तत्व हावा वा वायु तत्वमा विलीन भएर जानेछ।

अब अन्तमा श्वास पनि छोटो छोटो हुँदै, श्वास फेर्नु साह्रो पर्नेछ। हावा हाम्रा घाँटीबाट निस्केर जानेछ। दम फुलेर स्याँ स्याँ हुनेछ, श्वास छिटो छिटो फेर्नेछ। भित्री श्वास छोटो छोटो हुनेछ बाहिरी श्वास फेर्दा लामो लामो हुनेछ। यस अवस्थामा हाम्रो आँखा उकालो हेर्नेछ अनि अचेत हुनेछ। हाम्रा मानसिक बुद्धि हराएर विलीन भएर सदाको निम्ति यो शरीरसंग बिछोड हुनेछ।

मानिस राम्रो र नराम्रो मृत्युको समयमा मात्र थाहा पाउने छ। यदि कुकर्म गरेको भए जस्तै मान्छे मारेको भए प्राणीहरूको प्राण लिने कसाई भए, गरीबहरूलाई अत्यचार गर्ने भए मृत्युको समयमा अत्यन्त भयभीत हुने, डराउने छ कारण उसको आँखामा डरलाग्दो यमदूतहरू देख्नेछ। यदि सुकर्म गरेको भए जस्तै, प्राणीहरू माथि दया, करूणा गरेको भए मृत्युको समय बोधिसत्वहरूको आशिष पाएर स्वर्गको देव देवीहरूको दर्शन भएर आनन्दसंग घिऊबाट केश निकालेको जस्तो सजिलोसंग मृत्यु हुनेछ। आकाशबाट बज्र झरे झैं आफूलाई मरणको रोगले ग्रस्त पारेर आउँदा आफ्नो बिस्तारामा थला पर्छ। आफ्नो काल आए; आयु सकिए भने कुनै वैद्यको औषधिले पनि निको पार्न सक्दैन। दशा ग्रहको निम्ति पूजा गरे तापनि काम लाग्दैन। जस्तै उपचार गरे तापनि उपाय लाग्दैन्। आफ्नो इष्टमित्र शाखा सन्तान वरिपरि बसे तापनि कसैले मृत्युबाट बचाउनु सक्तैन। मृत्यु जस्तो भयभीत र डर अरू कुनै पनि छैन। आफ्नो वरिपरि भएका इष्टमित्र कसैले पनि आफ्नो दुःख भोग्नु सक्तैन। अन्तिम मृत्युको समयको दुःख आफैले भोग्नु पर्छ र सहनुपर्छ। अघि आफ्नो शरीर स्वस्थ हुँदा

आफूले आफ्नो छोरा, छोरी, शाखा सन्तानको निम्ति राम्रो र नराम्रो कर्म गरेर धन रूपियाँ कमाएर पालन पोषण गऱ्यो। आफूले परिवार पालन पोषण गर्दा कति कुकर्म गर्नु पऱ्यो। यसरी पालन पोषण गरेको कर्मको फल आफैले मात्र भोग्नु पर्छ। आफूले कमाएर ल्याएको धन सम्पत्तिको मौज मजा अरूले गर्छ तर अन्तमा यसरी ओछ्यानमा मृत्युको रोगले ग्रस्त पार्दा आफ्नो दुःख पीड़ा बाँड्ने त कोही पनि हुँदैन। मेरो छोरा, मेरो छोरी मेरो शाखा सन्तान भन्छ तर अन्तमा मृत्युको मुखमा पर्दा आफ्नो भन्ने कोही काम लाग्दैन यस्तो समयमा के काम लाग्छ भन्दा अघि आफूले सुकर्म, धर्म गरेको छ भने यस्तो अन्तिम समयमा आफूले गरेको पुण्यले मात्र फाइदा गर्छ। "मेरो" भन्ने कुरो सबै झुटा रहेछ भने ज्ञान अन्तमा मात्र थाहा लाग्छ। यस्तो समयमा आफू उठन पनि नसक्ने ओछ्यानमा लड़ेर केही गर्न सक्तैन। खाना पनि खान सक्तैन, पानी मात्र निल्ने अवस्थामा हुन्छ। पानी पिउन त पिउँछ तर स्वाद केहि थाहा पाउँदैन। यस्तो अवस्थामा आफू बाँच्दैन भनि थाहा पाउँदा कसै कसैले अन्तिम वचन भनी राख्छ कसै कसैले त त्यो पनि गर्न सक्तैन। पानी पिलाउँदा बलैले अलि अलि निल्न त सक्छ तर पानीको स्वाद चाल पाउँदैन, के पियो के ? पानीको स्वाद न पाएको कारण हाम्रो नाभीमा अमृत हुन्छ त्यो अमृत सुकेर गयो भने मरणको प्रथम चरण हो। नाभीको अमृत सुकेर जाँदा पानीको स्वाद थाहा हुदैन्, हात खुट्टा सबै लुले, ललाक लुलुक भएर जान्छ। यस्तो हुँदा आफू मर्ने रहेछ भन्ने थाहा हुन्छ, आफूले अघि धर्म या पूण्य गरेको छ भने त आफूलाई कुनै डर नै हुँदैन तर पूण्य र धर्म त गरेको छैन खाली कुकर्म मात्र गरेको छ भने यस बेला ठूलो पश्चात्ताप हुन्छ र आफूले आफ्नो छातीमा हातले हिर्काउँछ र आँखाबाट आँसु झार्छ। आखिरमा पश्चात्ताप गरेर केही फाइदा हुँदैन, अघि गरेको कर्मको फल त भोग्नै पर्छ। यस्तो

अवस्थामा यमराजलाई घूस दिन पनि सक्तैन, मलाई मृत्युबाट छुटाई दिनु म तिमीलाई म जत्रो सुन दिन्छु भने पनि यमराजले घूस लिँदैन् । यमराजको मृत्युको डरबाट बचाउन सक्ने शक्ति पूण्यको मात्र हुन्छ । आफूले पूण्य कर्म गरेको छ भने प्राण जान सजिलो पर्छ, कस्तो भने घिऊबाट केश निकालेको जस्तो हुन्छ । प्राण जानु अति साह्रो छ कस्तो भने नङ चाहिँ मासुबाट निकाल्दा कतिको दुःख छ त्यो भन्दा ज्यादा दुःख हुन्छ । नङ र मासु जस्तो गरेर बसेको प्राण र शरीर हो । जीवन भर सगैं बसेको अन्तमा शरीर छोड्दा कतिको दुःख हुन्छ त्यो त आफैले अन्दाज गर्नु पर्छ । यस्तो अवस्थामा पुग्दा जीवन भर कुकर्म गरेको मनमा सम्फना हुँदा कुकर्मको फल भोग्ने डरले आँखामा पश्चातापको आँसु आउँछ । प्रथम नाभीको अमृत सुकेर आउँछ, यो अमृत सुकेर जाँदा हड्डीको जोड़नीहरूको शक्ति नाश भएर जान्छ र हात खुट्टाहरू सबै ललाक लुलुक भएर जान्छ यो मरणको प्रथम चिनो हो । पञ्च इन्द्रियहरू मेलैसित एक अर्कोमा लीन हुँदै जान्छ । आँखामा जाली लागेर आउँदा आँखाले देख्न छोड़छ, कानको विज्ञानले पनि सुन्न छोड़छ, नाकको विज्ञानले पनि गन्ध चाल पाउन छोड्छ, जिब्रको विज्ञानले स्वाद थाहा पाउदेन । शरीरको छालाले स्पर्श थाहा पाउँदैन । स्पर्श थाहा नपाउँदा कुतकुती लाग्दैन । जब पैतालामा कुतकुती लाग्दैन तब मान्छे बाँच्दैन भनी जान्नु पर्छ । संसार जसरी पाँच तत्वले बनिएको छ त्यस्तै नै हाम्रो शरीर पनि पाँच तत्वले बनिएको छ । माटो, ढुङ्गा, पानी, हावा र आगो । माटो र ढुङ्गा हाम्रो मासु र हड्डी हो, पानी रगत हो, आगो हाम्रो शरीरको तापमान हो, हावा हामीले श्वास फेरेको हो । पञ्च इन्द्रियमा लीन भई सकेपछि पञ्चतत्व मेलैसंग एक अर्कामा लीन हुँदै आउँछ । हाम्रो मासु र हड्डी, माटो र ढुङ्गामा लीन भएर जान्छ । मासु र हड्डी, माटो र ढुङ्गामा केहि फरक हुँदैन । रगत सबै पानीमा लीन भएर जान्छ तब रगत

र पानीमा केहि भिन्नता हुँदैन। हाम्रो तापमान आगोमा लीन भएर जाँदा आगो र तापमानमा केही भिन्नता हुँदैन जब श्वास हावामा लीन भएर जान्छ तब हावा र श्वासमा फरक हुँदैन र हाम्रो श्वास रोकिन्छ तब शरीर प्राणहीन हुन्छ। बाहिरी मृत्यु भए तापनि भित्री आत्मा शरीरमा नै रहेको हुन्छ। हाम्रो शरीरको तापमान आगोमा लीन भएर जाँदा हाम्रो शरीर चिसो ठण्डा भए आउँछ। यसरी हाम्रो आत्मा यो मृत्यु शरीरबाट निकाल्नु तीन दिनको समय लाग्छ। यसकारण मृत्यु शरीरको संस्कार तीन दिन पछि गर्नु उचित छ। हाम्रो मासु र हड्डी, माटो र ढुङ्गासंग लिन भएर जाँदा हामीले स्पर्शको शक्तिहीन भएर जान्छ। रगत पानीमा लीन भएर जाँदा आँसु र जिब्रो सुकेर आउँछ त्यस समय मर्ने मानिसले पानी पानी भनेर पानी माग्छ। श्वास हावासंग लीन भएर जाँदा श्वास फेर्न बन्द हुन्छ। जन्मेकोदेखि मृत्युसम्म सँगै बसेका साथी जस्तो यो शरीर र आत्मा अलग भएर आत्माले शरीर त्यागी राख्छ। आफ्नो नामसम्म मात्र गाँव घरमा स्मृति रहने छ। पिञ्जड़ामा जबसम्म चरा जस्तै सुगा, मैना रहन्छ, मुक्ति हुँदा पिञ्जड़ा खाली हुन्छ, चरा नभए पिञ्जड़ाको महत्व हुँदैन त्यस्तै आत्मा शरीरबाट निस्केर गएपछि मृत्यु शरीरको पनि केही महत्व हुँदैन। यो देख्न नसक्ने आत्मा एकलै अन्जान लोकमा आफ्नो कर्मको फल अनुसार जानुपर्छ। कर्मको फल अनुसार कोही नरक लोकमा, कोही प्रेत लोकमा, कोही पशु लोकमा जानु पर्दछ। यी तीन लोकमा जन्म लिए दुर्गतीको जन्म भन्दछ, कारण यहाँ जन्मनेहरू दुःख भोग्नु पर्दछ। मृत्यु शरीर नियमानुसार जलाउने, माटोमा गाड़ी दिने गिद्धहरूलाई खुवाउने नाना प्रकारले यो शरीर नष्ट भएर जान्छ। माटोभित्र भएको कीराले खाएर नष्ट हुन्छ। कसै कसैको शरीरलाई जंगली जानवरले खाएर नष्ट हुन्छ। कोही कोही पानीले बगाएर लान्छ। अन्तमा एक मूठ्ठी खरानी भएर चिनोसम्म मात्र रहनेछ। यस्तो

संसारी जीवन बाहिरी सुख तर भित्र चाहिँ दुःखै दुःखले भरिएको संसार कुनै महत्व नभएको बुझ्दा बुझ्दै पनि हामी यस संसारमा भुलेर बस्छौं। यसरी बाहिरी मजामा भुलेर बस्छौ भने यो मानव जीवन पाएको अर्थहीन हुन्छ। यस्तो अनित्यको नमूना बताए अनुसार एक दिन मर्नु पर्ने हो मम्फी आफ्नो मनमा गाड़ेर सम्फना राख्नु पर्नेछ। यस्तो महत्वपूर्ण मानवजीवन हो भन्ने मनभित्र याद गर्नुपर्छ। यस्तो स्मृति र सम्फना आफू जाँदा, खाँदा, बस्दा र सुत्दा सधैं गर्नुपर्छ कि हामी एक दिन मर्नु पर्छ, यो शरीर विनास भएर जाने हो, यस्तो किसिमको स्मृति गरेर आफ्नो चित्तलाई ठीक रूपले ध्यान गर्नु पर्छ। सधैं सर्व प्राणीको उद्धार र भलाई गर्ने सतकर्म गर्ने सद्विचार राख्नु पर्दछ। यसरी अनित्यको ध्यान गर्नु कोशिश गर्नुपर्छ। विस्तार विस्तार गर्दै आफ्नो चित्तको सत्कर्मपट्टि आकर्षित हुँदै जानेछ। हामी सबै एक दिन मर्नु पर्छ भन्ने ज्ञान आफूमा उत्पन्न नभई या त मर्नु पर्छ भन्ने विचार नराखी धर्म गर्नेहरू बाहिरी देखावटी धर्म मात्र हुन्छ। सांसारिक अष्ट धर्मदेखि अलग नभईकन या अष्ट धर्मदेखि मुक्ति नभएसम्म धर्मको सार बुभी असल धर्म गर्नु असम्भव हुनेछ। अथवा धर्म गर्नु सक्दैन। अष्ट धर्म यसप्रकार छ :-

१) धन सम्पत्ति पाउँदा खुशी हुने

२) धन सम्पत्ति नपाउँदा दुःखी हुने,

३) शारीरिक सुख भए खुशी हुने,

४) शारीरिक दुःख भए दुःखी हुने,

५) राम्रो वचन सुन्दा खुशी हुने,

६) कटु या नराम्रो वचन सुन्दा दुःखी हुने,

७) सत्कार गर्दा खुशी हुने,

८) निन्दा गर्दा दुःखी हुने।

यो चार राम्रो र नराम्रो जसले जे भने पनि सुख पाए पनि, दुःख पाए पनि, खुशी पनि हुनु हुँदैन दुःखी पनि हुनु हुँदन, बराबर रूपले पालन गर्नु पर्छ। यस्तो अष्ट धर्म रहित भए असल रूपले धर्म गर्नु सकिन्छ। सांसारिक अष्ट धर्मसित मिसिएको धर्म "मुखमा राम राम बगलीमा छुरा" जस्तै हो। असल धर्म गर्नेहरू यो अष्ट धर्म रहित हुन्छ। चञ्चल र अल्सी हटाई चित्त एकाग्र र जाँगरिलो बनाउने अचुक औषधि अनित्यको ध्यान गर्ने हो, कस्तो भने "म मर्नु पर्छ" भनि ध्यान गर्ने अचुक औषधि हो। जंगली जनावारलाई जमगी चाबुक लगाएर त्यस जन्तुलाई आफ्नो अधिनमा गर्छ। त्यस्तै यो मनलाई पनि धर्मको मार्गमा लगाउने चाबुक अनित्य ध्यान गर्ने हो। बुद्धज्ञान प्राप्त गर्नुको निम्ति मनमा भूमि मार्गको ज्ञान उत्पत्ति गराउने मुख्य कारण अनित्यको भावना र ध्यान गर्नु हो। "म मर्नु पर्छ" भन्ने ध्यान भावना र विचार सधैं गर्नु पर्छ, खाँदा बस्दा, हिँड्दा सुत्दा, सधैं नै यो अनित्यको ध्यान गर्नुपर्छ। यो अनित्यको ध्यान "म मर्नुपर्छ" भन्ने भावना गर्नु जस्तो अरू कुनै पनि यो भन्दा ठूलो ध्यान छैन्। यसरी कोशिश गरेर सधैं अनित्यको ध्यान गरे "मर्नु पर्छ" भनि नित्य ध्यान गरेर बसे, त्यस मानिसले अमरत्व प्राप्त गर्छ अनि बुद्धज्ञान प्राप्त हुन्छ। "मर्नु पर्छ" भनि ध्यान जसले ठीकैको गर्छ, अनित्यको ध्यान गर्नु त गर्छ तर ठीकैको कोशिशको ध्यान गरे त्यस मानिसले मर्ने समयमा हर्ष र आनन्द भई खुशी साथ प्राण त्य गर्छ। "मर्नु पर्छ" भनि कम्ति कोशिश गर्ने अनित्यको

ध्यान पनि ठीकैको गर्ने चाहिँ मर्ने समयमा केही पश्चाताप गर्नु पर्दैन, कस्तो भने अब म मर्ने रहेछु मैले राम्रो कुशल कर्म केही गरेको छुइन भन्ने पश्चाताप गर्नु पर्दैन। यसकारण हामी सबैले दिनमा एक पल्ट यो अनित्यको ध्यान गर्नु सके कुशल कर्म गर्नु मनमा उत्त्पत्ति हुनेछ, कारण मृत्यु सत्य हो मृत्यु संग सबै डराउँछ। कुशल कर्म गर्नु सकिन्छ।

## राम्रो र नराम्रो कर्म फलको बिऊ र फलको विषय :-

प्रथम नराम्रो कर्म फलको विषयमा शरीरबाट हुने नराम्रो कर्म तीन प्रकारको छ।

(क) हत्या (ख) चोर्नु (ग) स्त्री सम्भोग **दुर्व्याषहार**। बचनबाट हुने नराम्रो कर्म चार प्रकारको छ। (क) झुटो बोल्नु (ख) चुकली गरेर एक अर्कामा फूट या झगड़ा गराउनु। (ग) कटु बचन गाली गरेर अरूको चित्त दुःखाउनु। (घ) निन्दा गर्नु।

मनबाट हुने नराम्रो कर्म तीन प्रकारको छ।

(क) लोभ गर्नु (ख) इर्ष्या गर्ने र (ग) नास्तिकता। राम्रो कर्म गरे राम्रो हुन्छ, नराम्रो कर्म गरे नराम्रो फल पाउँछ भन्नेमा विश्वास नगर्ने।

मेलैसित यो दश नराम्रो कर्म मध्ये शरीरबाट हुने पापमा हत्याको विषय :-

प्राण भएको प्राणी मान्छेदेखि सानो सानो कीरा फटेंग्रासम्म ठूलो-सानो जुनै हत्या गरे तापनि प्राण हत्या गरेको पाप लाग्नेछ। तर शील पालन गर्ने भिक्षु (गेलोङ) ले मान्छेको हत्या गऱ्यो भने प्रतिज्ञा पालन नगरेको ठूलो पाप "फम्पा" लाग्ने छ। अनि भिक्षुको शील भंग हुने छ। तर मान्छे बाहेक

अरूको हत्या गरे पाप त लाग्छ तर शील भंग हुँदैन तर त्यो पापको प्रायश्चित गर्नुपर्छ। अरू पनि ठूलो सानु विवेकशील प्राणीको हत्या गरे, त्यस्तै प्रकारको पाप लाग्नेछ। कुनै व्यक्तिले आफ्नो माता या पिता या आफ्नो गुरु या अर्हत, कसैको हत्या गरे, ठूलो पाप लाग्नेछ, जुन पापको सीमा नै हुँदैन, त्यसलाई "छममेङा" भन्छ। यस्तो पाप गरेको मान्छे मृत्यु हुन साथ बज्र नर्कमा जन्म लिन्छ। बजनर्कमा जन्म लिए पछि त्यहाँबाट मुक्ति पाउन अति दुर्लभ छ। कारण बज्र नरकको आयु हजार हजार कल्प हुन्छ।

## हत्या तीन प्रकारले गरिन्छ :-

*१) लोभको कारणले २) रीसको कारणले अनि ३) अज्ञान वा मोहको कारणले।*

## १) लोभको कारणले हत्या गर्ने विषय :-

आफूलाई कुनै पशु पक्षीको मासु खानु इच्छा भएर हत्या गरिन्छ। हात्तीलाई दाँतको निम्ति हत्या गर्छ, गैड़ालाई सिङको निम्ति, बाघलाई छालाको निम्ति, यस्तै प्रकारले आफ्नो इच्छा भएको वस्तु पाउनुको निम्ति हत्या गरे, लोभको कारणले हत्या गरेको हो।

## २) रिसको कारणले हत्या हुने विषय :-

झगड़ा हुँदा या कुनै रिसको कारणले गर्दा कसैलाई हिर्काए मृत्यु हुनेछ। मार्छु भनेर त हिर्काएको हुँदैन तर कसै कसैको मृत्यु हुन्छ र यसलाई रिसको कारणले हत्या भएको भनिन्छ।

## ३) अज्ञानको कारणले हत्या हुने विषय :-

पशुको बली चढ़ाएर पूजा गर्छ, गाउँ घरमा पुरानो नियम भन्दै कुखुरा, बाख्रा, परेवा, हाँसको बली चढ़ाउँदै यसरी पूजा गरिन्छ धर्मको नाममा यी सब अज्ञानताको कारणले हत्या भएको भनिन्छ।

यी तीन प्रकारको प्राणी हत्या आफूले गरे पनि, कसैलाई हत्या गर भनि हुकुम दिए पनि, अरूले हत्या गरेकोमा आफू खुशी भए पनि, पाप सबैलाई बराबर लाग्नेछ। जजमानले कसैलाई प्राणी हत्या गर्ने हुकुम दिएर मारे औ त्यस पशुको मासु पकाएर, लामा, गुरुजन, भिक्षु संघ र इष्टमित्रहरूलाई निमंत्रण गरी तमासा देखाउँदै मन मौज गरी मासुको भोज खुब रमाई रमाई खुशीसंग खाए यसरी प्राणीको मासु खानु पाउँदा खुशी भए प्राणी हत्या गरेकोमा अवश्य खुशी हुने छ। यसकारण मासु खाँदा खुशी मान्ने, हत्या गरेको हर्ष हुने सबैलाई हत्या गरेको पाप लाग्नेछ। मासु खानु पाउँदा मात्रै पनि खुशी भए प्राणी हत्या गरेकोमा केहि फरक छैन। यसरी हत्या गरेर मासुको भोज खाने लामा, गुरुजन, भिक्षु, इष्टमित्र र जजमान सबैलाई हत्या गरेको पाप लाग्नेछ। यो भन्दा ठूलो पाप अरू के छ र ? "अहिंसा परमो धर्म" भन्ने सिद्धान्त कहाँ राख्ने ? कोही कोही गाउँ बस्तीतिर यस्तो प्रथा चलन भईरहेको छ कि गुरुजन, गुफामा जहाँ ध्यान गरेर बस्छन् घर गृहस्थीहरूले आफ्ना सन्तानहरूका वर्षीकर्म गर्दा, आफ्ना गुरुका वर्षीकर्म गर्दा, गणचक्र पूजा भएको समयमा, दशमी पूजामा मानिसहरूको चिन्ता उपकार गर्दा मृत आत्माको श्रद्धा गर्दा, भगबानूको पूजा, भिक्षु संघका सेवा गर्दा, धर्म ग्रन्थको पाठ गर्दा, ऋतु अनुकुल अनुसार उधौली र उभौलीको पूजा गर्दा आदि जस्तै पूजा गरे तापनि यस्तो तिथिमा पशु प्राणीलाई दया र करूणा गर्नुको बदली पशुमाथि हतियार चलाई प्राणीको प्राण लिन्छ। यसरी पुशु पंक्षीलाई काटेर प्राण लिँदा त्यस पशु

पक्षीहरूलाई कति दुःख र पीढ़ा हुन्छ त्यो त सबैलाई थाहा भएको कुरो हो। पशु पंक्षीहरू पनि मर्न त चाहँदैन, मृत्यु भन्दा सबै डराउँछ, मृत्यु जस्तो भय र डर अरू कुनै छैन, पशु-पंक्षीहरू पनि अब मार्छ भनी थाहा पाए डरले काम्नु थाल्छ, आँखाबाट आँसु निकाल्छ। यदि अरूको प्राण हत्या गर्दा आत्मा र शरीर सजिलैसंग छुटिने भए त ठीकै थियो, पशु पंक्षीको हत्या गर्नु केही हुने थिएन तर प्राण जाने समयमा कस्तो भय पीड़ हुन्छ त्यो आफैले अनुमान गर्नुपर्छ। जस्तै निष्ठुरी र कड़ा हृदय भएको मान्छे पनि मृत्यु भन्दा डराउँछ। यसरी पशु पंक्षीको हत्या गरेर, भगवान्को पूजा हो भन्दै रगत र मासु प्रसाद हो भनेर जजमान, लामा, गुरुजन, चेलाहरू, पाहुना सबैजना भेला भएर खुशी साथ मीठो मान्दै रमाउँदै भोजन गर्छ। तर त्यस पशु पंक्षीको आत्मा चाहिँ असाध्य दुःख पाउने दुर्गतिमा जन्म लिन्छ र त्यहाँ दुःख भोग्नु पर्छ र त्यसैको मासु चाहिँ मीठो मान्दै खुशीसाथ खान्छ, प्राय धेरै जस्तो लामा, गुरुजन, चेलाहरू र जजमानहरू निशा पानी मद मदिरा, रक्सी आदि पिउँदै मासु पनि खाँदै पागल जस्तो हुन्छ, यसरी निशा पानी पिउँदै पूजा गर्दा शोर पनि ठूलो ठूलो जोड़ जोड़ले कराउदै झ्यामटा र ढ्याङ्ग्रो पनि जोंड़ जोड़ले बजाउँदै लय र सुर मिलाउँदै यही पूण्य र धर्मको कर्म हो भन्दै कुकर्म गरी, नराम्रो दुर्गतिमा जाने कर्मको विऊ रोप्ने नीति फैलिएको छ। यसरी प्राणी हत्या गरी धर्म हुन्छ भन्ने प्रथा र नीति मुक्ति र स्वर्ग जाने बाटो बन्द गरेर दुर्गतिमा जन्म लिने मार्ग सफा गरेको हो। यस्तै कुप्रथा र कुनीतिको कारणले चाहिँ बौद्ध धर्मको शासन नष्ट हुने र अल्पिनुको स्पष्ट चिन्ह देखाएको हो। भगवान् बुद्धको मूल सिद्धान्त नै अहिंसा हो। समस्त बुद्धहरूले सर्व पशु प्राणीहरूलाई पुत्र समान प्रेम स्नेह र माया गर्छन्, सर्व प्राणी माथि नित्य करूणाको दृष्टीले हेरिरहनु हुन्छ। यसरी सर्व प्राणीलाई नै हत्या गरेर भगवान्लाई चढ़ाए

कसरी खुशी हुन्छ त्यो त भगवान्को सिद्धान्त र हृदयमा चोट पुऱ्याएर नून र खोर्सानी लगाए जस्तो हुनेछ। यसरी प्राणी हत्या गरेर भगवान्लाई पूजा चढाएको छोराको हत्या गरेर उसैको आमालाई छोराको मासु दिए, आमाले कसरी खान सक्छ र ? आमा खुशी हुनको बदली त उसको हृदयमा कतिका चोट लाग्ने छ त्यो त आफैले नै अनुमान लगाउनु सकिन्छ। आमाको अघि आफ्नो छोरालाई मारेर छोराको मासु पकाएर आमालाई खान दिए आमाले खान सक्छ र ? जस्तै भोके भए तापनि आमाले छोराको मासु खान सक्तैन, तिनको हृदय चूर चूर भएर असाध्य दुःख र पीड़ामा परेको हुन्छ। त्यस्तै नै भगवान्को हृदय पनि यसरी नै चूर चूर भएको हुन्छ, खुशी कसरी हुन सक्छ ? यसरी पशु प्राणीको हत्या गरी गुरु र भिक्षु संगलाई भोजन दिएको त शुद्ध होइन अशुद्ध भोजन हुनेछ। प्राणी हत्या जस्तो ठूलो पाप अरू के छ र ? यस्तो प्रथा त कालो बोन (झाँक्री) को असभ्य धर्म भन्दा केही फरक छैन। भगवान् बुद्धले वाणी गर्नु भएको छ कि "सर्व प्राणी हाम्रा माता पिता हुन्, सर्व प्राणी पूर्वजन्मका माता पिता नभएको कुनै पनि छैन। यही जन्मका माता पिताले हामीलाई जतिको गुण गर्नु भएको छ त्यतिकैनै सबै प्राणीले हामीहरूलाई पूर्वजन्ममा माता पिता भई गुण गरेका छन्। यस्तो गुणकारी माता पिता समान प्राणी हत्या गरे कसरी कुशल धर्म हुन्छ ? जस्तै निष्ठुरी मानिस भए पनि आफ्नो प्राणको त माया लाग्छ, आफ्नो शरीरमा सानु काँड़ा घोंचेसम्मको दुःख त भोग्नु इच्छा गर्दैन, काँड़ाले घोंचेको पीड़ा पनि सहनु इच्छा गर्दैन। जति सक्दो आफूलाई कसरी सुख हुन्छ र सुख मात्र इच्छा गर्छ। यसकारण आफ्नो प्राण र शरीर जस्तो, अरूको पनि त्यस्तै हो भनि सम्झनु पर्छ। आफूलाई जस्तो सुख चाहिन्छ अरू प्राणी सानु भुसुना देखि हात्तीसम्मको जन्तुले पनि सुख नै इच्छा गर्छ। आफूले सानु दुःख पीड़ा सहन पनि इच्छा गर्दैन भने

अरू प्राणीले पनि दुःख पीड़ा महनु इच्छा गर्दैन। आफूलाई कसैले मार्नु आए आफ्नो प्राणको कस्तो माया हुन्छ, कतिको डर हुन्छ मृत्युको त्यस्तै नै यस भवसागरमा भएका सबै पशु प्राणीहरूलाई आफ्नो प्राणको माया हुन्छ साथै मृत्युसंग सबै प्राणी नै डराउँछ। कोही कोही गाउँ ठाउँमा यस्तो पनि छ कि अष्ट शील मौन व्रत (न्युइने) बाट निस्कन्दा धर्म उपदेश दिईसक्दा, शरण गमण (क्यापडो) सकिँदा, गुफा बसेर निस्कँदा, दश करोड मणीजप सकिँदा, यस्तै धर्म कार्यहरू सकियो भनी, भगवान् बुद्धलाई पूजा गर्नु पर्छ भनी पशु प्राणीको हत्या गऱ्यो अनि भोजन गर्छन्। यो नराम्रो नीति हो, सुकर्म होइन कुकर्म हो। यस्तो नीति अझै पनि कति ठाउँमा गाउँबस्तीतिर चलिरहेको छ। यस्तो गर्नाले धर्म त हुँदैन अधर्म हुनेछ। भगवान् बुद्धको धर्म शासनको विपरित हुन जान्छ। यस्तो कुमति, कुकर्मले बौद्ध धर्म शासन बिग्रेर जानेछ, नाश भएर जानेछ। त्यसकारण पशु प्राणीमाथि मैत्री करूणा र दया राखी अबदेखि यस्तो कुनीति गाउँ बस्तीका गुरुजन लामा, पण्डितहरूले हटाउन पर्छ, यस्तो कुनीति बन्द गर्नु कोशिष गर्नुपर्छ र बौद्ध शासनको रक्षा गर्नुपर्छ।

महायान धर्ममा यस्तो पनि छ कि गणचक्र र धर्मपालका पूजा गर्दा मासु चाहिन्छ। कस्तो मासु भन्दा आफ्नै काल गतिले मरेको पशु पक्षी जे जस्तोको मासु भए पनि हुनेछ। आफ्नै काल गतिले मरेको मासु एकदम चोखो मासु हो तर पशुप्राणीको हत्या गरेको मासु होइन, हत्या गरेको मासु त अशुद्ध हो, यसरी काल गतिले मरेको प्राणीको मासु भन्दा अरू कुनै चोखो हुँदैन यस्तै प्रकारले विधि पुराउनु पर्छ। पशु प्राणीको हत्या गरेर धर्म गरेको उत्तम फल पाउनु त परै जावस, बुद्ध धर्म र संघको शरण गमनको शिक्षा मोक्ष सुत्र, बोधिचित्त र गुह्य तांत्रिक जम्मै शीलको शिक्षा

गलत, भूल हुनेछ। अनुचित शिक्षा हुनेछ। त्यसैले भगवान् बुद्धका आनन्दमय हृदय सामु प्राणीको हत्या गरे बौद्ध सिद्धान्तमा गलत र भूल हुनेछ कुकर्म सञ्चय गरी दुर्गतिमा जन्म लिनेछ, मुक्ति पाउन त परै जावस मनुष्यको जन्म पनि पाउन गाह्रो छ। प्राणीहत्या गरी धर्म गर्नेहरूले प्रथम त्रिरत्नको शरण गमनको ज्ञान पनि पाउँदैन, शरण गमनको शिक्षा र ज्ञान नपाए बुद्धिष्ट हुन सक्दैन, बुद्धिष्ट नभए सम्भार मार्ग, प्रयोग मार्ग अशैक्ष मार्ग दर्शन मार्ग भूमि मार्ग अनि बुद्ध ज्ञान पाउन सक्दैन। आफ्नोमा भएको अविध्य हटाउनलाई ज्ञान पाउन अति जरूरी छ। अज्ञानता हटाउन सक्ने शिक्षालाई ज्ञान भन्दछ। यस्तै कुप्रथा कुनीति, नराम्रो नियम हटाउनका निम्ति ज्ञान चाहिन्छ।

## लोभ र नाफाको निम्ति हत्या हुने विषय :-

सबै प्राणीको प्राण एकै प्रकारको हो तरै पनि धेर जस्तो प्राणीहरू नाफा फायदा र पैसाको लागि मर्नु पर्छ। कसाई र मासु बेच्ने व्यापारीहरूलाई केवल नाफा र पैसासंगमात्र मतलब हुन्छ, पशु प्राणीको प्राणमाथि उसले केही विचार राख्दैन प्रथम राख्न पनि चाँहदैन। यस्तो कुकर्मी पापिष्टहरूले पशु प्राणीलाई टाड़ा टाड़ा हिँड़ाएर दुःख दिँदै खाना, दाना त परै जावस् पानी समेत पनि पिउन नदिई कसाई खानामा पुऱ्याउँछ। यस्तै प्रकारले अघि तिब्बत देशबाट चौरीगाई, याक, भेड़ा बाख्रा धेरै पशुहरू महीना दिन लगाएर बाटोमा खाना, दाना पनि भरपेट नदिइ पिट्दै हिर्काउँदै, असाध्य दुःख दिँदै नेपालमा ल्याइ पुऱ्याउँथे। नेपालमा ल्याई पुऱ्याउनसाथ धिच्रोमा छुरीले प्रहार गरी प्राण लिई मासु बेची नाफा गर्थे। त्यस्तैं प्रकारले आजकल भारतवर्षमा पनि धेरै देख्न र सुन्न पाईन्छ। दिल्ली, बम्बई, कलकत्ता जस्तो ठूला ठूला शहरमा पशु प्राणीको कतिको हत्या हुँदैछ भने आठ मई

१९९४ को टेलिग्राफ म्यागाजिन ("The Telegraph Magazine") मा यस्तो प्रकारको उल्लेख गरिएको छ "दिल्लीको इदग भन्ने कसाई घरमा दिनमा भैंसी गाई, गोरू बाख्रा तेह्र हजार पशुको हत्या हुन्छ। कसाई घरमा दिनमा 13000 litres (तेह्र हजार) लिटर खुनको नदी बग्छ। त्यस कसाई घरमा एक सय कसाईहरूले काम गर्छ हत्या गर्ने। पशुहरूको घि ्रोमा दुइ जग्गामा छुरीले अलिकति मात्र रेटिदिन्छ त्यसपछि त्यस पशुलाई अर्को पशुमाथि फ्याँकि दिन्छ। प्रायः आधा घण्टासम्म प्राण नगई असाध्य दुःख र पीडा सहेर अन्तमा कठिनतासाथ प्राण त्याग्छ। कतिको त प्राण नगई कन नै छाला निकाल्छ र पनि प्राण जाँदैन र कतिबेरसम्म त्यसरी नै दुःख सहेर मर्नुपर्छ। यस्तो दुःख आफैले भोग्नु पर्दा कतिको दुःख छ। यस्तो दुःख भएको तपाईहरू आफै कसाई घरमा गएर हेरे तब थाहा लाग्ने छ। यस्तो कुकर्म र पाप गर्नेहरू चाहिँ पछि मृत्यु भएर अग्नी कुण्डको नरकमा भोग्नु पर्छ।

भोट (तिब्बत) **देशमा** चौरी गाईको गोठाला र मालिकहरूले चौरी गाईको बच्चालाई आफ्नो माऊको दुध दिँदैन कारण बच्चाले दुध खायो भने दुधबाट घिऊ कम्ति हुने हुनाले, त्यस बच्चालाई दुध खानु नदिइकन मार्छ, कि त कुटेर मार्छ कि त छुरीले रोपेर मार्छ। बाछा नभए दुध सबै धुएर घिऊ बनाउँछ अनि बिक्री गर्छ। त्यो पनि हत्या गरेर नै पैसा कमाउँछ। यस्तो कर्म पनि राम्रो होइन। यस्तो प्रकारको कुकर्म गर्नेहरू राक्षस नै हो। राक्षस भन्दा केहि फरक छैन्। यस्तो प्रकारको कुकर्म गरेको त नरकको यमदुतले निम्तो दिएको जस्तो हो। आफू मात्र नरक जाने कम होइन। आफू त कूकर्मको फल भोग्न नरकमा जन्म लिन्छै लिन्छ साथमा आफना शाखा सन्तान सबैले भोग्न पर्छ। यस्तो कुकर्मको फल पूस्ता पूस्तासम्म

भोग्न पर्नेछ। यस्तो प्रकारको कुकर्म गर्नाले नरक जाने बिऊ रोपेको हो। जसले यस्तो प्रकारको कुकर्म गर्छ, त्यो मानिस बसेको ठाउँ गाउँमा शहर जहाँ बसेको हुन्छ, त्यस ठाउँमा अशुभ अशान्ति दुःख बिमार, यस्तै प्रकारको नराम्रो चिनो हुन्छ। ठीक समयमा वर्षा हुँदैन, अन्न बालीमा पानी नभए खडेरी लाग्छ, यस्तो नराम्रो चिनो पाइन्छ। यसकारणले हाम्रा समाजमा रहेका पण्डित, ज्ञानी पुरूष, गुरुजन र लामाहरू सबै भएर यस्तो प्रकारको हिंसा गर्ने, हत्या गर्ने, कुकर्म हटाउने र रोक्ने कोशिष गर्नु पर्छ। यस्तो कुकर्म गर्नुबाट बचाएर नरकको जन्मबाट पनि बचाउनु पर्छ।

## खेती किसान गर्दा हत्या हुने विषय :-

मधेश खण्ड जहाँ गर्मी हुन्छ र पूर्वमा भोटाङ, अनि नागाको देशमा खेती किसान गर्दा यस्तो प्रकारको छ प्रथम खेती बनाउँदा जंगलमा आगो लगाएर सबै झार पात डड़ाएर मैदान तयारी पार्छ। यसरी जंगलमा आगो लगाउँदा त्यहाँ हजार हजार कीराहरूको हत्या हुन्छ। त्यति मात्र होइन खेती तयार गर्दा कति कति कीराहरू मार्छ। खेती किसानको काम गर्दा यदि प्राणीको प्राण हत्या हुन्छ भनी गन्ती गरी साध्य छैन। खेती किसानको काममध्ये धानको खेती गर्दा ठूलो पाप लाग्ने रहेछ। कारण धान रोप्ने समयमा ठूलो पूण्यको तिथि पर्छ, भगवान् बुद्धले बुद्धज्ञान प्राप्त गरेको जन्मेको र निर्वाण भएको तिथि पर्छ। धान गोड़ने समयमा भगवान् बुद्धले धर्म चक्र प्रवर्तन गर्नु भएको तिथि पर्छ। धान काट्ने समयमा स्वर्ग अवरोहण तिथि पर्छ। धान रोप्दा पनि धेरै कीरा फटेंग्रा मर्छ, गोड़दा पनि धेरै कीरा मासिन्छ, धान काटदा पनि धेरै कीरा फ़टेंग्रा मारिन्छ। अरू समयमा खेती गर्दा प्राणीको हत्या भएको र यी तीन पूण्य तिथिमा हत्या भएकोमा धेरै फरक पर्छ। कारण पूण्य तिथिमा कुनै एक धर्म गरे त्यसको

फल पनि लाखौं ठूलो पाउँछ। कुनै एकको हत्या गरे त्यसको फल पनि लाखौं ठूलो पाउने छ। एक प्राणीको प्राण लिए लाखौं प्राणीको प्राण लिएको पाप लाग्नेछ। यसकारण यी तीन पूण्य तिथिमा धान रोप्दा, गोड़दा र काट्दा अनगन्ती प्राणीको प्राण हत्या हुन्छ त्यसको फल पनि नरकमा जन्म लिनं पर्छ। यस्तो पूण्य तिथितिर प्राणीको प्राण हत्या गरे दश लाख प्राणी हत्या गरेको पाप लाग्नेछ। पूण्य तिथिमा हत्या भएको हुनाले एक प्राणी हत्या गरेको फल एक कल्प नरकमा भोग्नु पर्छ। एक प्राणी मारेको बदली आफू पाँच सय पल्ट मर्नु पर्छ। यसरी हामी जन्मँदै फेरि मर्दै गरेर पाँच सयपल्ट जीवनको बदली जीवन ऋण तिर्न पर्ने छ भनि सुत्र पिटकमा भगवान् बुद्ध स्वयंले बताउनु भएको छ। यसैले गर्दा धानको चामल खानु ठूलो पाप छ भनेको हो। यस्तो प्रकारको काम महिना र वर्ष मात्र होइन तर जीवन भर यस्तै किसानको काम गर्नु परेको कारणले अनगन्ती प्राणीको हत्या गरिन्छ र विचारा किसानहरू सय कल्प नरकमा दुःख भोग्न पर्छ। तसर्थ हामीहरू चामलको भात खानेहरूलाई पनि पाप लाग्छ। अन्नमध्ये धान अति कष्टसाथ उप्जाई एक दाना धान बराबर एक प्राणी भन्दा ज्यादाको प्राणी हत्या भई त्यसैको रगतबाट उप्जाऊ हुन्छ। यसरी उप्जाऊ भएको हुनाले भात खानु ठूलो पाप छ कि कोर पर भोजन भन्दा पनि ठूलो पाप लाग्ने छ चामलको भोजन गर्नेलाई। यसरी भात खाँदा आफूले जति जानेको पाप काट्ने मंत्रजप्नु पर्छ। अघि धान रोप्दा, काट्दा र गोड़दा जति कीरा मारिएको छ ती प्राणीहरूका नाममा खेतीकिसान गर्ने कृषकर व्यापारी सबैको नाममा हामीले प्रार्थना गर्नुपर्छ। सबैको पाप काट्ने विधि जे जति छ हामीले प्रार्थना र सबै प्राणी मुक्ति होस भनि संकल्प गर्नु पर्छ।

अरू पनि पूर्व भुटानमा बस्ने डुकपाहरूले अरण्डी लुगा बनाउने

काम गर्छ। त्यो लुगा कीरा मारेर त्यसको खोलले तयार गर्छ। एउटा लुगा बनाउन हजारौ कीराको हत्या गरी लुगा तयार हुन्छ। फेरि त्यसमा रंग लगाउनको निम्ति 'छोग सिङ" भन्ने काठ चाहिन्छ, त्यो काठको सानु बुढी औंला जत्रोमा पनि धेरै कीरा मर्छ। यसले हजारौं कीरा मारेर त्यसको रंग तयार गर्छ। यसरी कीरा मारेर अरण्डीको लुगा बनाउने काम गर्दा पनि ठूलो पाप हुनेछ।

## अघि पछि पनि अन्जानमा प्राणी मारिने विषय :-

अन्जानमा प्रांणीहरूको हत्या कसरी हुन्छ भने घरको ढोका, भित्ता, पानी बग्ने ठाउँमा भिजेको काठमा, टट्टी पिसाब गर्ने घर सफा गर्दा मात्र पनि अनेकौं कीरा मर्छ यसरी हिँड़दा, बस्दा, खाँदा कीरा र भुसुना जस्तो प्राणीको हामीद्वारा हत्या नभएको एक दिन पनि छैन। मसिनो प्राणी त दिनहुँ हाम्रो पैताला मुनि कुल्चेर मर्छ। यस विषयमा अघि एक सिद्ध प्राप्त भएको लामा डुकपा कुइन लेगले भन्नु भएको छ कि गरमी जग्गा मधेश खण्डमा तीन वर्ष या तीन बर्ष भन्दा ज्यादा बसे, मृत्यु पछि नरकमा जन्म लिनु पर्नेछ। गरमी जग्गा या गरम महिना तिर गरमीको कारणले गर्दा कीराहरू धेरै उत्पत्ति हुन्छ। यसरी धेरै मसिनो मसिनो कीरा जमीन बाटोतिर हुन्छ र हामीले अन्जानमा हजारौं कीराहरू मार्छौं, यसरी प्राणी हत्या सधैं भएको कारणले हामी पछि नरकमा जन्म लिनेछौं भन्ने कुरो साँचो रहेछ भनी भन्नु भएको थियो। मधेस जहाँ ज्यादा गरमी हुन्छ त्यहाँ गर्मीको कारणले धेरै कीराहरूको जन्म हुन्छ। मैला जग्गामा केही चिज कुहेर त्यहाँ हजारौं कीराको जन्म हुन्छ। गर्मीको समयमा जब पानी पर्छ प्रायः जहीँ तहीँ मैं हजारौ लाखौं कीराको उत्पत्ति हुन्छ। यसरी ती कीराहरू अन्जान या जानेर पनि मर्छ या मारिन्छ, यसरी दिनै पछि हजारौं कीराको

हत्या हामीद्वारा हुन्छ। महिनामा त कड़ोरौं अरब अरबको प्राण हत्या हामीबाट हुन्छ। यसैकारण तीन वर्ष गरमी देशमा बसे हामी नरकमा जन्म लिने रहेछ भन्ने कुरो साँचो रहेछ भनी महासिद्ध गुरु डुकपा कुइन लेग लामा ज्यूले अभिज्ञानद्वारा भन्नु भएको छ। मैला फोहोर र दुर्गन्धको कारणले लाखौं कीरा उब्जन्छ, यसकारण हामीले आफू बस्ने ठाउँ र घरछेऊ पाइखाना सधैं सफा राख्नु पर्छ। पाइखानातिर खरानीको धुलो छर्की दिनु पर्छ। यसरी खरानी लगाई दिए कीरा उत्पत्ति हुँदैन। आजकल त कीरा उत्पत्ति नहुने सफा गर्नुको लागि धेरै किसिमको दवाई पाउँछ जस्तै फिनेल इत्यादि। यसरी आफू बस्ने वरीपरि सफा गरेर बसे कीरा उत्पत्ति हुँदैन र हामीबाट प्राणीको हत्या हुँदैन। यसरी प्राणीको हत्या नभए हामीलाई पाप लाग्ने छैन नराम्रो कर्मबाट हामी बाँच्नेछौं। कतै हामीबाट कुनै पनि प्राणीको हत्या भए त्यसको फल त्यस्तै प्रकारले भोग्न पर्छ।

## प्राणी हत्या गरेको फल भोग्न पर्ने विषय :-

जस्तो सुकै हत्या गरे तापनि त्यसको फल त्यस्तै अनुसार पापको फल भोग्नु पर्नेछ। चौरी, याक, गाई गोरू, भैंसी इत्यादि ठूलो ठूलो जीव जन्तु हत्या गरे पाप पनि ठूलै लाग्ने छ। ठूलो पाप गरेको अनुसार नरकमा जन्मेर दुःख भोग्नु पर्छ। सुंगुर, बाख्रा, भेड़ा, चरा, कुकुर, मृग इत्यादि प्राणी हत्या गरेको पापको फल "दुइ जोम" (जम्मा, या भेला हुनु र सबै नष्ट हुनु) भन्ने नरकमा जन्म लिनेछ। यो नरक गरम नरकको तीन नम्बरको नरक हो। दुइवटा विशाल फलामको पर्वतको विचमा कर्म अनुसार जन्म लिन्छ अनि ती दुइ पर्वत एक अर्कोमा जोड़िन्छ। अनि त्यहाँ जन्मेको प्राणी दुइ पर्वतको बीचमा चेप्टेर धुलो पिठो हुन्छ तर आफू मर्नु मर्दैन।

त्यो पर्वत फेरि छुटिन्छ आफू फेरि जम्ताको त्यस्तै हुन्छ। यस्तो प्रकारको असाध्य दुःख भोग्नु पर्छ। नरकको आयु पनि कल्प कल्प हुन्छ। हामीले जस्तो जीव जन्तु हत्या गर्छौं त्यस्तै जीवजन्तुको अनुहार भएको फलामको पर्वतको बिचमा जन्म लिनुपर्छ। जस्तो कि गोरू मारेको फल यस नरकमा भोग्नु परे गोरूको अनुहार भएको विशाल पर्वतको माझमा जन्म लिन्छ। आफ्नो शरीर पनि विशाल रूपले जन्म लिन्छ अनि ती दुइ पर्वतले आफूलाई चेप्टाउँदै ल्याउँछ, यसरी चप्टिएर आफ्नो शरीर धुलो पिठो पारिदिन्छ तरै पनि मर्दैन यस्तो प्रकारको दुःख कल्प कल्प भोग्नु पर्छ। माछा औ पानीभित्रको जीव जन्तु हत्या गरेको फल "छुवो रबमे" भन्ने नरकमा जन्म लिन्छ। यो नरक ठूलो बैतरणी नदी भन्छ। त्यस नदीमा पानी हुँदैन तर फलाम काश ताँबा किट बिलिएको तरल पदार्थ हुन्छ। त्यो पनि उम्लिएको उम्लिएको हुन्छ। यस्तो तातो गरम  नदीमा जन्मेर दुःख भोग्नु पर्नेछ। त्यहीँ फलाम बिलाएको तातो उम्लिएको झोल मुखबाट खुवाईदिन्छ। यस्तै नदीमा भात पकाएको जस्तो गरी कल्प कल्पसम्म असाध्य दुःख भोग्नु पर्छ। जसरी चामल उमाल्छ भात पकाउँदा त्यसरी नै आफू पनि चामल जस्तै उमालिनु पर्छ। मैदान, जंगल, भस्मे, पाखाभित्ता इत्यादि तिर डड़ेलो या आगो लगाईदिए या आफैले नगरी अरूलाई आदेश दिएर डड़ेलो लगाएर त्यहाँ लाखौं प्राणीको हत्या हुन्छ। मसिनो भूसुना कमिला कीरा देखि लिएर चरा चुरङ्गी, जंगली जन्तुहरूको प्राण हत्या हुन्छ। यसरी आगोले जलेर असाध्य पीड़ा र दुःख भएर आखिरमा प्राण जानेछ। यस्तो प्रकारले अरू पशु प्राणीलाई दुःख दिएर प्राण लिएको कर्मको फल "छ ङ्याल" वा "तापन"नामक नरकमा जन्मेर कल्प कल्पसम्म दुःख भोग्नु पर्नेछ। तापन नरकमा आगोको कुण्डभित्र जन्मेर त्यही कुण्डभित्र कल्प कल्प आगोले जलेर बस्नु पर्छ तरै पनि मृत्यु हुँदैन। जबसम्म आफ्नो कर्मको फल सकिँदैन त्यति बेलासम्म

असाध्य आगोले पोलेको दुःख भोग्नु पर्नेछ। आफ्नो निम्ति भोजन या मासु खानुलाई हत्या गरे अनि प्राणीको हत्या गरी पूजा गर्ने, दान गर्नेहरू आफ्नो कर्मको फल अनुसार नरकमा जन्म लिनुपर्छ। त्यहाँ भएका डरलाग्दो नरकबासीले खाईदिन्छ फेरि जन्मछ फेरि खान्छ, यस्तै प्रकारले जन्मिबस्छ अनि दुःख भोग्नु पर्छ। साँप, बिच्छी इत्यादि मारेको पापको फल नरकमा जन्मेर त्यही जन्तुको रूप भएर नै आफूलाई टोकेर-टोकेर अति दुःख हुन्छ तर मर्नु सक्दैन। जुम्रा, लिखा, मच्छर, उपियाँ इत्यादि मारेको कर्मको फल सङ्घात नामक नरकमा जन्म लिनपर्छ। दुइवटा ठूलो ठूलो पर्वतको बिचमा पर्वत जत्रो शरीर भएर जन्म लिनुपर्छ। त्यो दुइ पर्वत पनि फलामको तिखो तिखो दाँत जस्तो काँड़ा भएको हुन्छ। ती दुइ पर्वतले त्यस प्राणीलाई निचोरेर धुलो पार्छ। जबसम्म कर्म सकिँदैन तबसम्म दुःख भोग्न पर्छ। चामल, गहूँ अरू अन्नमा उत्त्पति भएको प्राणी अनि मासुमा परेको किराहरूको प्राण हत्या गरे फलामको ओखली जल्दै गरेको मुसलीले कुच्याउने नरकमा जन्म लिएर अत्यन्त दुःख भोग्नु पर्नेछ।

जंगली जन्तु, मृग इत्यादि प्राणीहरूको हत्या गरे या हत्या गरेको पाप अनुसार तापन नामक नरकमा जन्मनु पर्छ। त्यहाँ जन्मेर नरकको कुकुरहरूले टोक्दै चिथार्दै अत्यन्त दुःख भोग्नु पर्छ। नरकमा यहाँ जस्तो कुकुर हुँदैन त्यहाँ फलामको कुकुर हुन्छ। त्यस कुकुरले आफ्नो शरीर टोकी टोकी सबै मासु खाई सक्दा पनि आफू मर्नु सक्दैन फेरि शरीरमा मासु पलाइहाल्छ, यस्तै प्रकारले दिन रात कुकुरले टोकेको टोकेकै गर्ने दुःख कल्प कल्पसम्म भोग्नु पर्छ। यस्तो प्रकारले नरकमा दुःख भोग्नु पर्नेछ भनी भगवान बुद्धले काग्युर ग्रन्थको स्मृत्युपस्थान भन्ने सुत्रमा बृतान्त रूपमा वर्णन गर्नु भएको छ। यस्तो प्रकारले प्राणी हत्या गरेको अरू प्राणीलाई

दुःख दिएको, धेरै प्रकारको कुकर्म गरेको फल पाकेर आफ्नो कर्म अनुसार प्रथम नरकमा जन्मेर अत्यन्त दुःख भोग्नु पर्छ। नरकको दुःख भोगी सकेर पछि फेरि मानिसको जन्म पाए हेतु अनुकुलको फल मानिसको जन्ममा भोग्नु पर्छ। मानिसको जन्म भए तापनि आयु छोटो हुने, कुरूप जन्म हुने, कोड़को रोग लाग्ने जन्म देखि नै अनेक नराम्रो रोग लाग्ने हैजा जस्तो रोग व्यापक रोक महामारी सरूवा रोग, विषमज्वर यस्तै प्रकारको रोग लागेर रोगी भएर जिउनु पर्छ। यसको फल चाहिँ कुलक्षण भएको गाउँ या देशमा जन्म लिनेछ। कुलक्षण धेरै प्रकारको हुन्छ समयमा पानी या बर्षात नहुने अन्न पात पाकेर टिप्ने समयमा असिनाले सबै नष्ट गरी दिने, मनमा कहिले शान्ती नहुने यी सबै कुलक्षण हो।

त्रिधातु भवसंसारको सबै प्राणीलाई आफ्नो प्राणको माया हुन्छ, आफ्नो प्राणको माया नभएको केही पनि छैन। जम्नै निष्ठुरी हत्या भएको मानिस या हिंस्रक जानवरलाई पनि आफ्नो प्राणको माया हुन्छ। आफ्नो प्राण भन्दा प्यारो यस संसारमा अरू केहि हुँदैन। आफ्नो प्राण सबैलाई प्यारो हुन्छ, यस विषयमा आफैले विचार गर्नुपर्छ। त्यसकारण अरू प्राणीको प्यारो प्राण हत्या गरे कतिको कुकर्म हो ? पाप हो ? त्यो आफैले विचार गर्नुपर्छ। अरूको प्यारो प्राणहत्या गरे त्यो भन्दा ठूलो अरू पाप केही छैन। यसैकारण भगवान् बुद्धले प्राणीहत्या या हिंसा नगर्ने आज्ञा गर्नु भएको हो। यसैले **अहिंसा परमो धर्म** भन्नु भएको हो। तसर्थ अहिले सबै जना कुकर्म संचय गर्ने, नराम्रो पाप कर्ममा मन गर्ने समय नै यस्तो भएको हुनाले प्राण हत्या जस्तो कुकर्म गरेको फल महादुःख भोग्नु पर्ने प्राणीहरू माथि दया र करूणाको भावना लिएर पाप प्रायश्चित र पाप काटिने उत्तम धर्म र उपाय देखाएर बताएर, पालन गर्नु लगाएर दुःखबाट मुक्ति

गराउने चेष्टा गर्नुपर्छ। पाप प्रायश्चित र पाप काटिने उत्तम धर्म र उपाय मौन ब्रत शील (न्यूईने) जस्तो ठूलो अरू कुनै पनि छैन। कुकर्म गर्ने प्राणी माथि दया र करूणाको दृष्टी राखी करूणामय गुरुजनले शान्तिप्रवृत्ति धर्म बुद्धि या क्रोधी रूप देखाएर, जस्तो प्रकारको कुनै पनि उपायले बंद गर्दै प्राणी हत्या हुने काम रोक्न पर्छ, यदि धर्म या कुशल कर्म गर्दा हत्या गर्नु परे त्यो धर्म नै नगर्नु। यसरी धर्मको नाममा प्राणीको हत्या हुन्छ भने त्यो धर्म नै नगर्नु, यसो गर्नाले हत्या रोक्न सकिन्छ। धर्मको नाममा प्राणी हत्या गर्नु रोक्न पर्छ झन व्यर्थै प्राणी हत्या गर्नु नै हुँदैन। यसरी प्राणी हत्या गरे भगवान् बुद्धको सिद्धान्तसंग मिल्दैन् "अहिंसा परमो धर्म" नै भएन त्यसकरण बौद्ध मार्ग मान्नेहरूले हत्या गर्नु हुँदैन, मानव सबैले नै हत्या नगरे असल धर्म हो।

हाम्रा गुरुजनहरूले गाउँ, घर र शहरमा आफू जहाँ बसोबासो गर्छन्। त्यहाँका मानिसहरूलाई पूण्य संचय गर्ने, पाप प्रायश्चित गराउने कर्म, जस्तै मौनब्रत, अष्टशील माणी जप्ने काम, पूजा आदि चढ़ाउने कर्म गर्नु लगाई उत्तम मार्ग देखाउँदै पछि बोधिज्ञान प्राप्त गर्ने भाग्यशाली बनाइदिनु पर्छ अनि अन्तमा बुद्ध ज्ञान प्राप्त हुन्छ। आफूले गरेको पाप प्रायश्चित गर्नुलाई मौनब्रत (न्यूईने) जस्तो अरू कुनै पनि छ। एकै दिनको शील पालन गर्न सके पनि धेरै धेरै पूण्य सञ्चय गर्न सक्छ। हाम्रा गुरु र लामाहरूले यस्तै प्रकारको पूण्य सञ्चय गर्ने कर्म गर्नु लगाउनु पर्छ ।

अदान वा चोरेर लाने कर्मको विषय अनि चोरी गर्नुमा दुइ प्रकारले बताउँछ। दुई मध्ये पहिलो चाहिँ :-

**"क" चोरी विषय :-**

शरीरबाट हुने तीन अकुशल कर्म वा पापमध्ये दोस्रो चोरी हो। अर्काको चिज सानो सियोदेखि लिएर सुन, चाँदी, हिरा, मोति, जग्गा जमीन, घर इत्यादि जस्तो सुकै होस तीन प्रकारले चोरी गर्छ। प्रथम जबर्जस्ती खोसेर लाने। दोस्रो चोरेर लाने, अरूले नदेखिकन लाने। तेस्रो ठगेर कुनै उपायद्वारा चिजको मालिकलाई अनेक कुरो बनाएर, उसलाई फुरूक पारेर, कतिपय उपायद्वारा अरूको चिज आफूले लाने हो।

प्रथम सरकार या राजाको कर त तिर्नै पर्छ तर फेरि त्यो भन्दा ज्यादा या सरकारी कर्मचारीले हक देखाएर, डर देखाएर धेरै रूपियाँ लिने हुन्छ। आजकल प्रायः धेरै जस्ता सरकारी कर्मचारीहरू घुस (BRIBE) लिन्छन्। यी सब हकडग गरेर जबरजस्तीसंग धन पैसा जे लिए पनि चोरी नै हो। ठूलो ठूलो हुल आएर डकैती गरे, मालिकलाई मार्ने डर देखाएर लगेको पनि हकडग गरेर लिएको चोरी हो। कसैको शत्रुले लगी दिन्छ। दोस्रो मालिक नभएको समयमा कसैले नदेखिकन लुकाएर लाने चोरेर लगेको हो। तेस्रो छट्टु गरेर, ठगेर, चिप्लो लगाएर कुनै उपायले कुनै चिज दिन्छु भनेर, या म यस्तो काम गरिदिन्छु उस्तो काम गरि दिन्छु भनेर रूपियाँ या कुनै चिज लगिदिए त्यो पनि चौरी नै हो र चोरेको पाप लाग्छ।

"ख" दोस्रो चोरीको विषयमा पनि तीन प्रकारको छ। तिन मध्ये पहिलो चाहिँ त्रिरत्न या भगवान्को नाम गरेर अर्काको बाटा लिएर खाने विषय :-

(१) धर्मकर्म र पूण्यकर्म गर्नुको निम्ति जुटाएको चिज वा रूपियाँ पैसा जे जस्तो भए पनि पूण्य कर्म मौन वर्त (न्युइने) दशमी पुजा पुर्णे, औंसी, यज्ञा, गुफा बस्ने कर्म, इत्यादि पूजा गरेर दुइ पूण्य सञ्चय गरेर

सिद्धि फल प्राप्त गर्नका निम्ति भगवान् त्रिरत्नको पूजा अर्पण या चढ़ाउने सामाग्री इत्यादि चढ़ाएर आधा उबारेर राखे। यसरी भगवान्लाई चढ़ाउनको अघि नै आफूले खाइदिए या उबारेर पछि आफूले मौज मजा गरेर खाए, यहि जीवनमा पनि पापको दुःख भोग्न पर्छ। पछिको जीवनमा त झन अगति, नरकमा जन्म लिनु पर्नेछ। यस्तै प्रकारले आफ्नो जीवन नष्ट भएर जानेछ। अर्काको चिज चोरेको भन्दा ठूलो पाप लाग्नेछ, भगवानको निम्ति जुटाएको चिज वा सामाग्रीमा चैन, मौज मजा गरेर खाएकोमा पाप ठूलो लाग्नेछ। त्यसकारण भगवान्लाई चढ़ाउने चिज चोर्ने र खाने बानी गुरु चेला र जजमान सबैले छोड़नु पर्छ।

अझ यो भन्दा पनि ठूलो पाप के हो भने - भिक्षु संघ, भिक्षुनी संघ, प्रब्रज्या संघ अरू पनि जस्तै समाज आदिको चिजहरू पैसा रूपियाँ जग्गा जीमन लुटेको या खाई दिएकोमा पाप ठूलो लाग्ने छ। संघ र समाज भनेको एकजनाको सम्पत्ति होइन त्यहाँ धेरै भिक्षु भिक्षुनी र मानिसहरूको सम्पत्ति हुन्छ, संघको सल्लाह बिना कुनै एक व्यक्तिले खुशी गरेर खर्च गर्न सक्तैन, सबैको मत मिले मात्र कुनै काम गर्न सक्छ, यस्तो संघको र समाजको पैसा रूपियाँ चोरी दिए या खाइदिए यसको फल असाध्य दुःख भोग्नु पर्ने नरकमा जन्म लिनुपर्छ। यसरी संघको धन सम्पत्ति खाएर माफ मागे पनि पापको फल त भोग्नै पर्छ, माफ पाउन पनि सक्दैन। यसरी संघको सम्पत्ति, खाद्य कुरो जताभावी गरेर फल भोगेको *उधाहरण यस प्रकार छ* - अघि प्राचिन कालमा कश्यप बुद्ध हुनु हुन्थ्यो। वहाँ गौतम बुद्धभन्दा ठीक अघिको कालमा हुनु हुन्थ्यो। एक हजार बुद्ध मध्ये तीन अंकको हो, गौतम बुद्ध चाहिँ चार अंकमा हुनु हुन्छ। भगवान् कश्यप बुद्धका कालमा एकजना संघको भण्डार हेरचाह गर्ने भण्डारको हिसाब

किताब राख्ने भाण्डारी थिए। त्यस भाण्डारीले संघको सम्पत्ति धेरै नोकसान गरिदिएको थियो र पछि यस्तो कुकर्म गरेको फलस्वरूप अहिले पनि नरकमा नै छ कारण उसको आयु र नरकमा बस्नु पर्ने समय कति छ भन्दा यस संसारमा हजार बुद्ध आएर गइसक्दा पनि उसको आयु सकिँदैन। कस्तो भने हजार बुद्धको धर्म र शासन सकिँदा पनि नरक मै बस्नु पर्ने छ भनी भगवान् बुद्धले र अरू सिद्धि पुरूषहरूले आज्ञा गर्नु भएको छ। एउटा बुद्ध यस संसारमा आउनु हुँदा प्रयाः पाँच हजार बर्षको समय लाग्छ, ज्यादा पनि लाग्न सकिन्छ यस्तै प्रकारले हिसाब लगाउनु पर्छ हजार बुद्धको शासनको अनि नरकमा कति बस्नु पर्छ यस्तै प्रकारले हिसाब गर्नुपर्छ।

यसकारण संघको काम गर्ने, भान्से भाण्डारी गाउँ घरमा समाजका कर्मचारी, खजाञ्ची र सचिव, सबै जनाले संघको खाना जताभावी गर्नु हुँदैन, फ्याँकनु पनि हुँदैन फेरि खानाहरू पोखाउनु पनि हुँदैन, राम्रो राम्रो आफूले खानु पनि हुँदैन, विषेश गरी न्यूइने मौनव्रत, गुफा बस्ने संघ र लामा, दशमी पूजा र औंसी पूर्णेको पूजा, आदिको समान चोरेर लाने, चोरेर खाने इत्यादि सबै छोड्नु पर्छ कारण यस्तो प्रकारको कूकर्मको फल नरकमा भोग्नु पर्छ। अझै यो भन्दा पनि नराम्रो कर्म आफ्नो गुरुको धन सम्पत्ति चोरेर लाने, नोकसान गरिदिने आदि कुकर्म गरे आफूले हर्ताल भन्ने विष खाए जस्तो हो। गुरुले खुशीसाथ आफूलाई कुनै चिज दिएको पनि आफूले लिए त्यो पनि पाप लाग्नेछ र नरकमा जन्म लिई दुःख भोग्नु पर्छ। अझ गुरुको सम्पत्तिमा आफूले मौज गरे, या चोरे यस्तो कुकर्मको फल जस्तो नराम्रो अरू कुनै छैन। यसकारण हामी सबैले कर्मको बिऊ फलको विचार मनमा राखी गुरु, संघ अनि समाजको धन सम्पत्तिमा मौज

गर्नु उचित छैन, चोरी पनि गर्नु हुँदैन भनी बुझ्नु पर्छ।

## (२) दोकानदार अनि व्यापारीहरूको व्यापार सम्बन्धी नाफा खाएको चोरी विषय :-

जस्तो सुकै व्यपार धन्धा गरे तापनि ठगेर अरूबाट पैसा धन इत्यादि चोरेको पाप लाग्नेछ। व्यपार गर्दा आफ्नो चिज समान नराम्रो भए तापनि एकदम राम्रो छ भनेर, अरूलाई छक्काएर, झुठ बोलेर बिक्री गर्छ। यसरी व्यपार गर्दा अरूबाट ठगेर पैसा रूपियाँ लिए त्यो पनि चोरी कै पाप लाग्छ। फेरि भएन आफ्नो चिज नराम्रो र नक्कली भए तापनि राम्रो असली हो भनेर झुट पनि बोल्नुपर्छ। झुट बोलेको पाप पनि लाग्छ। हिजआज मानिसहरू धेरै लोभमा परेर धन सम्पत्ति धेरै बनाउने इच्छा गर्छ। तर यसरी ठूलो इच्छा गर्दा त्यसै रूपियाँ सम्पत्ति कमाउनु सक्दैन। यस्तै इच्छा हुँदा व्यपार गर्नुपर्ट्टि लाग्छ। तर फेरि व्यपार पनि त्यसै गरेर हुँदैन, हजार हजार मान्छेलाई छल कपट गर्नु पर्छ। हिजआज कुनै चिज असली पाउँदैन। सबै चिज़मा नाफा ज्यादा गर्नुको निम्ति कुनै सस्तो कम्ति दाम भएको चिज मिलाएको हुन्छ। जस्तै घिऊमा धेरै नाफा गर्नुको लागि ब्यापारीहरूले बनस्पति केरा, आलु, चर्बी इत्यादि मिलाएर मानिसहरूलाई बिक्री गर्छ। खानेतेलमा अरू कम्ति दामको तेल मिलाएर बेच्ने गर्छ। तोरीको तेलमा प्याजको झोल इत्यादि मिलाउँछ। चामलमा ढुंगा, दुधमा पानी, यस्तै प्रकारको धेरै नकली समान बिक्री गर्छ।

ब्यापारीहरूले तौलाईमा पनि कम्ति दिएर मानिसहरूलाई छक्काउँछ, जस्तो सुकै तौलाईमा व्यपारीले कम्ति दिएर, छक्काएर धन जम्मा गर्छ। सुनबालाले असली सुन भन्दै केही मात्रमा चाँदी त मिसाएकै हुन्छ। होटेलमा

पनि खाना पिनामा छक्काउँछ। व्यपारीहरूले कम्ति दाममा किनेर धेरै दाममा बिक्री गर्छन्। यसकारण व्यपारीहरूलाई ठगेर अर्कोको पैसा रूपियाँ चोरी गरेको पाप लाग्नेछ। नाफा धेरै खाए पाप पनि ठूलो लाग्नेछ। नाफा कम्ति खाए पाप पनि कम्ति नै लाग्नेछ। भिक्षुहरू, लामाहरू जसले भिक्षुको शील पालन गर्छ, जस्तै प्रति मोक्ष बोधिचित्त र गुह्य तंत्रको यी तीन शील पालन गर्ने भिक्षुहरूले कुनै पनि व्यपर गर्नु हुँदैन। यदि व्यापार धन्धा गरे तीन शीलमा भूल भई धेरै दुःख भोग्नु पर्नेछ। यसरी शील ग्रहण गर्ने भिक्षुहरूले व्यपार गरेर एक रूपियाँ मात्र नाफा खाए "फम्पा" भन्ने पाप लागेर तीन शील सबै नष्ट भएर जानेछ। कारण व्यापार गर्दा अरूलाई छक्काउनु पर्छ ठग्नु पर्छ, झुट बोल्नु पर्छ, यस्तो कारणले गर्दा शील नष्ट हुनेछ।

यसरी व्यपार गरेको पापको फलस्वरूप दुवैलोकमा शान्ति पाउँदैन। यस जीवनमा पनि मनमा शान्ति कहिले हुँदैन। यसरी अशान्ति भएको हाम्रा आँखाको सामु पनि हजारौं देख्छौं। कुनै व्यापारी सुखसित बसेर खान पाउने छैन। रातमा निद्रा पनि राम्रो लाग्दैन। दिनमा पनि फूर्सद हुँदैन यस जीवनमा त सुख छैन पछि त झन सुखको नामसम्म पनि सुन्न पाउँदैन। विपक वा यस्तो व्यपारको कारणले पापको फल पछि दरिद्र हुन्छ सुख शान्ति पाउने छैन। यही जीवनमा दरिद्र नभए पनि पछि आफ्नो कर्मको फल भोगेर फेरि मानिसको जीवन पाए दरिद्र भएर जन्म लिनेछ।

यसकारण हामीले साँचो र सत्य कर्म गर्नुपर्छ। यसरी सत्य र साँचो भए दुवै लोकमा सुख र शान्ति पाउने छ। हामीले झुट बोल्ने, ठग्ने, छक्काउने, प्रमोद या असत्य कर्म नित्य र सधैं त्याग्नु पर्छ। सबैभन्दा धनी मानिस सन्तोष गर्ने मानिस हो। सन्तोष नै धन हो। सन्तोष गर्ने मानिसले

सधैँ सुख र शान्ति पाउने छ।

**तेस्रो चोरी सम्बन्ध विषय :- प्रसङ्गको कारणले चोरी गरेको पाप लाग्ने विषय :-**

अरूको हराएको चिज पाए भनेर लगिहाल्नु हुँदैन। अरूको चिज सानो-ठूलो राम्रो नराम्रो जस्तो सुकै भए पनि चिजको मालिक खोज्दै आए उसलाई फर्काई दिनु पर्छ। यदि कुनै मालिक खोज्दै आए, उसलाई पाएन भनेर लुकाएर राखे पाएको त हो भनेर नदिए चोरी गरेको भन्दा पनि ठूलो पाप लाग्नेछ। अझै भिक्षु या प्रव्रजकहरूले अरूको पाएको चिज मालिकलाई नफर्काए उनीहरूको शील भंग हुन्छ साथमा ठूला पाप पनि लाग्नेछ। यसरी पाएको चिज कस्को हो भनेर सोध पुछ गरेर चिजको मालिकलाई फर्काउनु पर्छ। आफ्नोमा धन सम्पत्ति भए त भगवान् त्रिरत्नको पुजा दानादि गर्नु सके राम्रो हो तर आफ्नोमा यसरी पूजा दान गर्ने क्षमता नभए सधैं अर्काको भलाई चित्ताएर अरूको सहायता गरे भगवान्‌को पूजा गरेको फल भन्दा पनि ठूलो फल या पूण्य पाउनेछ। अरूको कुभलो चित्ताउने र अरूको नोक्सान गर्ने काम त्याग्नुपर्छ। यदि भलो गर्नु नसके, सहायता पनि गर्नु नसके, अरूको नोकसान र बिगार पनि गर्नु हुँदैन। मध्यमा बसे त्यो पनि एक प्रकार राम्रो हो।

यसरी चोरी गरेको कर्मको फल तीन प्रकारले भोग्नु पर्छ। पहिलो विपाक "नममीन" कर्मको फल आफू मरेर प्रेतलोकमा जन्म लिन्छ। प्रेतलोकमा कर्मफलको अनुसार हजार हजार वर्षपछि फेरि मानिसको जन्म पाए दोस्रो "विना प्रयोजन युक्त" (ग्यु थुन) कर्मको फलको कारणले दरिद्र घरमा जन्म लिनेछ, यसरी जन्मेर जीवन भर दरिद्र भएर जिउनु

पर्नेछ। तेस्रो प्रताप (वाङ) कर्मफलको कारणले अन्नपात उब्जाऊ नहुने जग्गामा जन्म हुनेछ। अन्नपात उब्जाऊ हुने देशमा जन्मे पनि खेती पाक्ने बेलामा असिनाले सबै नष्ट गरिदिने हुन्छ। यसरी नै सदा दुःखी भएर जिउनु पर्ने हुन्छ। यसकारण कर्मफलको विचार राखेर चोरी गर्नु हुँदैन। सधैं अरूको भलो चित्ताउने प्रयास गर्नुपर्छ। जस्तो रोप्छ त्यस्तै फल्छ यो त प्रकृतिकको नियम हो, आफूले राम्रो कर्म गरे फल पनि राम्रै पाउनेछ अनि शान्ति र सुखी जीवन हुनेछ।

## कामवासना राग फोहरी कर्मको विषयः-

कामवासना पनि दुइ प्रकारले बताएको छ।

**पहिलो** :- प्रथम शरीरबाट हुने तेस्रो कुकर्म कामवासना वा मैथुन विषयमा दुइ प्रकारले बताउँछ।

*(१) मैथुन या सम्भोग सम्बन्धी पालन गर्नुपर्ने नियम* :- (क) आफ्नो स्वास्नीबाहेक अरू स्त्रीसंग मैथुन गर्नु हुँदैन। (ख) मासिक धर्म भएको समयमा मैथुन गर्नु हुँदैन। (ग) गर्भधारण भएको समयमा मैथुन गर्नु हुँदैन। (घ) व्रत बसेको समय जस्तै मौन व्रत (न्युइने) अष्टशीलको व्रत बसेको समयमा मैथुन गर्नु हुँदैन। (ङ) दिउँसो या दिनमा मैथुन गर्नु हुँदैन। (च) रातमा पनि तीनपल्ट भन्दा ज्यादा मैथुन गर्नु हुँदैन (छ) आफ्नो स्वास्नी विमार भएको समयमा पनि मैथुन गर्नु हुँदैन (ज) आफ्नो लिङ्ग जता भावी प्रयोग गर्नु हुँदैन। (झ) मान्यगण माता पिता भएको या बसेको जग्गामा मैथुन गर्नु हुँदैन। (ञ) तीर्थस्थान, देवस्थान, गुम्बा या मन्दिरतिर मैथुनको विचार पनि गर्नु हुँदैन। यी माथि बताएको नियम गृहस्थीहरू सबैले पालन गरे अति उत्तम हुन्छ। यी सब गृहस्थीहरूको भलोको निम्ति

भगवान् बुद्धले बाणी गर्नु भएको हो। गृहस्थीहरूले यी नियम पालन गरे कुशल कर्मको भागी हुनेछन्। अनि कुशल पूण्य सञ्चय गरी मुक्ति पाउने बिऊ हुन्छ। यदि यी नियम बिरूद्ध काम गरे कुकर्मको बिऊ भई फल दुःख भोग्न पर्ने प्रेत र नरक जन्म लिनेछ।

दोस्रो प्रब्रजक र पञ्चशील पालन गर्ने या गृहण गरेको ब्रम्हचारीहरूले बिषेश काम मिथ्या त्याग्नु पर्छ। ब्रम्हचारी प्रब्रजक र पञ्चशील पालन गर्नेहरूले स्त्री सभोग गर्नु हुँदैन। दश शील पालन गर्ने र पञ्च शील पालन गर्नेहरूले एकजना मात्र विवाह गर्नु हुन्छ। यदि आफ्नो स्वास्नीको मृत्यु भए अर्को स्वास्नी विवाह गर्नु हुंदैन। आफ्नो स्वास्नी हुँदा हुँदै अरू स्त्रीसंग संभोग गर्नु हुँदैन। आफ्नो स्वास्नी भए तापनि माथि बताएको गृहस्थी धर्मको नियम पालन गर्नु पर्छ। गृहस्थी धर्मको नियम पालन नगरेर आफ्नो लिङ्ग जंताभावी प्रयोग गर्नु हुँदैन। फेरि आफ्नो धातु पनि शरीरतिर जताभावी गर्नु हुँदैन। धातु शरीर तिर जताभावी गरे "तुङ्वा" भन्ने पाप लाग्छ। यी नियम उल्लङ्घन गरे आफूलाई पाप त लाग्छ फेरि आफ्नोमा भएको शील सबै नष्ट भएर "फम्पाको" पाप लाग्छ। प्रब्रजक प्रतिमोक्ष र भिक्षुको शील पालन गर्नेहरूले यस्तो प्रकारको स्त्री संभोग गरे "फाम्पा" पाप लाग्छ अनि आफ्नोमा भएको शील सबै नष्ट भएर जान्छ। फेरि कुनै शरीरको अंगको सहबताले आफ्नो बीर्यपात गरे पूर्ण रूपले शील पालन हुँदैन। यदि आफूले उच्चा दर्जाको भूमिज्ञान प्राप्त भए स्त्री संभोग या विबाह नै गरे पनि त्यसमा केही बाधा हुने छैन अनि पाप पनि लाग्ने छैन। तर भूमिज्ञान प्राप्त नभई उपाय मार्गमा लाग्नेहरूले बिवाह गरे ठूलो पाप लाग्ने छ। उनीहरूको शील पनि नष्ट भएर जानेछ। गम्भीर गुघ्य तंत्रको धर्म गर्छु भन्दै सधैं स्त्रीसंग संभोगको सुख लिनेहरू दुगतिको बिऊ रोपेको हो। उच्चा दर्जाको

ज्ञान या भूमिज्ञान नपाई बाहिरी मात्र गुघ्य तंत्रकको नाम गरेर धर्म ठीक रूपमा प्रयोग नगरी आफ्नो स्वार्थको निम्ति मात्र धर्मको विपरीत अर्थ लगाई धर्म गर्नेहरू मुक्ति र बुद्ध ज्ञान पाउन त परै जावस, मानिसको जन्म पाउन पनि दुर्लभ हुन्छ। यस्तो प्रकारको अधर्म गर्नेहरू नरकमा बाहेक अरू कुनै जग्गामा जन्म लिन कठिन पर्ने छ। यसरी गुह्य तंत्रको मूल अर्थ या मर्म नबुझी ठूला ठूला गुरु लामाहरूले त स्त्रीसंग विवाह गर्छ भनी विवाह गर्ने ठूलो भूल हो। कारण अरूले जे गऱ्यो आफूले पनि त्यस्तै गर्ने मुर्खता हो। उदाहरण : मुजुरले बिखालु सर्प खान्छ यस बाहेक जुनै पनि विख मुजुरको खाद्य हो, मुजुरले त यो विख खाँदो रहेछ भनेर अरू चराले पनि खाएँ निश्चय मृत्यु हुन्छ, कारण मुजुरको त विख पचाउने शक्ति हुन्छ अरू चराको हुँदैन। आफ्नो आफ्नो शक्तिको बलले गर्दा शक्ति अनुसार पचाउन सक्छ त्यस्तै उच्चा दर्जाको ज्ञान प्राप्त गर्ने र नगर्नेको पनि त्यतिकै फरक हुन्छ। गुह्य तंत्र जतासुकै, जो सुकैलाई धर्म बताउनु हुँदैन। साधरण मानिसको बुद्धिमा पस्नु निकै गाह्रो पर्छ। गुह्य तंत्रको धर्म बुझ्नु पनि तिखो मगज (बुद्धि) भएको चाहिन्छ। कारण यसको अर्थ निकै गाह्रो हुन्छ। त्यसैकारण जता सुकै बताउनु नहुने हो। यदि बताए पनि धर्मको ठीक अर्थ नलगाएर ठीक विपरित अर्थ प्रयोग गरिन्छ। उच्चा दर्जाको ज्ञान प्राप्त गर्नु षष्टपरामिताको अभ्यास गर्नुपर्छ। षष्टपरामिता चाहिँ :-

(क) दान पारमिता (ख) शील पारमिता (ग) क्षान्ति पारमिता (घ) वीर्थ पारमिता (ङ) ध्यान पारमिता (च) प्रज्ञा पारमिता।

पारमिताको अर्थ हो एक किनारदेखि अर्को किनारसम्म पुग्ने साधना। यस जीवनदेखि अर्को जीवनमा जाने साधन अर्थात मुक्ति पाउने काम। समुद्र पार गरेर अर्को किनारमा पुग्नेको निम्ति जसरी एउटा जहाजको

जरूरत पर्छ त्यस्तै नै यो भवसागर दुःखी जीवनदेखि मुक्ति पाउने साधन यी षष्ट पारमिता हुन् । यी छवटा उपायद्वारा मानिस मुक्ति पाउन सकिन्छ । प्राचीन समयमा हामी जस्ता साधारण मानिसहरूले जीवनभर दान मात्र दिएर बोधिसत्व प्राप्त गरेका धेरै छन् । दान जस्तो सुकै होइन, दान दिने मानिसको निस्वार्थ भावना हुनु पर्छ हरिशचन्द्र राजा जस्तै, अनि मात्र दान दिएको फल पाउँछ । समुद्र पार गर्नु जहाज जस्तै यो दुःखी जीवनबाट पार हुने दान एक साधन हो । त्यस्तै दान गर्नु नसके आफूले शील राम्रोसंग पालन गर्नुसके, शील पालन गरेको फलले पनि मुक्ति पाउँछ । त्यसरी नै आफू सानु भएर मानिसले जे जसो भनेता पनि आफूले सहेर (सहनु) पनि मुक्ति प्राप्त हुन्छ । कोशिश गरेर पनि मुक्ति प्राप्त हुन्छ । कोशिश सबभन्दा ठूलो हो । भगवान् बुद्ध महापरिनिर्वाण हुने अन्तिम समयमा आनन्द भिक्षुलाई यो आदेश गर्नु भएको थियो – "आनन्द संसारमा सबभन्दा ठूलो कोशिश हो – कोशिश गरे निर्वाण प्राप्त गर्नु सजिलो छ । जस्तै मूर्ख भए पनि, बुद्धू भए पनि कोशिश गरे ज्ञान पाउन सक्छ असम्भव छैन, सम्भाव नै छ ।" कति ध्यान गरेर मात्र पनि मुक्ति पाउँछ । कति प्रज्ञा या ज्ञानी भएर छिटै प्रज्ञाको बोध भएर मुक्ति प्राप्त हुन्छ । षष्ट पारमिताको विषयमा धेरै छ, यहाँ जति बताइएको छ, एकदम छोटकरीमा बताइएको छ । यस्तै प्रकारले षष्ट पारमिताको धर्म गरी आफूले पूण्य सञ्चय पाउन सक्छ । निःसरण मार्ग, उपाय मार्ग बोधिसत्त्व मार्ग, योग मार्ग, दर्शन मार्ग इत्यादि मार्गको बोध भएपछि मात्र गुह्य तंत्रको अर्थ ठीक रूपमा लगाउन सकिन्छ । यसकारण प्रथम ब्रह्मचर्य शील पालन गर्नु नितान्त आवश्यक छ, यसपछि षष्ट पारमिताको आधारमा धर्म गर्नुपर्छ ।

यदि हामीहरूले मैथुनको नियम ठीक रूपले पालन गरेनौ भने हामीले

कर्मफलको दण्ड भोग्नु पर्छ। दण्ड तीन प्रकार मध्ये पहिलो हामी प्रेतयोनिमा जन्म लिन्छौं। दोस्रो प्रेतयोनिबाट मृत्यु भएर मानिसमा जन्म भए पुरूष भएर आफ्नो स्वास्नी शत्रु जस्तो भेटाउनेछ, स्वास्नी भए लोग्ने शत्रु जस्तो व्यवाहार गर्ने पाउने छ। आफ्नो आफ्नो कर्म अनुसार लोग्ने स्वास्नी एक अर्काले शत्रु जस्तो व्यवाहार गर्नेछ, जस्तो कि स्वास्नीले लोग्ने कुट्ने तरै पनि सगै बस्नुपर्ने। लाग्नेले स्वास्नी कुट्ने तरै पनि दुःख सहेर सँगै बस्नु पर्नेछ। अरू शत्रु पनि धेरै लाग्ने हुन्छ। दिन रात लोग्ने स्वास्नीको झगड़ा हुन्छ।

**तेस्रो** - नराम्रो मैला, दुर्गन्ध भएको फोहोर भएको देशमा जन्म लिनपर्छ। यस्तो देशमा मैला फोहोरको कारणले, कहिले सुख हुँदैन जीवन भर दुःखी भएर बिताउनु पर्छ।

## (४) झुट बोल्ने या बोलेको कर्म फल विषय :-

बचनबाट हुने कुकर्म प्रथम झुटो बचन गर्ने हो। झुट भनेको के हो भने आफ्नो दोष लुकाएर निर्दोष हुने हो। अर्थात आफूलाई थाहा छ कि यो साँचो होइन तरै पनि जबरजस्ती साँचो भन्ने हो। आफूलाई कसैले केही सोद्धा आफूले जान्दछ तरै पनि जान्दिन भन्ने। कसैले केही विषय लिएर कुनै चिज देख्यो कि देखेन भनेर सोधे आफूले त देखेको छ तरै पनि देखिनँ भनिदिने झुटो बचन गर्नु मध्ये सब भन्दा सानो झुट बोलेको कुकर्म हो।

दोस्रो झुट कर्मफलको कुरो सबै झुटो हो भनी कर्म फलमा विश्बास नगर्ने। पूण्य कर्म गरे सुख हुन्छ या राम्रो फल पाउँछ, नराम्रो कुकर्म गरे दुःख भोग्न घर्छ या नराम्रो फल भोग्नु पर्छ भन्ने कर्मफलमा विश्वास नगरेर सबै झुटो हो भनी अनेक प्रकारको दोष देखाउने। भगबान्को बचन सबै

झूटो हो भन्ने, त्रिरत्नको वचन सबै झुटो हो भनि विश्वास नगर्ने उल्टा निन्दा गर्ने ठूलो झुट बोलेको कुकर्म हो।

तेस्रो अभिज्ञान र ऋद्धि शक्ति आफ्नोमा नभए पनि छ भन्ने। अभिज्ञान भनेको अर्को मनको कुरो जान्ने शक्ति भएको हो। ऋद्धि शक्ति आकाशमा उड्न सक्ने, पानीमाथि हिड्न सक्ने इत्यादि शक्ति भएको हो। यी कुनै शक्ति नभए पनि अरूलाई मेरोमा शक्ति छ भन्ने। आफूले सिद्धज्ञान नपाई या आफू सिद्ध नभई सिद्ध प्राप्त भयो भन्ने। भगवानको दर्शन नभई दर्शन पाएँ भन्ने। भूत प्रेत नदेखी देखें भन्ने। गुरुको आज्ञा नपाई आज्ञा पाएँ भन्ने "मि छ्योलामे झुन" महाझुट बोलेको कुकर्म हो। यस्तो प्रकारको महाझुट कुनै भिक्षु प्रब्रजाकहरूले बोले उनीहरूका शील सबै नष्ट हुन्छ साथै "फम्पा" भन्ने ठूलो पाप लाग्छ। शील पालन गर्ने र शीलयुक्त भिक्षु र प्रब्रजाकलाई शील छैन भनी जस्ले भन्छ उसलाई पनि पाप लाग्नेछ। कारण यस्तो प्रकारले नभन्नु पर्ने कुरो भन्दा शील पालन गरिरहेको भिक्षुलाई रिस उठ्छ अनि शीलमा भ्रष्टता आउँछ।

यी तीन मध्ये पनि आफ्नो गुरुलाई झुट बोले महापाप लाग्छ। प्रमाण यस प्रकार छ – उहिले एक समयमा एक सिद्ध प्राप्त गरेको गुरु हुनु हुन्थ्यो। वहाँको चेला पनि धेरै थिए। वहाँ सिद्ध प्राप्त गरिसक्नु भएको हुनाले योगी जस्तै लुगाफाटा सबै फाटेको मात्र लगाएर **हिंढथे**। यसरी एकदिन वहाँ घुम्दै घुम्दै जाँदा एक जग्गामा पुग्नु भएछ। त्यहाँ धेरै मानिस जम्मा गरेर एउटा लामाले धर्म सुनाउँदै **थिए**। त्यहाँ धर्म सुनाउँदै गर्ने उहि सिद्ध गुरुको चेला थिए। त्यहाँ गुरु टाड़ामा उभेर हेरिबस्नु भएछ। चेलाले पनि आफ्नो गुरु आउनु भएको देखेछ तर आफ्नो गुरुले

फाटेको लुगा लगाएको, माग्ने जस्तो भएको काणले अरू मान्छेको सामु उठेर गुरुलाई प्रणाम गर्नु शरम वा लाज मानेर गुरुलाई प्रणाम नगरी बसेछ। गुरु त्यहि बसिरहनु भएछ। अन्तमा धर्मचक्र सकिए पछि मानिसहरू सबै आफ्ना आफ्ना घरतिर लागेपछि गुरुकहाँ गएर ढोग प्रणाम चढ़ाएछ। गुरुले वहाँलाई अघि किन प्रणाम नगरेको भन्दा चेलाले उत्तरमा हजुरलाई देखिनँ भनेछ। यस्तो भन्नेको साथमा चेलाको दुइवटा आँखा भूइँमा झरेछ। फेरि चेलाले गुरुको शरण परी झूट बोलेको क्षमा मागेछ। अनि त्यसपछि मात्र आँखा जस्तोको त्यस्तै भएछ। यसरी आफ्नो गुरुलाई झूट बोलेको फल यस्तो हुन्छ। आफ्ना गुरुलाई कहिले पनि छल्नु, झूट बोल्नु हुँदैन। यस्तै प्रकारले महापाप लागेर नराम्रो कर्मको फल भोग्नु पर्नेछ।

अरूलाई नोक्सान गर्ने, बिगार्ने, कुभलो चित्ताउने, अरूलाई चिप्ले घसेर नाना प्रकारको झूटो बात गरेर, आफ्नो चिज दश रूपियाँको हो भने त्यसलाई एकसय रूपियाँको हो भनी अल्मलाउने, अरूलाई ठग्ने, ठूलो कुरा गरेर डंका पिट्ने, जबरजस्ती र ढिपी गरेर अरूको चिज आफ्नो बनाउने। अरूलाई कुभलो र बिगार्ने मन होइन त्यसै खेलठट्टा र दिल्लगी गरेर झूट बोले तापनि पाप त लाग्छ नै, कारण बचनबाट हुने पाप झूट हुनाले सानो ठूलो जस्तै झूट बोले पनि झूट बोलेको पाप त भोग्नै पर्छ। यति हो सानु झूट बोले फल पनि त्यस्तै प्रकारले भोग्नु पर्छ, ठूलो झूट बोले कर्मफल पनि ठूलो र ज्यादा कुकर्मको फल भोग्नुपर्छ।

कुकर्म गरी पापको भागी हुनुभन्दा इमान्दारी भई सबैको प्यारो र सबैले रूचाउने भए अति उत्तम हो। यसरी झूट बोलेको कुकर्मको फल तीन प्रकारले भोग्नु पर्छ। प्रथम "नमनि" भन्ने कर्मको फल मृत्युपछि

पशुलोकमा जन्म लिन्छ। दोस्रो "ग्युथुन" कर्म फल पशुको जन्मपछि फेरि मानिसको जीवन पाए आफूलाई अरूले निन्दा ज्यादा गर्छ। तेस्रो "वाङ" भन्ने कर्मफल मुख गह्नाउने, मुखबाट दुर्गन्धि आउने हुन्छ, यस्तो दुर्गन्ध भएको नराम्रो जीवन पाउँछ। यसरी जीवनभर आफ्नो मुख गह्नाउने, शरीरबाट नराम्रो गन्ध आउने हुन्छ। यसकारणले हामीले विवेक र विचार गरेर कुकर्म गर्नु हुँदैन।

## (५) एक अर्कामा फाटो गराईदिने विषय :-

पाँचौ बचनबाट हुने कुकर्म फुट गराइदिने हो। फुट पनि दुइ प्रकारले गराउँछ - पहिलो सबैको सामुन्ने नै फाटो गराउने। दोस्रो नानाक्लीको कुरा गरेर फाटो गराउने। भिक्षु संघलाई हाका हाकी छिन्नभिन्न गराइदिने। गुरु र चेलाविचमा राम्रो सम्बन्ध भएको समय गुरु र चेलाविच एक अर्कालाई अनेक प्रकारको कुरा बनाएर फाँटो बनाइदिने। साथी संगतबिच पनि एक अर्कामा फाटो गराइदिने। मिलेर बसेको साथी संगतविच यताको कुरो उता अनि उताको यता गरेर साथी संगतमाफ फगड़ा गराइ दिएर फगड़ा भएपछि साथीसंग फाँटो हुन्छ। त्यसले त तिमीलाई यस्तो उस्तो नराम्रो गुण बताउँदै थियो भनेर भनी फुट गराउने हुन्छ। यस्तै प्रकारले एक अर्कामा फुट गराउँछ। यसरी फुट गरेको ठूलो सीमा नै नभएको पाप भिक्षु संघविच फुट गराउनेलाई महापाप लाग्छ। यसरी फुट गरेको कुकर्मको फल तीन कर्मफलमध्ये प्रथम "नभीन" भन्ने कुकर्मको फल नरकमा जन्मेर भोक्नु पर्छ। दोस्रो "ग्युथुन" भन्ने कुकर्मको फल नरकबाट मुक्ति भएर मानिसको जीवन पाउँछ। मानिसको जीवनमा आफ्नो इष्टमित्र सन्तानहरूसंग छुट्टिएर जिउनु पर्छ। सधैं छुट्टिएर बस्नु

पर्ने हुन्छ। तेस्रो "वाङ" भन्ने कुकर्मको फल आफू सधैं पहिरो जाने ठाउँ र भीर पहरा काँड़ा खोल्यातिर जन्म लिन्छ। डाँड़ा काँड़ामा जन्म लिएपछि मनमा कहिले सुख शान्ति हुने छैन। कारण डाँड़ामा घर भएकोले गर्दा सधैं हावा वतास ज्यादा चलेर घर उड़ाउँछ कि भन्ने डर मनमा भोगिबस्नु पर्छ। खोल्यातिर घर भए वर्ष कालमा पानीले घर बगाउने डर हुन्छ। यस्तै कारणले गर्दा जीवनभर दुःख हुन्छ। पहिरो आउने डर सधैं नै मनमा भोग्नु पर्छ।

## ६. कड़ा अथवा कठोर बचनबाट हुने कुकर्मको बिषय

बचनबाट हुने कुकर्म अरूलाई नमिठो वचन गर्ने, गाली गर्ने, कठोर शब्द भन्ने हो। यसरी कठोर वचन पनि तीन प्रकारले गरिन्छ।

**प्रथम** :- कुनै व्याक्तिको सामुन्ने उसको शरीरिक अंग त्रुटि भएको फायदा उठाएर उसको दोष देखाउँदै कठोर बचन प्रयोग गर्ने हो। जस्तै अन्धा मानिसको सामुन्ने नै "ए अन्धा" भन्दै गाली गर्ने हुन्छ। कसैको एउटा खुट्टा हुँदैन त्यस व्याक्तिलाई "ए लङ्गडे" भनी सम्बोधन गर्ने हुन्छ। कसैको हात हुँदैन त्यस्तालाई "डुँडे" भन्ने। कान नसुन्नेलाई 'बहिरो' भनी गाली गर्ने गर्छ। कालो वर्णको व्याक्तिलाई 'काले' भन्ने। कुरूप भएकोलाई उसको शारीरिक दोष र त्रुटी देखाउँदै कठोर बचन भन्ने हुन्छ। नराम्रो विमार लागेको मानिसलाई उसको सामुन्ने यस्तो उस्तो विमार भनी भन्ने जस्तै कोड़ी सुकेनास भन्दै पर पर गर्ने कठोर वचन पनि गर्ने हुन्छ। यसरी कुनै पनि मानिसको, उसको शरीरको दोष र त्रुटी देखाएर होच्याउँदै कठोर वचन गरे, गाली गरे उनीहरूको चित्त दुःख्छ। चित्त फाटिन्छ यसरी अरूको मन दुखाउनु अधर्म हो उनीहरूलाई खुशी पार्नु त कता हो कता अझै

दुःखी बनाइदिए कतिको कुकर्म हो त्यो त हामी आफैले विचार गर्नु सक्नु पर्ने हो। कुनै पनि व्यक्ति यदि उसको शरीरमा दोष वा त्रुटी भए जस्तै आन्धा काना, लङ्गडा, बहिरा खोरण्डा आदि यस्तो त्रुटी भएको मानिस जन्मदेखि नै उसको शारीरीक कष्ट त हुन्छ नै साथमा मनमा पनि कहिले सुख हुँदैन। त्यसमाथि पनि हामीले उसको दोष देखाउँदै कठोर वचन र गाली गरे कतिको कष्ट सहन पर्छ त्यो त उसैले मात्र जान्दछ। काटेको घांऊमा नून र खोर्सानी हाले जस्तो हुन्छ। यस कारण यसरी अर्काको दोष त्रुटी देखाउँदै कठोर वचन गर्नु हुँदैन। गरे ठूलो पाप लाग्नेछ।

**दोस्रो** – कुनै मानिसलाई सिधैं भन्नु नसकेर कुरा घुमाएर र घोचेर भन्ने हो। यसरी घुमाएर भने पनि अर्काको चित्त दुःख्छ। चित्त दुखाउनु कुकर्म हो र यस्तो पनि गर्नु हुँदैन।

**तेस्रो** :- खेल ठट्टा गरेको जस्तो गरेर अरूलाई नराम्रो भन्ने, कुवचन भन्ने, कठोर शब्द भन्ने। आफूलाई मन नपर्ने व्यक्ति भए, त्यस व्यक्तिलाई खेलठट्टा गरेको प्रकारले नमिठो वचन गर्ने। यसो गरे त्यस व्यक्तिको मनमा छुरीले घोंचे झैं असाध्य पीर पर्छ। छुरीले घोंचे बरू बाहिरी दुखाई हुन्छ। दवाई गरे निको हुन्छ। तर कुवचन, नमिठो वचन खेलठट्टाको निहुँले भने यो पनि कुकर्म नै हो। यस्तो कठोर वचन गरे अरूको मनमा दुःख उब्जन्छ। यसरी आफ्नो गुरु, माता र पिताको यस्तो प्रकारले अलिकति पनि कठोर वचन गरेर वहाँहरूले मन दुःखाए ठूलो पाप लाग्नेछ। कारण गुरु, माता र पिता जस्ता यस संसारमा आफूलाई गुण गर्ने अरू कोही छैनन्। यस्ता गुणकारी गुरु, माता र पिताको अलिकति चित्त दुःखाए, वचनबाट हुने सबभन्दा ठूलो पाप लाग्ने छ। आफ्ना गुणकारी गुरु, माता र पितालाई कठोर वचन गाली गर्नु हुँदैन। वहाँहरूको गुण हामीहरूले तिर्न

सक्दैनौं। यसरी वहाँहरूको गुण तिर्नको साटोमा वहाँहरूलाई कठोर नमिठो वचन गरे महापाप लाग्ने छ।

यसरी बचनबाट हुने कुकर्मको फल यस प्रकारले भोग्नु पर्ने छ।

**प्रथम** "नमीनको" कर्मफलको कारणले मृत्युपछि नरकमा जन्मेर दुःख भोग्नु पर्छ। दोस्रो "ग्युथुन" को कर्मफलको कारणले नरकको जीवनबाट मुक्ति भएर मानिसको जीवन पाए पनि अर्कोको गाली कठोर वचन जीवनभर नै सुन्नुपर्ने हुन्छ। आफूले अरूलाई जति गुण गरे पनि, अरूको भलाई गरे पनि आफूले "जस" पाउने छैन। जति गुण गरे तापनि अगुण मात्र देखिनेको जन्म हुन्छ।

**तेस्रो** :- "वाङ" को कर्मफल आफू गरीब देशमा गरीब जग्गामा जन्म लिन्छ। सह नभएको ठाउँमा र अनिकाल हुने जग्गामा जन्म लिएर अनेक प्रकारको दुःख भोग्नपर्छ।

## ७. प्रलाप वा विभिन्न गफ गरेर समय नष्ट गर्नेको विषय

सातौं वचनबाट हुने कुकर्म पाप यसप्रकारले वर्णन गरिन्छ। बेकामको गफ गरी समय नष्ट गर्ने जुन गफको कुनै महत्व हुँदैन। जस्तै – ब्राह्मणहरूले कानमा गुप्ती धर्मको कुरो हो भन्ने। धर्मग्रन्थंको किताब हो भनी उहिले उहिलेका कथा गरी समय नष्ट गर्ने हुन्छ। यसरी कथा मात्र सुनाएर खास धर्मको मूल मर्म त हुँदैन बहुमूल्य समय मात्र नष्ट गर्नु हो। यस्तो कथा र कहानी सुनेर मुक्तिको निम्ति झूटो मार्ग देखाउनेको त अलिकति छेऊसम्म पनि पर्नु हुँदैन। यस्तो समय मात्र नष्ट गर्ने कुरोले हाम्रो भलाई कसरी हुन्छ

? हुन सक्दैन। कतिले यो धर्मको कुरो हो भनी भन्छ तर धर्मको कुरो नभएर राजनीति र सांसारिक कुरो मात्र हुन्छ। बिना अर्थको कुरा गर्ने, राग र तृष्णाको अधीनमा परी गीत गाउने, किसिम किसिमको गफ गर्ने, यस्तो जग्गामा त लड़ाइ भएछ, यस्तो जग्गामा झगड़ा भएछ, डकैत भएछ, यस्तै प्रकारका नाना थरीको गफ गर्ने। यो व्यापार गर्दा यति नाफा भयो भन्ने, यस्तो व्यापार गर्दा यति हानि भयो भनि व्यापारको विषय लिएर प्रचार गर्ने। कुनै व्याक्तिलाई उचालेर सर्काएर माथि पुऱ्याउने, कसैलाई नीच देखाएर खिसी गर्ने। यस्तो सबै काम समय नष्ट गर्ने मात्रै हो। कसैको स्तुति गर्ने कसैको निन्दा गर्ने हुन्छ। कोही व्यक्ति , भिक्षु वा लामा जप गरेर बसेको समय, ध्यान गरेको समयमा अनेक थरिका कुरा गरी भुल्याइदिने, अल्मलाउने, व्यर्थको कुरा निकाली ध्यान भङ्ग गरिदिए ठूलो पाप लाग्छ। यसरी व्यर्थ कुरा गरी पूण्य गर्नेहरूको पूण्य घटाइदिने कुकर्म भएको हुनाले महापाप लाग्ने छ। कुकर्म गरेको तीन फल मध्ये प्रथम मृत्युपछि पशुको जन्म पाउनेछ। दोस्रो पशुको जीवनबाट मुक्ति भएपछि मानिसको जीवन पाए पनि आफूले बोलेको वचन नबिक्ने, कसैले विश्वास नगर्ने हुन्छ, जस्तै साँचो बोले पनि कर्म फलको कारणले विश्वास गर्दैन्। सभा संसदमा बोल्न सक्दैन। प्रथम त आँट आउदैन। धेरै मानिसको माझ आफू बोल्न सक्तैन। तेस्रो कर्मफलले आफू जन्मेको देशमा सबै ऋतु उल्टा हुन्छ, वर्षाकाल र गरम महिनामा जाड़ो ठण्डा हुन्छ। ठण्डा महिनामा पानी पर्ने हुन्छ।.आफू जहाँ जन्मेको छ त्यस जग्गामा अशुभ मात्र हुने हुन्छ, सुखको त नाम पनि हुँदैन। सधैं दुःखी भएर जिउनु पर्छ। यी सबै अघि पूर्वजन्ममा हजारौं किसिमको गफ गरेर समय नष्ट गरेको कुकर्मको फल हो।

## (८) अर्काको चिज माथि लोभ गर्नेको विषय :-

यो मनबाट हुने कुकर्मको विषय हो।

आठौं कर्मफल अर्काको चिज देख्दा लोभ गर्ने हो। यो कर्म मनले मात्र गर्ने हो। अर्काको खाद्य समाग्री, धन सम्पत्ति, घर, सवार हुने जति पनि छ जस्तै घोड़ा गाड़ी इत्यादि यी सबै मेरो भए त हुने थियो भनी लोभ गर्ने। यी सबै चिज मेरो अधिनमा गर्नु पाए त कति राम्रो हुने थियो भन्दै ती चिजहरू आफ्नो बनाउने उपाय र चेष्टा गर्नुमा प्रयास गर्दै घरी घरी सम्झँदै लोभ गर्छन्। यस संसारमा अरूले उनीहरूकै धन सम्पत्तिमा चैन र अराम गरेको दख्दा मेरो पनि यस्तो भए त हुने थियो भन्दै लोभ गर्छन्। फेरि आफ्नो जे जति छ त्यसलाई नै मेरोमा यस्तो चिज छ, यति धन सम्पत्तिं छ भन्दै भन्नु पनि राम्रो होइन। फेर अर्को चाहिँ मालिक नभएको धन सम्पत्ति, जग्गा जमिन, घर, गाड़धन, सुनको खानी जंगलको रूख फल-फूल, जंगली जन्तु इत्यादि सबै नै आफ्नो बनाउने इच्छा गर्ने अनि लोभ गर्ने यी कुनै पनि राम्रो कर्म होइन। यी सब लोभ गरेको कुकर्म हो। यसरी लोभ गरेको पनि तीन प्रकारले फल भोग्नु पर्छ। प्रथम यो जीवनपछि अर्को जीवन प्रेतलोकमा जन्म हुन्छ। दोस्रो प्रेतयोनिबाट मुक्ति भएपछि मानिसको जीवनमा जन्म लिए स्त्री भएर जन्म लिनेछ। स्त्री मात्र होइन तर नराम्रो बानी भएको वेश्या भएर जन्मु पर्छ। यदि वेश्या भएन भने पनि नराम्रो चाल चलन भएको, धेरै पुरूषसंग सम्बन्ध राख्ने हुन्छ। तेस्रो नराम्रो शहर या देशमा जन्म लिन्छ। नराम्रो देश भन्नाले ऋतु उल्टा हुने देश, ठण्डा महिनामा पानी पर्ने गरम महिनामा ठण्डा हुने, असिना पर्ने, खेती पाती नहुने, खड़ेरी पर्ने। सधैं अशुभ मात्र हुने जग्गामा जन्म लिनेछ।

## मनबाट कुविचार उत्तपन्न हुने अनि इर्ष्या गर्ने विषय

मनबाट हुने कुकर्म अरूलाई ईर्ष्या गर्ने, अरू माथि रिम गर्ने हो, अरूले गरी खाएको, उन्नति गरेको देखिनसक्ने वा हेर्नु नसक्ने। यसगी आरिस र ईर्ष्याले आँखा जलेर रिसले चुर चुर भएर अरूलाई कुटपीट गर्ने हुन्छ। अरूले सुख र शान्तिसंग गरी खाएकोमा ईर्ष्या गरेर उनीहरूले सुख र शात्ति नपाउन् भनी इच्छा गर्ने। सकेसम्म त कसरी हुन्छ उनीहरूको आनन्द, सुख र शान्ति नष्ट गरिदिने चेष्टा गर्ने हुन्छ। अरूको धन सम्पत्ति, विद्या भएकोमा, रूप राम्रो भएकोमा, जात राम्रो भएकोमा, काम राम्रो पाएकोमा, व्यापार राम्रो भएकोमा, दोकानमा राम्रो बिक्री भएको इत्यादिमा ईर्ष्या र रिस गरी मनभित्रबाट अरूको कुभलो चित्ताएर उनीहरूलाई कसरी हुन्छ उन्नति गर्नु नदिने उपाय गर्ने हुन्छ। यस्तो प्रकारले अरूमाथि कुभलो चित्ताएर ईर्ष्या गरेको कुकर्मको फल तीन प्रकारले भोग्न पर्छ। प्रथम मृत्युपछि नरकमा जन्मेर महादुःख भोग्नु पर्छ। दोस्रो मान्छे भएर जन्मे आफूलाई कसैले पनि विश्वास नगर्ने हुन्छ। अनि व्यर्थै पनि रीस ज्यादा उठने हुन्छ, कुनै कारण नभए पनि व्यर्थै रीस बेसि उठिबस्ने हुन्छ। तेस्रो चाहिँ मान्छे भएर जन्मे उसले राम्रो खाना खानु पाउने छैन। यस्तो घर परिवारमा जन्म लिन्छ कि खाना पिना जुटाउन नसक्ने, पाए पनि नराम्रो कम्ति कहिले पनि खाना भर पेट खाना पाउने छैन। फेरि आफू जन्मेको घर पनि कुनाकाप्चा चेपचाप, अफठ्यारो जग्गामा हुन्छ।

## दशौं उल्टा विचार भएको नास्तिक विषय :-

मनबाट हुने दशौं कुकर्म यस प्रकारले वर्णन गरिन्छ :- कर्मफलमा विश्वास नगर्ने, पूण्य कर्म गरे फल सुख पाउँछ कुकर्म गरे त्यसको फल दुःख पाउँछ भन्ने कर्मफलमा बिश्वास नगर्ने हुन्छ। सत्य मार्गको शिक्षा लिएर जस्तो शिक्षा छ त्यसको पालन गरे आफ्नो क्लेश शुद्ध निर्मल भई

मुक्ति प्राप्त गर्ने इच्छा नगर्ने हुन्छ। नित्य दृष्टि र अनित्य दृष्टि सिद्धान्त भएको र भगवान् त्रिरत्नलाई नास्तिक दृष्टिले हेर्ने अथवा उल्टा विचारले हेर्ने हुन्छ। भगवान् बुद्धका वाणीहरू, सिद्ध महापुरूष अनि महापण्डितहरूले भगवान्का वाणी र ग्रन्थ व्याख्या गरिएका टीका टिप्पणीहरू सत्य होइनन् भनी विश्वास नगर्ने नास्तिक हो। यस्तो नास्तिक विचार भएको कुकर्मको फल पनि तीन प्रकारले भोग्नु पर्छ। प्रथम कुकर्मको फल त पशु योनिमा जन्म हुन्छ। दोस्रो केही नबुझ्ने आज्ञानी लाटो सुङ्गुर जस्तो पशुको जन्म हुन्छ। पशुमा पनि राम्रो नराम्रो ज्ञानी आज्ञानी धेरै हुन्छन्। तर यहाँ यस कुकर्मको फल तामसिक र अबुझ पशु सुत्ने मात्र खोज्ने सुङ्गुरको जन्म हुन्छ। एकदमै अल्सी पशु हो। तेस्रो अन्न उब्जाउ नहुने ठाउँ र अनिकाल ज्यादा हुने देशमा जन्म लिनेछ।

पाँच महापापमध्ये चारवटा बताइसक्यो। पाँचौं भगवान् तथागत स्वरूप आफ्नो गुरु लामाहरूलाई नराम्रो विचार गरी मार्छु भनी चित्ताउने, भगवान् तथागतका सत्यवाणी होइन भनी भन्ने, चैत्य, माने, वा छोरतेन भत्काउने, बोधिसत्व, लामा गुरु भिक्षुहरूको हत्या गर्ने, भिक्षुणीहरूको शील भंग गरिदिने, धर्मको मार्गमा बाधा दिने, भिक्षु लामा संघको चिजहरू चोर्ने, प्राणीहितको निम्ति उद्धार भावना लिएर पूण्य गरेकोमा नराम्रो चित्ताउने, यी सब कुकर्म हुन्, पाप हुन्। यी कर्मको फल अघि बताए झैं असाध्य दुःख भोग्नु पर्ने हुन्छ क्रमैसित। यस्तो कुकर्म गरे लाखौं वर्षसम्म दुःख भोग्नु पर्छ।

## दश कुशल कर्मको फल विषय संक्षेपमा :-

दश अकुशल कर्म त्यागेर दश कुशल पुण्य कर्महरू यसप्रकार छन्

-शरीरले गर्ने कुशल पुण्य कर्म तीनवटा छन्,

१) प्राणीहत्या त्यागेर - मार्नु लागेको, हत्या हुन लागेको जस्तै कुखुरा, बाख्रा, माछा आदि यी प्राणीहरूको ज्यान वा प्राण बचाइदिने हो। हत्या गर्नुको साटो त्यस प्राणीको प्राण बचाइदिए उत्तम धर्म हो।

२) अरूको चिज, पैसा रुपियाँ चोर्नु त्यागेर दान गर्नु पूजा गर्नु हो।

३) स्त्रीसंग शारीरिक सम्भोग वा मैथुन त्यागेर ब्रह्मचर्यशील पालन गर्नु हो।

**बचनबाट हुने चार कुशल पूण्य कर्म यसप्रकार छन् :-**

१) झूटं बोल्न त्यागेर साँचो बोल्ने।

२) एक अर्कामा फुट गराउन त्यागेर एक अर्कामा अमेल भएको मिलाउने । मित्रता बनाईदिने।

३) अर्कालाई नमिठो गाली गर्ने, कड़ा वचन गर्ने सबै त्यागेर अरूसंग नरम र मिठो बोली गर्ने।

४) बेकामको गफ. अहङ्कारी कुरो, त्यसै बेकारको गफ गर्नु त्यागेर धर्मको वाणी गर्ने, मंत्र पूजा गर्ने, धर्म पुस्तकको अध्ययन गर्ने हो।

**मनबाट हुने कुशल पूण्य कर्म तीनवटा छन् :-**

१) लोभ गर्नु त्यागेर सन्तोष गर्ने।

२) ईर्ष्या, रिस, अरूमाथि कुभलो चिताउने, यी सब त्यागेर अरूको उपकार, भलो चिताउने, अरूलाई सहायता गर्ने हो। लोककल्याण गर्ने वा

सेवाको भावना भएको हो।

३) नास्तिक विचार त्यागेर करूणा गर्ने, मित्रताको भावना राख्ने हो।

यसरी कुशल पूण्य गरेको मुख्य फल यसप्रकार पाइन्छ -

प्रथम कामधातु देवलोकमा जन्म लिन्छ।

दोस्रो मानिसको जीवन प्राप्त हुन्छ, मानिसको जीवन पाए काटमार गर्ने मन हुँदैन। काटमार गर्नु मन पराउँदैन। अरू प्राणीको प्राण बचाउनुमा खुशी हुने हुन्छ। आयु पनि लामो पाइन्छ। निरोगी हुन्छ।

तेस्रो धन सम्पत्तिले युक्त हुने, शारीरिक शक्ति पनि हुने हुन्छ।

अरू पनि दश कुशल पूण्य कर्म गरेको फल छोटकरीमा हो भने - निरोगी, दीर्घायु, प्रसन्न मन भएको, सबै बलले युक्त भएको, धन सम्पत्तिले युक्त हुन्छ। यस जीवनमा मात्र होइन जबसम्म हामीलाई अन्तिम बोधिज्ञान प्राप्त हुँदैन तबसम्म आनन्द, मंगल अवस्था पाइन्छ। जन्म जन्म सधैं सुख आनन्दको भागी हुनेछ। यस्तो सुख र आनन्दको अन्दाज नै गर्नु सक्दैन। आफुले चित्ताएको सबै कुरो पुग्ने हुन्छ।

स्थिर र शान्त मनले ध्यान गरे रूपधातु र अरूपधातु देवलोकमा जन्म हुनेछ। गम्भीर रूपले ध्यान गरेको फलस्वरूप रूपधातु र अरूपधातु देवलोकमा जन्म लिनेछ।

संसारको दुःख समुदायमा बताउने र विशेष गरेर छ-लोकको आफ्नो आफ्नो दुःख संक्षेपमा बताउने मध्ये **प्रथम** -

अविद्याको कारणले गर्दा उब्जेको कर्म र क्लेशको फल यो जीवन त्रिधातु संसारमा जहाँ जन्म भए तापनि दुःखै दुःख मात्र छ, सुख र आनन्द त अलिकति पनि छैन। माथि अरूपधातु देवलोक, रूपधातु देवलोक र कामधातु देवलोक र मनुष्यलोक जहाँ जन्मे पनि महासुख भन्ने पाउँदैन। सुख हुन्छ तर दुःख लुकेको सुख हुन्छ, दुःखरहितको सुख छैन। संसारमा जहाँ जन्मे पनि दुःख मात्रै छ जस्तो कि सियोको टुप्पोमा बस्दा दुःखै दुःख हुन्छ सुख त अलिकति पनि हुँदैन त्यस्तै नै हो यो संसारमा जहाँ जन्म भए पनि सियोको टुप्पामा बसे झैं दुःखै दुःख मात्र छ। यस्तो प्रकारको दुःख यस जीवनमा मात्र होइन जन्म जन्म कल्प कल्पसम्म भोग्नु पर्नेछ।

हाम्रो मन बा आत्मा कहिले जन्म भएको हो यो भन्नु त साह्रै पर्छ। तरै पनि अहिलेको जन्मसम्म भनौं यो संसारमा जति पनि जीव जन्तु सानु कमिला र सानु किटाणुदेखि ठूलो हात्तीसम्म जम्मैको जन्म लिई सकेको छ, यस्तो कुनै बाँकी रहेको छैन, बरू दुइतीनपल्ट या त धेरैचोटि एउटै जीवजन्तुको, नरकको प्राणी प्रेत इत्यादिको जन्म हामीले लिइसकेको छौं। यस्तो पशु प्राणी किरा फटेंग्रा भएको समयमा कति अंगहरू काटिएर, चुँडेर गए होला यदि ती सबै अंगहरू जम्मा गरेर राख्न सक्ने भए सुमेरू पर्वत भन्दा पनि उच्च हुने थियो होला। यतिको जन्म लिँदा कति भोकै बस्नु पऱ्यो, कति त जाड़ोको समयमा शरीर लुगा थिएन होला। यसरी दुःख पाएर कति रोयो होला। यदि यसरी रोएको आँसु जम्मा गरेर राखेको भए यो महासागरको पानी भन्दा पनि ज्यादा हुने थियो होला।

नरकमा पनि कति जन्म लिइसक्यो होला। नरकमा यमदुतहरूले हामीलाई काँश, किट र फलाम बिलाएको धातु उम्लिएको झोल कति खिलायो होला भनी अन्दाज गरे यी चार महासागरको पानी भन्दा पनि

ज्यादा पिउन पर्‍यो होला। यस्तै प्रकारको दुःख आदिकालदेखि भोग्दै आएर पनि अहिले अझै पनि यस्तो दुःख भोगेर पनि पश्चात्ताप नगरेर अझै तृष्णाले यो मनलाई बाँधेर दुःख पाउने कर्म गर्छ। यसरी दुःखको स्वभाव नचिने या बुझ्ने कोशिश नगरे, अघि अघि कालदेखि जुन दुःख भोग्दै आएकाछौं त्यो भन्दा पनि ज्यादा दुःख पाउनेछौं। अहिले अलिकति आनन्द र सुख पाएको अघिको पूण्य कर्मको फलले गर्दा हो तर यो पनि सकिन्छ। जस्तै ब्रह्म र इन्द्र देवहरूको पनि अघि पूर्वजन्ममा पूण्य कर्म गरेको फल सकिन्छ। यसरी पूण्य कर्मको फल सकिएपछि देवलोकबाट मृत्यु हुन्छ। मृत्युपछि तल दुर्गतिमा जन्मनु पर्नेछ। अहिले अलिकति सुख पाउँदा, धन सम्पत्ति युक्त भएकोमा खुशी हुने, निरोगी हुँदा प्रसन्न हुने यी सब सुख त वर्ष दिनसम्म मात्र हो। आफ्नो पूण्य कर्मको फल सकिएपछि त सुख पनि सकिन्छ, यी सुख सबै दुःखमा परिणत हुन्छ। यी सांसारिक सुख त सपना जस्तो मात्र हो। यसको सार गर्भ केही छैन। देवलोकमा भएका देवहरू पनि आफ्नो पूण्य कर्म सकिएपछि तल दुर्गति नरकमा जन्म भएका धेरै छन्। आफ्नो हात खुट्टा खुम्च्याएको पनि नदेख्ने निष्पट अँध्यारो नरकमा जन्म लिने पनि हुन्छ। यस्तो प्रकारको दुःखबाट मुक्त हुनको निम्ति र दुःखरहितको महासुख प्राप्त गर्नुको लागि गम्भीर धर्मको साधण गर्नु असल हो।

**दोस्रो** - यस्तो प्रकारले कति प्राणीहरूको आफ्ना आफ्ना दुःखहरू छन्। ती मध्ये दुर्गति नरकमा जन्मेर दुःख भोग्नु पर्ने छन्। नरक अठारवटा छन्। आठवटा गरम अग्नि कुण्डको नरक, आठ वटा प्रचण्ड ठण्डा नरक छन्। दुइवटा प्रादेशिक (ङेछे) र समन्त (ङे खोरवा) नरक छन्।

**आठ गरम गरम नरकमध्ये**

## १) सञ्जीबन नरकको विषय :-

आरनमा फलाम जसरी तत्ताएर रातो बनाइन्छ। त्यस्तै यस नरकको जमीन फलामको हुन्छ, फलाम सबै तातिएर आगो जस्तो रातो रन्किएको हुन्छ। प्राणीहरू आफ्नो कर्मफल अनुसार यस नरकमा हिऊँ झरे झैं जन्म लिन्छ। आफ्नो कर्मको कारणले एक अर्कामा देखा देख हुँदा शत्रुसंग भेट भए झैं रिस उठने छ। त्यहाँ जन्मेका सबै प्राणीको हातमा हतियार स्वयं आउँछ अनि एक अर्कामा हतियार हानाहान गरेर मारामार हुन्छ। सबै मरेपछि आकाशबाट वाणी हुन्छ "सञ्जीवन" भन्ने, यो वाणी हुँदा अघि मरेका प्राणीहरू सबै जीवित हुन्छन्। फेरि एकार्कालाई देख्न साथ रिस उठछ, फेरि मारा मार गर्छ फेरि मर्छ फेरि आकाशबाट आवाज हुन्छ "सञ्जीवन" भन्ने फेरि जीवित हुन्छ यस्तै प्रकारले मर्नुपर्छ फेरि जीवित हुने दुःख भोग्नु पर्छ।

### यस नरकको आयु :-




मनुष्य लोकको पचास बर्ष सब भन्दा निम्नस्तर चतुर महाराज देवलोकको एकदिन हुन्छ। यस्तै प्रकारले तीस दिनको एक महीना हुन्छ। बाह्र महीनाको एक वर्ष हुन्छ। यसरी हिसाब गरेर चतुर महाराज देवलोकको आयु पाँच सय

वर्ष हो। यो पाँच सय वर्ष चाहिँ सञ्जीवन नरकको एक दिन हुन्छ। यसरी नै तीस दिनको एक महीना हुन्छ। बाह्र महीनाको एक वर्ष हुन्छ। यस्तै प्रकारले यहाँको आयु पाँच सय वर्ष हुन्छ।

मनुष्य लोकको ५० वर्ष = चतुर महाराज देवलोकको एक दिन

१ दिन = ५० वर्ष

३० दिन = ५० X३० = १५०० वर्ष एक महीना

१२ महीना = १५०० X१२ = १८००० वर्ष एक वर्ष

५०० वर्ष देवको आयु = १८००० X ५०० वर्ष = ९०००००० वर्ष मनुष्यको वर्ष = देवलोकको ५०० वर्ष मात्र हुन्छ।

९०००००० मनिुष्यको वर्ष = सञ्जीवन नरकको एक दिन।

१ दिन सञ्जीवन नरक = ९०००००० मनुष्यको लोकको वर्ष

३० दिन सञ्जीवन नरक = ९००००००X३० = २७००००००० वर्ष मनुष्य लोकको

१२ महीना सञ्जीवन नरक = २७०००००००X१२ = ३२४०००००००० वर्ष मनुष्य लोकको

५०० वर्ष सञ्जीवन नरक = ३२४००००००००X५०० = १६२००००००००००० वर्ष मनुष्य लोकको हुन्छ।

यसरी सञ्जीवन नरकको आयु मनुष्य लोकको १६२००००००००००० वर्ष हुन्छ।

यति वर्षसम्म मर्दै जमिँदै गर्ने असह्य दुःख भोग्नु पर्ने छ। यस्तो दुःख हुन्छ कि एकछिन पनि फुर्सद हुँदैन, यहाँ अलिकति पनि दुःख कम्ति हुँदैन, यहाँबाट छुटकारा नपाइञ्जेलसम्म दुःख भोग्नु पर्छ।

## २) काल सुत्र नरकको वर्णन :-

रन्किएको फलामको जमीनमाथि नरकका दूतहरूले त्यहाँ जन्मेका नरकका प्राणीहरूलाई रूखको मूढ़ा झैं जमीनमा लड़ाउँछ, त्यसपछि आरावालाले मूढ़ामा कालो दाग लगाए झैं नरकका दूतहरूले शरीरमा कालो दागी लगाउँछन् चारवटा, आठवटा, सोह्रवटा, बत्तीस यस्तै प्रकारले कालो दागी लगाउँछन् अनि फलामको आगो बलिरहेको आराले शरीर टुक्रा टुक्रा काट्छन्। काटी सक्दा नसक्दा फेरि जस्ताको त्यस्तै हुन्छ, फेरि कालो दागी लगाउँछन्। फेरि आरीले टुक्रा टुक्रा बनाउँछन्, फेरि जोड़िन्छ। यस्तै प्रकारले असह्य दुःख भोग्नु पर्छ, यसरी दुःख भोग्दा अलिकति पनि फूर्सद हुँदैन अनि अलिकति पनि कम दुखाई हुँदैन। यस्तै प्रकारको दुःख आयु नसकिएसम्म भोग्नु पर्छ। यस नरकको आयु पनि अघि जस्तै हो। देवलोकको जति माथि र उच्च हुँदै जान्छ आयु पनि ज्यादा हुँदै जान्छ अनि नरकको जति तल तल जान्छ आयु त्यत्ति कै ज्यादा हुँदै जान्छ।

### आयुको विषय :

तेत्तीस कोटी देव लोक आयु बराबर काल सुत्र नरकको एक दिन हुन्छ।



तेत्तीस कोटी देवको १ दिन = मनुष्यको १०० वर्ष

तेत्तीस कोटी देबको ३० दिन = मनुष्यको १००X३० = ३००० वर्ष

तेत्तीस कोटी देबको १ वर्ष = मनुष्यको ३०००X१२ = ३६००० वर्ष

तेत्तीस कोटी देबको आयु १००० वर्ष = मनुष्यको ३६०००X१००० = ३६०००००० वर्ष

काल सुत्र नरकको १ दिन = देवलोकको आयु = मनुष्यको ३६०००००० वर्ष

काल सुत्र नरकको १ महीना = मनुष्यको ३६००००००X३० वर्ष = १०८०००००००० वर्ष

काल सुत्र नरकको आयु १००० वर्ष = मनुष्यको १०८००००००००X१००० वर्ष = १०८००००००००००० वर्ष

मनुष्य लोकको १०८००००००००००० वर्ष बराबर काल सुत्र नरकको आयु हुन्छ। यी नरकमा यति लामो वर्ष सम्म जीबित रहन पर्छ अनि यति लामो दुःख भोग्नु पर्छ।

## ३) सङ्गात नरकको वर्णन :-

यस नरकमा कस्तो हुन्छ भने अघि पूर्बजन्ममा आफूले जस्तो जीवजन्तु मारेको थियो जस्तै मृग, भेड़ा, बाख्रा इत्यादि त्यस्तै पशुको टाउको भएको विशाल विशाल पर्वतको विचमा कर्मफल भोग्ने

प्राणीहरूलाई नरकको दूतहरूले जम्मा गर्छन्, पशुको सिङको टुप्पामा आगोको ज्वाला बलेको हुन्छ। यी दुइ पर्वत चेबिएर एक अर्कोसंग ठोकिन्छ, यसरी ठोकिँदा त्यस विचमा भएका प्राणीहरू सबै चेप्टिएर मर्छन्, यस्तो दुःख भोग्नु पर्ने छ। फेरि यी दुइ पर्वत छुट्टिएर अलग अलग हुन्छ, त्यहाँ भएको प्राणीहरू पनि फेरि जस्ताको त्यस्तै जीवित हुन्छ। यस्तै प्रकारले फेरि चेप्टाउँछ मर्छ फेरि जिवित हुन्छ यसरी घरी घरी मर्नु पर्ने दुःख भोग्नु पर्छ आफ्नो कर्म नसकिएसम्म। फेरि अर्को शहर र गाउँ जत्रो जत्रो ओखली हुन्छ आगोले रन्किएको, त्यसभित्र नरकका प्राणीहरूलाई नरकका दुतहरूले हाल्छन् अनि फलामको सुमेरू पर्वत जत्रो चारैतिर आगो बल्दै गरेको मुसलाले ओखलीभित्र भएको प्राणीहरूको टाउकोमा किच्याउँछन् तिल पिसेको जस्तो धुलो हुन्छ, फेरि मुसला उठाउँदा त्यो भित्र भएको प्राणीहरू सबै जीवित हुन्छ फेरि किच्च्याउँछ फेरि जिवित हुन्छ यसरी दुःख भोग्नु पर्छ।



## आयुको विषय :-

थब ठल देवको १ दिन = मनुष्यको २०० वर्ष

थब ठल देवको १ महीना = मनुष्यको २००X३० = ६००० वर्ष

थब ठल देवको २००० वर्ष = मनुष्यको ७२०००X२०००

थब टल देवको आयु = मनुष्यको १४४०००००० वा

थब टल देवको २००० वर्ष = सङ्घात नरकको १ दिन

सङ्घात नरकको १ दिन = मनुष्यको १४४०००००० वर्ष

सङ्घात नरकको १ महिना = १४४००००००X३० = मनुष्यको ४३२००००००० वर्ष

सङ्घात नरकको १ वर्ष = मनुष्यको ४३२०००००००X१२ = मनुष्यको ५१८४०००००००० वष

सङ्घात नरकको २००० वर्ष = मनुष्यको ५१८४००००००००X२००० = मनुष्यको १०३६८००००००००००० वर्ष

मनुष्यको १०३६८००००००००००० वर्ष = सङ्घात नरकको आयु

## ४) **रौरव नरकको विषय :-** ཧཱ་ཧཱ་ཀྲུ།

रन्किएको फलामको ठूलो ठूलो घर हुन्छ। त्यो घरभित्र कर्म फल भोग्नेहरूले जन्म लिन्छन्। त्यो घरको ढोका पनि हुँदैन। बाहिरबाट चाहिँ आगो लगाउँछ, त्यो भित्र भएका प्राणीहरू आगोले पोल्छ, अति दुःख पाउँछ, दुःख पाए पनि कत्तै भाग्नु पनि सक्दैनन् र यस नरकबाट मुक्ति नपाउने रहेछ भनेर रून्छन्, अनि सधैं रूएर बस्छन् यस्तो प्रकारको दुःख भोग्नु पर्छ। आयुको विषय आयु चाहिँ गदेन देवको आयु जति हुन्छ रौरव नरकको १दिन हुन्छ।

गदेन देवका १ दिन = मनुष्यको ४०० वर्ष

गदेन देवका १ महीना = मनुष्यको ४००X३० = १२००० वर्ष

गदेन देवका १ वर्ष = मनुष्यको १२०००X१२ = १४४००० वर्ष

गदेन देवका ४००० वर्ष = मनुष्यको १४४०००X४००० वर्ष



गदेन देवका आयु = मनुष्यको ५७६०००००० वर्ष

रोरव १ दिन = मनुष्यको ५७६०००००० वर्ष

रोरव नरक १ महीना = मनुष्यको ५७६०००००००X३० वर्ष = १७२८०००००००० वर्ष

रोरव नरक १ वर्ष = १७२८००००००००X१२ वर्ष = २०७३६००००००० वर्ष

रोरव नरक ४००० वर्ष = मनुष्यको २०७३६००००००००X४००० वर्ष

रोरव नरक आयु = मनुष्यको ८२९४४०००००००००० वर्ष

## ५) महारौरब नरकको बिषय :-

डरलाग्दा यमदूतहरू हातमा हतियार लिएर नरकलोकको अनगन्ती

प्राणीहरूलाई कुटदै हिर्काउँदै खेदेर तातो रन्किएको फलामको घरभित्र हाल्छन् । फलामको घरभित्र पनि अर्को फलामको घरभित्र प्राणीहरू हालेर ढोका बन्द गरेर चारैतिर ढोका रसाइदिन्छन् । भित्रको ढोका पनि रसाइदिन्छन् बाहिरीपट्टिको ढोका पनि रसाइदिन्छन् । अनि त्यसभित्र प्राणीहरू आगोको तापले सही नसक्नुको दुःख हुन्छ । तन्दुरभित्र रोटी पकाए जस्तो पाक्नु पर्छ । यसरी अब यहाँबाट मुक्ति नहुने रहेछ भनी नरकवासी रोएर बस्छन् । कत्तै भित्रीपट्टिको फलामको घरबाट निस्के तापनि बाहिरीपट्टिको घरबाट निस्कनु सक्दैनन् । यस्तै प्रकारले रोएर बस्नु पर्नेछ यसै कारण रौरव भन्ने नरकको नाम राखिएको हो ।

आयु विषय :-

निम्मीणरति : देव (ठूल गा) १ दिन = मनुष्यको ८०० वर्ष

निम्मीणरति : देवको १ महीना = मनुष्यको ८००X३० = २४००० वर्ष

निम्मीणरति : देवको १ वर्ष = मनुष्यको २४०००X१२ = २८८००० वर्ष

निम्मीणरति : देवको ८००० वर्ष = २८८०००X८००० = २३०४०००००० वर्ष

महा रौरव नरकको १ दिन = मनुष्यको २३०४०००००० वर्ष

महा रौरव नरकको १ महीना = मनुष्यको २३०४००००००X३० वर्ष = ६९१२०००००००० वर्ष

महा रौरव नरकको १ वर्ष = मनुष्यको ८९१२०००००००X१२ वर्ष = ८२९४४००००००० वर्ष

महा रौरव नरकको ८००० वर्ष = मनुष्यको ८२९४४००००००००X८००० वर्ष

महा रौरव नरकको आयु = मनुष्यको ६६३५५२००००००००००० वर्ष

महारौरव नरकको आयु = मनुष्यको ६६३५५२००००००००००० वर्ष हुन्छ।

## ६) तापन नरकको विषय

त्रिलोक बराबरको ठूलो फलामको भाँड़ामा काँस विलाएको झोल भत्भति उम्लिरहेकोभित्र नरकको प्राणी अनगन्ती हालेर भात पकाउँदा चामल उम्लिएको जस्तै भाँड़ाभित्र पकाउँछ। तरै पनि मर्दैन। यसरी पकाउँदा तलको प्राणी माथि आउँछ। माथिको प्राणी तल्लोपट्टि जान्छ। यसरी माथि निस्कँदा यमदूतले अकुंशेले उनेर फलामको मार्तोले टाउकोमा दिएर भित्रपट्टि हालिदिन्छ। यसरी मार्तोलले टाउकोमा हिर्काउँदा बेहोश हुन्छ। यस समयमा चाहिँ पोलेको दुःख भोग्नु पर्दैन, बेहाश भएको कारणले केही थाहा हुँदैन र यति बेला मात्र सुख पाए जस्तो हुन्छ। यसरी काँस बिलाएको झोल भित्र पकाउँदा कतिको दुःख हुन्छ त्यो त हामीले कल्पना गर्नु पनि सक्दैनौं।

आयु विषय :- "शेनड्डुल वाङ चेद" देव = परनिनिर्त वसवर्त्तिन देवको १ दिन = मनुष्यको १६०० वर्ष

परनिनिर्त वसव त्तिर्न देवको १ महीना = मनुष्यको १६००X३०

= ४८००० वर्ष



परनिनिर्त वसव त्तिर्न देवको १ वर्ष = मनुष्यको ४८०००X१२ = ५७६००० वर्ष

परनिनिर्त वसव त्तिर्न देवको १६००० वर्ष = मनुष्यको ५७६०००X१६००० =

परनिनिर्त वसव त्तिर्न देवको आयु = मनुष्यको ९२१६००००००० वर्ष

तापन नरकको १ दिन = मनुष्यको ९२१६००००००० वर्ष

तापन नरकको१ महीना = मनुष्यको ९२१६०००००००X३० वर्ष = मनुष्यको २७६४८०००००००० वर्ष

तापन नरकको १ वर्ष = मनुष्यको २७६४८००००००००X१२ वर्ष= ३३१७७६०००००००० वर्ष

तापन नरकको १६०.०० वर्ष = मनुष्यको ३३१७७६००००००००X१६००० वर्ष

तापन नरकको आयु = मनुष्यको ५३०८३१६००००००००००० वर्ष हुन्छ।

**७) प्रतापन नरकको वर्णन :-**

रन्किएको फलामको घरभित्र नरकका प्राणीहरू हालेर यमदूतहरूले तीन सुरमा धार भएको भाला लिएर त्यो भाला पनि आगोको ज्वाला मरी, यस्तो भाला तल खुट्टाको पैतालाबाट रोपेर माथि काँध र टाउकोमा निकाल्छ। फेरि अर्को भालाले मल र मुत्रद्वारबाट रोपेर माथि शिरमा निकाल्छ। यति मात्र होइन फलाम रन्किरहेको साङलीले शरीर सबै बाँधिदिन्छ यसरी आगो बलेको साङलीले शरीर कसिदिँदा शरीरको छाला र मासु एउटै रहँदनै यस्तो महादुःख हुन्छ। आयु आधा कल्प हो, हामीले गणती गरेर गरी सक्नुछैन।

## ८) "नर मे" - बज्र नरकको वर्णन :-

नरक लोकको यमदूतहरूले फलामको कोइला पर्वत जत्रो थुपारेर आगो सल्काउँछ अनि त्यस फलामको कोइलाभित्र कर्मफल भोग्ने प्राणीहरू समातेर कुटदै हाल्छन्। यसरी प्राणीहरूलाई  कोइलासगैँ लाश जलाएको जस्तो गरेर जलाउँछन्। आगो फुक्ने बाध र चितुवाको छालाले बनाएको खलाँतीले आगोको ताउ झन तेज गर्छ। यसरी प्राणीको शरीर र आगोको ज्वाला एउटै भएर जल्दा शरीर देख्न सक्दैन। यस्तो प्रकारले आगोमा जल्नु पर्दा दुःखले रूनु र कराउनु मात्र सकिन्छ। यसरी रूँदा र कराउँदा आगोभित्र शरीर देख्दैन अवाज मात्र सुनिन्छ। आगोको ताउ अलिक कम्ति भए



जस्तो हुँदा त्यहाँबाट भाग्नुको निम्ति निस्कनु लाग्दा डरलाग्दो यमदूतहरूले काँड़, धनुष, चाबुक र फलामको मुङ्ग्रो हिर्काउँदै काँम विलाएको उम्लिँदै गरेको झोल मुखमा खुवाइदिन्छ, फेरि त्यही आग्नी कुण्डमा हाली दिन्छ। यहाँबाट मुक्ति पाउने इच्छा अटुट हुन्छ। तर यस्तो भए तापनि मुक्ति पाउने उपाय हुँदैन। यस्तो प्रकारले कल्प कल्प दुःख भोग्नु पर्छ। यस नरकको आयु एक कल्प हुन्छ। यो बज्र नरकमा महादुःख पीड़ा र सन्ताप अटुट सहनु पर्छ। यो नरकमा पाँच महापाप गर्ने मात्र जन्म लिनछ जस्तै आफ्नो गुरुको निन्दा गर्ने, उल्टा दृष्टिले हेर्ने, आफ्नो आमा, बाबु, गुरु, आदिको हत्या गर्नेहरू मात्र यस नरकको भागी हुन्छन्। अर्को यस नरकका प्राणीहरूको शरीरमा यमदूतहरूले यसरी काँटी ठोकी दिन्छ कि शरीरमा सानु सियो छिर्ने जग्गा पनि हुँदैन। जिब्रोमा चाहिँ पाँच सयवटा गोरूहरूले जोतिदिन्छ, जिब्रोमा सानु सियोले घोच्दा त सहनु सक्दैन्। झन यत्रो पाँच सयवटा गोरूहरूले हलो जोत्दा त कस्तो हुन्छ हामीले विचार पनि गर्न सक्दैनौं। यस्तो प्रकारको सन्ताप पीड़ा र दुःख हुन्छ जसमा एकछिन पनि फुर्सद हुँदैन। पानीको धारा बगेको झैं दुःखको धारा आईबस्छ।



समन्त नरकको सोलह अंगका वर्णन (जेखोर वा ) बज्र नरकको चार दिशामा चार चारवटा समन्त नरक छ, पूर्व दक्षिण पश्चिम र उत्तर दिशामा -

*(१) कुक्कुल वा अग्निखदा वा अगेनोको नरक*

*(२) कुणपम् = कुहिएको लासको दलदल*

*(३) क्षुरधारा वा छुराको मैदान*

*(४) असिधारा = छुरी र तलवारको जंगल।*

यी चारवटा नरक चारतिर छ, पूर्वमा यी चारवटा, दक्षिणमा चार, पश्चिममा चार र उत्तरमा चारवटा छन्, जम्मा सोह्रवटा। फेरि पूर्व र दक्षिणको विचमा फलामको अयः शाल्मली भन्ने रूखको जंगल छ, यस्तै प्रकारले दक्षिण र पश्चिमको विचमा पश्चिम र उत्तरको विचमा अनि उत्तर र पूर्वको विचमा चारै कुनामा एक एकवटा शालभरिको रूख छ।

## पहिलो अग्नि खदा वा कुक्कुल समन्त नरको वर्णन

कल्प कल्पसम्म बज्रनरकमा दुःख भोगिसकेर त्यहाँको कर्म सकिएपछि हर्षित हुँदै शीतल हुने ठाउँ हेर्दै आउँदा टाड़ामा ठूलो कालो छाया जस्तो खाल्डो देख्दा अब शीतलमा बस्नु पाउने रहेछ भनी त्यहाँ पुग्छ। त्यहाँ पुग्दा छाया त होइन माथिपट्टि खरानी र खरानीकोमुनि आगोमा अगेना हुन्छ। त्यसमाथि टेकेर जाँदा खुट्टा अगेनामा परेर मासु सबै जलेर अलग अलग छुटिन्छ। यस्तो प्रकारको दुःख भोग्नु पर्छ। "पुणपम् कुक्कुल" नरकबाट निस्कन अति गाह्रो हुन्छ।

## दोस्रो कुहिएको लाशको दलदल :-

यस्तै प्रकारले अग्नि कुण्डबाट निस्कन्छ। यति लामो कल्पसम्म नरकको दुःख भोग्नु पर्दा तिर्खा लागेर पानी पिउन पाइन्छ कि भनी आफूले अघि झैं पानीको पोखरी देख्छ। त्यहाँ हिँड़ेर जान्छ, त्यहाँ पुग्दा पोखरी त

हुँदैन। तर त्यहाँ मानिसको लाश, धोड़ाको लाश, कुकुरको लाश कुहिएको लाशको दलदल हुन्छ। त्यस दलदलभित्र भासिन्छ। यसरी त्यो कुहिएको लाश भित्र डुब्दा त्यस दलदलभित्र फलामको तिखो तिखो दाँत भएको किराले टोकेर टोकेर अति दुःख दिन्छ। यस्तो कुहिएको लाशहरूको गन्ध अति नराम्रो हुन्छ। यसरी दुःख भोग्नु पर्ने छ। यस्तै प्रकारले दुःख भोग्दै त्यहाँ पनि बस्नु पर्नेछ।

## तेस्रो क्षुरधारा छुरा जस्तो तिखो धार भएको घात र झारको मैदान भएको समन्त नरकको बर्णन :-

कुहिएको लाशको दलदलबाट कुनै मुस्किलले निस्केर त्यहाँबाट मुक्ति भएपछि खुशी हुँदै घुम्दै जाँदा टाडामा हरिया घाँसको चउर देख्छ। चउर देख्दा अति हर्षित हुँदै त्यहाँ जान्छ। त्यहाँ पुगेर चउरमाथि हिँड़दा खुट्टाको पैताला सबै काटिन्छ। कारण त्यो चउर त घाँसको होइन फलामको छुराको जमिन हुन्छ हेर्दा त घाँस जस्तो देख्ने घाँसको पत्ता जस्तो छुरा हुन्छ। दाहिने खुट्टा टेक्दा दाहिने खुट्टा नै घोचेर दुलो बनाइदिने, देब्रे खुट्टा टेक्दा देब्रे नै दुलो बनाइदिने। यसरी त्यहाँ पैताला छिद्र छिद्र भइसक्दा पनि त्यहाँबाट निस्कनु कठिन पर्छ। कहिले पार गरिसक्नु ? छुराले काटे पनि त्यो ठूलो चउर त पार गर्नु नै पर्छ।



क्षुरधारा नरक

## असिधारा छुरी तलबारको

## जंगल भएको समन्त नरकको बर्णन :-

तेस्रो नरकबाट निस्किएपछि एउटा जंगल देख्छ। जंगल देख्नसाथ त्यहाँ पुग्ने इच्छा गरेर त्यतैपट्टि जान्छ। त्यहाँ पुग्नसाथ रूखको पात सबै हतियार जस्तो, छुरी तलवार जस्तो हुन्छ। रूख पनि फलामको पातहरू पनि सबै छुरी र तलवार भएको हुन्छ। त्यो जंगलभित्र पस्नसाथ हावा चलेर रूखको पात जस्तो छुरी तलवार सबै झर्छ। यसरी झर्दा शरीर सबै टुक्रा टुक्रा बनाइदिन्छ तरै पनि मृत्यु हुँदैन। यस्तै प्रकारले धेरै समयसम्म यो दुःख भोग्नु पर्छ। त्यहाँको कर्म सकेपछि फेरि त्यस नरकबाट मुक्ति भएर खुशी हुँदै आनन्दको सास लिन्छ।



## अयःशाल्मलीवनम् शालमरीको रूखको विषय :-

यस नरकमा भिक्षु शीलाबाट भंग भएको, भिक्षुनी शीलबाट भंग भएको, आफ्नो स्वास्नी हुँदा हुँदै अन्य स्त्रीसंग सम्भोग गर्ने, र आफ्नो पति हुँदा हुँदै अर्को पुरूषसंग सम्भोग गर्नेहरू मात्र यस नरकमा कर्मको फल भोग्नु पर्छ। यो एउटा फलामको रूख हो, यसको पातहरू सबै धारिलो छुरी हुन्छ। आफ्नो कर्मफलले गर्दा यस शालमारी रूख भएको नरकमा पुग्छ। त्यहाँ पुगेर हेर्दा अघि पूर्वजन्ममा आफूले सम्भोग गर्ने स्त्री त्यो रूखको टुप्पोमा देख्छ। रूखको टुप्पोमा भएको स्त्रीले त्यहाँबाट बोलाउँछ। अघिल्लो जन्मको तुस र मायाले गर्दा त्यस स्त्रीलाई भेटने इच्छा हुन्छ। यसरी इच्छा हुँदा रूखमाथि चढ्छ। रूखमा चढ्दा त्यहाँ भएको छुरीको पातले मासु सबै काटेर शरीरमा चोटै चोट लागेर अति

दुःख हुन्छ। रूखमाथि चढ्दा पत्ताहरू सबै ओरालो पट्टि फर्केको हुन्छ। यसरी बल्ल तल्ल रूखको टुप्पोमा पुग्छ। त्यहाँ त अघि देखेको स्त्री त छैन तर डरलाग्दो काग र चिल पो हुन्छ। त्यो काग र चिलले ठुँगेर आँखा नै



निकालिदिने गर्छ। शरीरमा ठुँगेर अति दुःख हुन्छ। फेरि तल रूखको फेदबाट त्यही स्त्रीले बोलाउँछ फेरि तल झर्दा रूखको पात जस्तो छुरीहरू सबै उकालो फर्केको हुन्छ। आफू ओरालो झर्दा छूरी उकालोपट्टि फर्केको कारणले फेरि शरीर सबै टुक्रा टुक्रा हुन्छ। यस्तो दुःख भोग्दै मुसिकलले तल फेदमा पुग्छ। त्यहाँ पुगेर हेर्दा त एउटा डर लाग्दो फलामको मान्छे र डरलाग्दो स्त्री पो हुन्छ। तिनीहरूले समातेर उधो मुण्टो गरेर गाला र टाउको निचारेर गिदी निकालिदिन्छ। यस्तो दुःख कर्मफल अनुसार भोगिबस्नु पर्छ। भगवान् बुद्धले भन्नु भएको छ कि यस्तो नरकको आयु कल्प कल्प



कड़ोर अरव खरव यति हो भनि गन्ति गर्न सक्दैन। जबसम्म आफ्नो कर्मफल शेष हुँदैन त्यतिञ्जेल नरकमा दुःख भोग्नु नै पर्छ, मृत्यु हुने छैन। कर्मफल शेष भए मात्र मृत्यु हुनेछ। आठ प्रकारको गरम नरक, सोह्रवटा समन्त नरक र शालमरी नरकको दुःखहरू

राम्रोसंग मनमा लिएर स्मृति गरेर एकान्त ठाउँमा बसेर आँखा बन्द गरेर आफूयी नरकमा जन्म लिएर स्वयं दुःख भोगेको भावना र ध्यान गर्नुपर्छ। यसरी ध्यान गर्दा कतिको डर र दुःख पैदा हुन्छ यसरी ध्यान र भावना गर्दा आफूले स्वंय दुःख भोकेको र असाध्य डर भए, यति ध्यान र भावना मात्र गर्दा हाम्रो मनले दुःख भाग्नु सक्दैन भने, अहिले नरकमा गन्ति गरि नसक्ने प्राणीहरू दुःख भोग्दै छन्। यी नरकमा जन्मेको सबै प्राणीहरू हाम्रो पूर्वजन्मका माता पिता नभएको कुनै पनि छैन्। कुनै न कुनै जन्मका यी प्राणीहरू हाम्रा माता र पिता हुन्। अहिलेका माता पिता ईष्टमित्र र सन्तानहरू पनि पछि नरकमा जन्म लिँदैनन् भन्न सक्दैनौं। यी नरकमा जन्म लिने कारण र मुख्य बिऊ चाहिँ रिस हो। हामी सबैजना जन्म जन्मदेखि पछि जन्म जन्मसम्म यो क्लेश र रिसको वशमा परेर कति नराम्रो कर्म गर्छौं। त्यो गन्ती गरेर सक्दैन। र यसको कारण र विऊले गर्दा पछि हामी पनि नरकको जन्म लिनसक्छ यसमा कुनै सन्देह छैन।

अहिले हामीले धन सम्पत्तिले युक्त भएको मानिसको जीवन पाएको समयमा, गुरु पनि भेटाइएको बेला, यस्तो गम्भीर अर्थ भएको धर्म पनि पाएको बेला, बुद्धज्ञान प्राप्त गर्नु सक्ने समयमा हामीले यी दुर्गतिमा नजन्मने कोशिश गर्नु पर्छ। अघि अज्ञानताको कारणले गर्दा नराम्रो कर्म गरेकोमा पछताएर, माफ मागेर अबदेखि मेरो प्राण गए पनि जावस तर म अबदेखि उसो यो कुकर्म गर्दिनँ भनी प्रतिज्ञा गर्नु पर्छ। अहिले यसरी कुकर्मको फल भोग्ने नरकका प्राणीहरूमाथि दया र करूणाको भावना राख्नु पर्छ। यसरी दया र करूणाको बलले दुर्गतिमा जन्म भएका प्राणीहरूको मूक्ति होस् अनि यस्तो दुःखबाट मूक्ति पाउन् भनी अन्तर हृदयबाट प्रार्थना गर्नु ठूलो धर्म हो।

"अर्वुदः" नरक भन्छ। यस नरकलाई "छुबुर चेन" भनिन्छ।

५) यो पानी फोका फुटेर शरीरभरि घाऊ हुन्छ। यो घाऊ पनि अति पीड़ा दिने हुन्छ। यसरी नै दुःख भोग्नु पर्छ। यसलाई चाहिँ "निरर्वुदः" नरक भन्छ।

६) यसरी पानी फोका फिल फिल भएको फुटेर घाऊ हुँदा ठण्डाको कारणले निलो रंगको हुन्छ। घाऊ निकै ठूला भएर उत्तपल फूलको पत्रदल जस्तै पत्र पत्र भएर फुटेर आउँछ। यसरी घाऊ चिरिएर



पत्रदल जस्तो आकारको हुन्छ। जसरी ठण्डा महीनामा ठण्डाको कारणले हाम्रो हात खुट्टा फुट्छ त्यसरी नै ठण्डा ज्यादा भएको कारणले घाऊ फुटेर आउँछ। यस नरकलाई "उत्पल" भन्दछ।

७) भित्री रातो मासु पनि देख्ने गरी पत्र पत्र भएर घाऊ हुन्छ। यस्तो घाऊमा ठण्डा ज्यादा भएको कारणले गर्दा घाऊ कमल फूल झैं

पत्र पत्र फुटेर जान्छ भित्रको रातो मासु पनि देख्ने फाटदै जान्छ। हाम्रो अलिकति खुट्टाको कुर्कुच्चा फुटदा त कति दुःख हुन्छ भने झन यहाँ त पत्र पत्र भएर कमल फूल झैं फुल्छ। यस नरकलाई "पदम्" भन्दछ।

८) यसरी पत्र पत्र हुँदै आठ पत्र हुने सोह्र (१६) पत्र बत्तीस पत्र चौंसठ पत्र हुँदैं ठूलो ठूलो बढ्दै जाने हुन्छ। यसरी घाऊ शरीरभरि नै हुन्छ। सानु सियो लग्गाउने जग्गासम्म हुँदैन। यस्तो प्रकारको महादुःख भोग्नु पर्छ। यस नरकको नाम चाहिँ "महापदम" हो।

यसरी ठण्डा नरकको प्राणी यति छ भनि गन्ती गर्नु सक्दैन। गन्ती गरेर साध्य छैन। यसरी ठण्डा नरकमा घाऊ हजार पत्र भएर बड़दै जान्छ। यो घाऊभित्र फेरि फलामको दाँत भएको मसिनो किटाणु पसेर मासु खाने गर्छ। यस्तो ठूलो घाऊको पीर माथि पनि कीराले खाने दुःख भोग्नु पर्छ।

यस्तो दुःख पीड़ा र कष्ट आफूले भोगेको भावना गर्नुपर्छ। अहिले हामी ठण्डा महीनाको समयमा एकै क्षण पनि नाङ्गो भएर बस्नु सक्दैनौं भने यदि हामी ठण्डा नरकमा जन्मेर असंख्य वर्षसम्म नाङ्गो भएर बस्नु परे कस्तो दुःख र कष्ट हुने थियो। यसकारण यस्तो ठण्डा नरकमा जन्मेको प्राणी माथि करूणा र मैत्री दृष्टिको भावना राखी यस्तो दुःख र कष्टबाट छिट्टै मुक्ति होस भनि प्रार्थना गर्नु ठुलो धर्म हो।

**प्रादेशि "ञि-छे-वा" नरकको वर्णन :-** यो नरकको स्थान यो हो भनि निश्चित हुँदैन। दुःख पनि निश्चित हुँदैन्। आफ्नो कर्मफलको अनुसार कोही पहाड़ पर्वतको विचमा निचोरिएर बसेको दुःख भोग्नु पर्छ। कोही ढुंगाभित्र जन्मेर बस्नु पर्ने, कोही हिऊँ जस्तो कक्रक्क परेर

बस्नु पर्छ। कोही उम्लिएको पानी भित्र जन्मिन्छ। कोही चाहिँ आगोभित्र जलेर बस्नु पर्ने। हामीले घरतिर आगो जलाउँदा दाउरा चाहिन्छ अनि दाउरा यस नरकको प्राणीले उसको शरीर हो भनी उसको मन चाहिँ दाउरामा सरह भएर आगोमा जल्ने दुःख भोग्नु पर्छ। कोहि ठूलो ठूलो रूख उसको शरीर हो भन्ने सरह हुन्छ। त्यो रूख काट्दा त्यो प्राणीलाई काटेको जस्तो दुःख भोग्नु पर्छ। यदि आरा लगाएर टुक्रा टुक्रा पारे उसको शरीर पनि टुक्रा टुक्रा पारेको दुःख भोग्नु पछ, मर्नु चाहिँ मर्दैन। ओखली, कुच्चो, नाङ्लो, दैलो, खम्बा, चुलोको चुमकाना, डोरी इत्यादि आफ्नो शरीर हो भनी यी चिजहरूमा आफ्नो मन पसेर ओखली मेरो शरीर हो भनेर बस्छ। ओखलीमा अन्न हालेर कुटदा उसलाई कुटेको दुःख हुन्छ, कुच्चोले बढ़ारदा उसको शरीरले बढ़ारेको जस्तो दुःख हुन्छ, दैलो बन्द गर्दा उसको शरीर चेप्टिएको दुःख हुन्छ, चुलाको चुमकानामा भाँड़ा राख्दा उसको शरीरमाथि राखेको जस्तो दुःख हुन्छ, नाङ्लोमा चामल निफन्दा उसको शरीरमा निफनेको दुःख हुन्छ, डोरीले बाँध्दा उसको शरीरले बानेको जस्तो दुःख हुन्छ, यस्तै प्रकारले यस नरकको निश्चित स्थान र निश्चित दुःख छैन्। यस्तै प्रकारको भिन्न भिन्नै दुःख कष्टहरू भोग्नु पर्छ।

**प्रादेशिक नरकमा दुःख भोगेको उदाहरण :-**

उहिले तिब्बत देशमा "डोग्वेन लिङजे रेपा" भन्ने एक सिद्धि लामा थिए। एक दिन वहाँ एउटा ठूलो पोखरी भएको जग्गामा पुग्न भयो। त्यो पोखरी चारवटा विशाल पोखरी मध्ये एक हो। वहाँले त्यस पोखरीमा हेरेर आँखाबाट आँसु झार्दै यसो भन्नु भयो "अखा कोर नखानु, कोर नखानु" भन्नु भएछ। यसरी रोएको देखेर वहाँका चेलाहरूले किन रूनु भएको र कोर नखानु भन्नु भएको भन्दा, लामाले भन्नुभएछ – "यो पोखरीभित्र

एउटा फोहोर खाने लामाको आत्माले प्रादेशिक नरकमा जन्मेर महादुःख भोग्दै छ।" चेलाहरूले वहाँलाई बिन्ति चढ़ाएछन् कि "हामीलाई पनि देखाई दिनुहवस भनेर"। वहाँको शक्तिले त्यस पोखरीको पानी सबै सुकाईदिएछ। पोखरी जत्रो एउटा ठूलो माछा त्यहाँ रहेछ। त्यस माछाको शरीरमा मसिनो कीरा, मसिनो माछाहरूले टोक्दै मासु खाँदो रहेछ। त्यो माछालाई खाने कीराहरू गन्ति गरेर साध्य थिएन, त्यो माछा आफ्नो शरीर ठूलो भएको कारणले हल्लिनु पनि नसकेर जमीनमा छटपटिन्दो रहेछ, यसरी हजारौं कीराले टोक्दा कतिको दुःख हुन्छ त्यो त आफूले अनुमान गर्नु पर्छ। आफूलाई सानु मच्छर, उपियाँ, जुम्राले टोक्दा त सहनु सक्दैन झन यस्तो हजार हजार कीराले टोक्दा कस्तो पीड़ा र दुःख भोग्नु पर्छ। चेलाहरूले सोधेछन् - "यस्तो नराम्रो कर्म गर्ने चाहिँ को होला ?" भन्दा यो "चङ ला ता नग चेन" भन्ने लामाको जन्म हो। यी लामाका शक्ति अति ज्यादा थियो। वहाँको शक्ति यतिसम्म थियो कि वहाँको नाम सुन्नसाथ भुत प्रेत लागेको मान्छे क्राम्नु थाल्थ्यो, यस्तो भुत प्रेतले सताएको घरमा वहाँलाई निमन्त्रण गर्दा भुत प्रेत वहाँको नाम सुन्नसाथ भाग्नु पर्थ्यो। मरेको मान्छेलाई 'फोवा' गररे मुक्ति को मार्ग लानुमा नाम चलेको कारणले वहाँलाई मान्छे मरेर फोवा गर्नु आउँदा वहाँलाई फोवा गरेको दक्षिणा घोड़ा, चौरी गाई दिनु पर्थ्यो अनि मात्र फोवा गर्थे। फोवा पनि राम्रो नगरेर 'फट्' भन्ने शब्द मात्र भन्थे। यसरी अरूले दान दक्षिणा चढ़ाएको साटो राम्रो प्रार्थना र पूजा नगरी दिएको कारणले आज यस्तो प्रादेशिक नरकमा पाप भोग्नु परेको हो। माछाको शरीरमा टोकेर रगत मासु खानेहरू चाहिँ अघि पूर्वजन्ममा दान दिनेहरू हुन्, मृत्यु भएको मान्छे जस्को निम्ति फोवा गर्नु लगाएर फोवा राम्रो नगरी दिएकाहरू आज

यसरी ऋण उठाउन यहाँ कीरा भएर ऋण उठाउने कर्म गर्दैछ भन्नु भयो।

"डुब थोब थङ तोङ ग्यालपो" भन्ने एक सिद्धि प्राप्त गर्नुभएको अर्का लामा हुनु हुन्थ्यो। तिनी तिब्बतका लामा हुनु हुन्थ्यो। एक दिन वहाँ नसो र वायुको योगा अभ्यास गर्नु एउटा ठूलो चेप्टो ढुंगा भएको जग्गामा जानु भयो। वहाँले त्यस ढुंगामाथि योगा यन्त्र अभ्यास गर्दा त्यो ढुंगा चर्केर फुटेछ। ढुंगाभित्र एउटा ठूलो भ्यागुता रहेछ। त्यस भ्यागुताको शरीरमा अनगन्ति मसिनो कीराले टोकेर मासु र खुन खाँदै रहेछ। यो एउटा काटमार गर्नेमा खुशी हुने लामाको जन्म हो भनी भन्नु भएछ।

यस्तै प्रकारले एउटा ङोर भन्ने गुम्बाको लामा "खेन छेन पालदेन छ्य कोङ" गुम्बामा बसीरहनु हुँदा वहाँले एक दिन आफ्ना चेलाहरूलाई भन्नुभएछ कि आज दुल दही भन्ने नदीको पानीले जे बगाएर ल्याए पनि तिमीहरूले यहाँ ल्याएर आउनु भनि आज्ञा गर्नु हुँदा चेलाहरू गएर नदीको किनारमा हेरिबसेछन् दिनभरीसम्म त केहि बगाएर ल्याएन रहेछ, साँझको समयमा एउटा ठूलो रूखका मूढ़ा बगाएर ल्याएछ। अरू केही पनि नआउँदा यही नै होला भनी त्यो मूड़ा गुम्बामा ल्याएर लामालाई दिनुभयो र यसो भने अरू केही पनि पाएन यही हो भन्दा लामाले अँ यही रूखको मूढ़ा हो भन्नुभएछ। यो चिर्नु भनि आज्ञा दिनुभएछ र त्यो मूढ़ा चिरेर हेर्दा त्यो रूखभित्र एउटा ठूलो भ्यागुता रहेछ अनि त्यस भ्यागुताको शरीरमा मसिना कीराहरूले टोक्दै खुन चुसेर असाध्य दुःख पाएर बसेको रहेछ। लामाले त्यस भ्यागुताको निम्ति ठि र प्रार्थना गरिदिनुभएछ र त्यस भ्यागुताको मृत्यु भएर यस्तो

प्रादेशिक नरकबाट मुक्ति भएछ। यो कस्को जन्म हो भनि सोध्दा एउटा प्रबन्धक को जन्म हो भनी भन्नुभएछ। उसले पूर्वजन्ममा मानिसहरूको घुस खाएर मानिसहरूलाई धेरै सताएको यो कर्मफल हो भनी भन्नु भएछ।

हामी सबैले यस्तो दुःख भोग्नु पर्ने अठारवटा नरकमा जन्म नलिने उपाय गर्नु पर्छ। यस प्रकारको नरकमा जन्मनु मुख्य कारण चाहिं रिस हो। यस नरकमा जन्म लिएका प्राणीहरूलाई करूणा र मैत्री भाबना राखी हामीले सधैं प्राथना गरिदिनु पर्छ यस्तो दुर्गतिको जन्मबाट छिट्टै मुक्ति होस् र सुख पावस भन्ने कामना गर्नु ठूलो धर्म हो।

दोस्रो दुर्गति चाहिँ प्रेत लोक हो र यस लोकको वर्णन :-



प्रेत लोकमा आफ्नो आफ्नो दुःखहरू भिन्न भिन्न प्रकारको धेरै छ। प्रेत दुइ प्रकारको हुन्छ -

१) ज्यीङना नेपे = निमग्न प्रेत

२) खाला ग्युपा = नभश्चर प्रेत

१) निमग्न प्रेत तीन प्रकारको हुन्छ।

(क) छिहि डिब्पा चेन = बाहिरी आवरण प्रेत

(ख) नङ्की डिब्पा चेन = भित्री आवरण प्रेत

(ग) गोखुरकी डिब्पा चेन = विषेश दुःखको भागी बोकेको आवरण प्रेत।

(क) बाहिरी आवरण प्रेत = यो जातको प्रेतहरूले कयौं बर्षसम्म पानीको नाम पनि सुनेको हुँदैन भोक र तिर्खा त असाध्य खपी नसक्नुको लाग्छ तरै पनि खाना पाउँदैन। सधैँ भोक र तिर्खाको दुःख खप्नु पर्छ। खाना खोज्नु टाड़ा टाड़ामा जान्छ तरै पनि खाना पाउँदैन। भोक र तिर्खाले हिँड्न पनि सक्दैन्, कर लागेर हिड़्छ। कतिले टाड़ोमा पानी देख्छ, त्यहाँसम्म पुग्ने अवस्था पनि हुँदैन कोई मुस्किलले बिस्तार बिस्तारसंग त्यहाँ पुग्दा पानी त हुँदैन, पानी सुकेको डाम मात्र हुन्छ। दुःख-कष्ट मात्र भोग्नु पर्छ। लेगमिन नामक प्रेतले राम्रो फल फलेको बगैंचाहरू देख्छ। देख्नसाथ खान नपाइ सबै कोइलाको रास हुन्छ। खानापिना प्रशस्त भएको ठाउँमा पुग्छ, खानां जाँदा त्यहाँ यमदुतहरूले खानु दिँदैन, चाबुक लगाउँछ। भोकाएको दुःखमाथि पनि हिर्काउँदा कस्तो दुःख हुन्छ, यस्तो दुःख सहनु पर्छ। यो लोकमा वर्षाकाल र गरम महीनामा चन्द्रमा (जुन) ले ताप दिएर डड़ाइदिने अनि हिउँदो महीनामा घाम पनि शीतल भई असह्य जाड़ो हुने हुन्छ। यस्तै प्रकारका दुःखहरू वर्णन गरेर साध्य हुँदैन।

उहिले एक समयमा भगवान् बुद्धका चेला "डोशिन कये नामक सिद्धि प्राप्त भएको र ऋद्धि शक्ति भएको लामा हुनु हुन्थ्यो। ऋद्धि शक्ति प्राप्त भएका लामाहरू समय समयमा दुर्गति प्राणीहरूका कल्याण गर्नका निम्ति नरक र प्रेतलोकमा जानुहुन्छ। यसरी नै वहाँ एक दिन प्रेतलोकमा भ्रमण गर्दा वहाँलाई पनि असह्य तिर्खा लागेछ। यसरी तिर्खा लाग्दा पानी खोज्न एउटा फलामको अनुहार भएको, आँखा

पनि ठूलो ठूलो रातो- रातो भएको, हेर्दा पनि डरलाग्ने प्रेतलाई पानी कहाँ पाउँछ भनी सोध्नुभएछ । यसरी सोध्दा त्यस प्रेतले अनुहार डड़ेको जस्तो कालो पार्दै धेरै बेरसम्म रूएर यसो भने - "त्रिसपन्न महापुरूष तपाईले पानी निकालीदिनु हवस अनि हामीलाई पनि दिनुहवस् ।" लामाले भन्नु भयो - "मैले पनि पानी नपाएर पो पानी खोजेको हो ।" प्रेतले भने - महापुरूष तपाई के भन्नुहुन्छ ? म यहाँ जन्म भएको बाह्र वर्ष भई सक्यो अझसम्म पानीको नाम सुनेको थिएन आजै मात्र हो । यति वर्षसम्म खानापिना नपाई पनि जीवित बस्नु पर्छ, यसरी जीवित भएर भोक र तिर्खाचाहिँ असह्य लाग्ने दुःख भोग्नु पर्छ ।

**(ख) नङ्की डिब्पा चेन - भित्री आवरण प्रेतको वर्णन :-**

यस जातको प्रेतलाई पनि खानापिनाको दुःख हुन्छ । खाना खोज्दा खोज्दा कति वर्षबाद खाना पाएर खाना पेटभित्र पुग्नसाथ आगोको ज्वाला भएर पेटभित्रको आन्द्रा कलेजो फोक्सो आदि सबै जलाइदिन्छ । यसरी जलेर आगोको ज्वाला र धुँवा चाहिँ मुख, कान, नाक, आँखातिरबाट निस्कन्छ । यस्तो प्रकारको ज्वाला निस्कँदा कस्तो दुःख हुन्छ त्यो त हामी सबैले कलपना मात्र गर्न सक्छौं ।

चिथुइन डिब्पा चेन भन्ने प्रेतको शरीर लोसेत्रो भएको हुन्छ । मुख सियोको नाथ्री जत्रो सानु हुन्छ । घाँटी घोड़ाको पुच्छरको एउटा रौ जत्रो नाली भएको हुन्छ । पेट एउटा शहर र गाउँ जत्रो ठूलो भएको, हात र खुट्टा घाँसको सिन्का जत्रो हुन्छ । खाना खाने मन लाग्छ । प्रथम खाना मुखबाट छिर्नु सक्दैन, कत्तै अलिकति छिरी हाले पनि घाँटीबाट पस्नु मुस्किल पर्छ । कोई मुस्किल एक दुइ सिता खाना

पेटभित्र त पर्छ, यसरी एक दुइ सिता र थोपा गर्दै यत्रो ठूलो पेट कहिले भरिने असम्भवको कुरो हो। कतै उठेर जान पनि सक्दैन, एकै ठाउँमा बसिरहनु पर्छ। आफ्नो शरीरको भार आफ्नो खुट्टाले थाम्नु सक्दैन। भोक र तिर्खा असह्य लाग्छ तर के गर्नु यस्तो दुःख भोग्नै पर्छ। आफ्नो कन्जुस कर्मको फल त भोग्नै पर्छ।

**(ग) गोखुर डिब्पा चेन दुःखको भारी भोग्ने आवरण प्रेत :-**

यो प्रेत कस्तो हुन्छ भने एक एकजना गरी पालैसितले शरीरभरि घाउ पाकेर पीप र कालो रगतल भरिएको हुन्छ। यस्तो घाउ भएको देख्दा अरू प्रेतहरूले त्यो घाउ कोट्याएर, लुछलाछ गरेर खाइदिन्छ। आफूलाई भोक र तिर्खा लागेको दुःख त छँदैछ त्यस बाहेक फेरि घाउ लुछलाछ गरी चिथारी दिँदा सही नसक्नुको दुःख भोग्नु पर्छ।

**२) नभश्चर प्रेतको वर्णन :-**

यस जातका प्रेत धेरै प्रकारको हुन्छ जस्तै शिकारी (चेन) ग्याल्पो शिन्डे, चुडैल, मशान, मामो, थेहुराङ इत्यादि। यिनीहरूको शरीर र रूप हुँदैन आत्मा मात्र हुन्छ। आकाश र हावामा हिँड्ने हुन्छ। यिनीहरूको मनमा सधैं डर र भ्रम रेहेको हुन्छ। यिनीहरूले सधैं अरूको कुभलो मात्र चित्ताउने स्वभावको हुन्छ। यसरी कुभलो चित्ताउनाले पछि प्रेतबाट मृत्यु भएपछि अझै दुर्गति नरकमा जन्म लिन्छ। आत्मा मात्र भएको काणले सधैं मन भ्रममा पर्ने दुःख हुन्छ। खाना नपाउने दुःख छँदै छ त्यस बाहेक हावामा हिँड्न पर्ने दुःख हुन्छ। यी प्रेतहरू हप्ता हप्ता नै मर्नु पर्ने हुन्छ। अघि पूर्वजन्ममा आफू जुन रोग लागेर मृत्यु भएको थियो, त्यही मृत्यु रोग हप्तैपछि लागेर मर्नु पर्ने दुःख भोग्नु पर्छ। यसरी

हप्तैंपछि मृत्यु भए जस्तो हुन्छ फेरि जन्मिहाल्छ। यस्तो असाध्य दुःख हुँदा यो दुःख मनुष्यहरूलाई सारिदिए उसलाई दुःख कम्ति भएर जानेछ भनी उसको दुःख सार्ने चेष्टा गर्छ। तर आफ्नो कर्मफल अरूलाई सारेर कहाँ सर्ने हो र ? यसरी अरूको कुभलो र अरूलाई दुःख होस भनि चित्ताएको कारणले उसलाई अझ साह्रो दुःख थपिएर आउँछ। अघि पूर्वजन्मको सन्तान, इष्टमित्र, छोरा छोरीको गाउँ घरमा खुशीसाथ भेटन जान्छ। उनीहरूलाई आफ्नो सन्तान भनेर नराम्रो त चित्ताउँदैन तरै पनि उसको कुकर्मको दुषित प्रभावले गर्दा सन्तानहरू विमार हुन्छन्। सन्तानहरूलाई यो पनि थाहा हुँदैन कि उनीहरूको पूर्खा प्रेतमा जन्म लिएको छ भनेर अनि पूर्खाको कारणले गर्दा विमारी भएको हो भनेर पनि थाहा हुँदैन।

यसरी इष्टमित्र र सन्तान विमार हुँदा वैद्यको औषधीले काम गर्दैन। विमारको कारण फुटाउन तान्त्रिक लामा बोलाई जोखाना देखाउँछ अनि प्रेतले दुःख दिएको बुझेर लामाले कुन उपायले हुन्छ झार्ने काम गर्छ। यसरी शक्ति भएको तान्त्रिक लामाले "सिनेन" (मोच) गर्दा त्यो प्रेत सात तल्ला जमिन मुनि गाड़िनु पुग्छ। तेल उमालेर "चिन्सेक" (होम) गरि दिँदा कल्प कल्पसम्म आगोले जल्नु पर्ने दुःख भोगिबस्नु पर्छ। यसरी मंसाउदा लामाले सेतो ढुङ्गा (दलसिङ पत्थर) ले मंत्र जपेर हिर्काए शरीरमा लागेर टुक्रा टुक्रा पारिदिन्छ, फेरि मंत्र जपेर फुकिदिँदा हावामा बतासिनु पर्ने दुःख हुन्छ। अघि झैं वर्षकालमा जूनको ताप पनि घामको जस्तो भएर रातमा पनि गर्मी हुन्छ दिनमा घामको तापले गर्मी निश्चय हुन्छ। हिउँदोमा चाहिँ घाम पनि शीतल भएर जाड़ो हुन्छ रातमा त जाड़ो हुन्छ दिनमा पनि जाड़ो हुने दुःख खप्नु पर्छ। कति

कुखरा, कुकुर आदि पशु पक्षीको रूपमा पनि यस्तो प्रकारको प्रेतको जन्म भएको हुन्छ। यस्तो प्रेत मानिस कुखुरा र कुकुरमा जन्मे कुरूप हुन्छ हामीले हेर्न पनि मन पराउँदैनौं, खुशी हुँदैनौं।

अघि एक समयमा भगवान् बुद्धका चेला भिक्षु "डोशिन के" ऋद्धि शक्ति भएका थिए। एक दिन वहाँ "नावाजेवारी" नामक प्रेतको देशमा जानु भएको बेला एक दृश्य देख्नु भएछ। एउटा महल जस्तो घरमा एउटी स्त्री रूप पनि सुन्दर भएको शरीर पनि स्वास्थ र राम्रो चिट्टिक्क मिलेको हेरूँ हेरूँ लाग्नेसंग भेट हुँदा त्यस स्त्रीले वहाँलाई स्वागत गरी निम्ताएर उसको महलमा **लगेछ**। त्यहाँ फेरि एक दृश्य देख्नु भएछ। वहाँलाई एउटा सुनको पलङ्मा बस्नु दिइछ। त्यो सुनको पलङ्को चारवटा खुट्टामा चारजना प्रेतहरू साङ्लीले बाँधेर राखेको रहेछ। केहीक्षण पछि त्यस स्त्रीले भिक्षुलाई भोजन चढाएछ अनि भनेछ कि यदि तपाईलाई यो प्रेतहरूले खाना मागे नदिनु हवस्। भिक्षु डोशिनकेले खाना खाँदा प्रेतहरूले मागेछ, यसरी माग्नु हुँदा वहाँले एकजना प्रेतलाई खाना दिएछ, त्यो खाना त्यस प्रेतको हातमा पुग्ने बित्तिकै भुस भएछ। अर्कोलाई दिँदा फलामको डल्लो भएछ, अर्कोलाई दिँदा त्यही प्रेतको शरीरको मासु भएछ, अर्कोलाई दिँदा पीप र रगतमा परिणत भएछ। त्यो स्त्री फेरि त्यहाँ आएर भने मैले हजुरलाई खाना नदिनु भनेको थिए किन दिनु भएको - खाना दिए यस्तो गति हेर्नु पर्छ मैले। मेरो जतिको दया र माया अरू कस्को छ र ? तपाईको पनि छैन। भिक्षुले यसको कारण जान्नु हुन्थ्यो तरै पनि नजानेको जस्तो गरेर सोध्नु भएछ - "आज यसरी तिमी चाहिँ अति सुखमा, यी चारवटा प्रेतलाई यस्तो दुःख भएको कारण के हो ?" - "यो पूर्वजन्मको मेरो

पति हो, यी छोरा हो, यो बुहारी हो अनि यो नोकरनी हो भनिछे । भिक्षुले सोध्नु भयो - यो सब कुन कर्मको फल हो? के कर्म गरेर यस्तो फल भोगेको हो?" स्त्रीले जवाब दिइछ - "संसारको मान्छेले यही कुरोको विश्वास गर्नु साह्रो छ। विश्वास गर्दैन।" भिक्षु - "मैले आँखाले देखेर पनि किन विश्वास नगर्नु र ? विश्वास गर्छु ?" त्यस पछि स्त्रीले वर्णन गरिछ - "म मनष्य लोकमा हुँदा एक ब्राह्मणी स्त्री थिएँ। एक दिन हाम्रो घरमा शुभनक्षत्रको दिन शुभकार्य सम्पन्न गरेको थियो। विहानको समयमा भगवान् बुद्धको चेला आर्य महाकतायाना भिक्षा माग्दै हाम्रो घरमा आईपुग्नु भयो - वहाँलाई देख्नसाथ मेरो वहाँप्रति श्रद्धा र भक्ति उत्पत्ति भयो र मैले वहाँको स्वागत गरे र घरमा निम्ताएर भोजन चढ़ाएँ, दान प्रदान गरे। मेरो मनमा यस्तो भावना उत्पन्न भयो कि मैले आर्य महाकतायानालाई दान र भोजन दिएको पूण्य सबैले बराबर पावस्। यसैले मैले मेरो पतिलाई दान गरेको कुरो बताएँ। दान दिएकोमा खुशी भएको भए पूण्य अति ज्यादा पाउने थियो। तर खुशी नभएर उल्टा रिसाएर मेरो पतिले भने कि हाम्रो ब्रह्मणहरूलाई नचढ़ाई इष्टमित्रले नखाई त्यो टुप्पी नभएको भिक्षुलाई पहिला पहिला किन खाना दिएको ? त्यस भिक्षुलाई त खानाको बदली भुस दिएको भए हुने थियो । त्यसरी नै छोराले पनि नराम्रो वचन गर्दै रिसाउँदै त्यस भिक्षुलाई त फलामको डल्लो दिनु नि भन्दै भने। बुहारीले चाहिँ इष्टमित्रले राम्रो राम्रो खाना ल्याएको आफुले खाएर नराम्रो चाहिँ मलाई दिँदा मैले बुहारीलाई सोधे ईष्टमित्रले राम्रो राम्रो ल्याएको तिमीले खाएर मलाई यस्तो नराम्रो दिएको भनी सोद्धा बुहारीले ईष्टमित्रले ल्याएको यही हो - यदि मैले राम्रो राम्रो खाएको भए मेरो आँसु मैले खाएको बराबर हो भनि झूट बोली। नोकरनीलाई

इष्टमित्रको घरमा खाना पुराउनु पठाएँ। नोकरनीले पनि राम्रो राम्रो सबै खाएर नराम्रो मात्र ईष्टमित्रको घरमा पुराईदिई। अनि फेरि मैले त्यस नोकरनीलाई सोद्धा त्यसले पनि यसो भने मैले तपाईंको खाना चोरेर खाए पीप र रगत खाएको बराबर भनि कसम खाई। मलाई यो सब देख्दा रिस उठेर मैले पनि प्रार्थना गरे कि यिनीहरूको कर्मफल चाहिँ मेरो आँखाले देख्न पाऊँ - यसकारण आज मैले यस्तो देख्न परेको हो। म प्रेतलोकमा जन्मे तापनि अघि आर्य महाकतायानालाई दान र खाना दिएकोमा सुख पाउँदैछु। यदि मैले यिनीहरूको दुर्गति हेर्ने प्रार्थना नगरेको भए म आज तेत्तिस कोटी देवलोकमा जन्मने थिए। तपाईं मनुष्य लोकमा गएर मेरो छोरी, अहिले वेश्या काम गर्दैछ त्यसलाई हाम्रो खबर भनिदिनु हवस। यसो भनेर तिम्रो आमा, बाबु, दाजु र भाउज्यू र नोकरनी प्रेतलोकमा जन्मेर दुःख भोग्दैछ, मैले देखेर आएको हो र आमाले खबर पठाएको कि तिमीले यस्तो काम नगर्नू, यस्तो काम गर्नु उचित होइन, यस्तो काम गरे यसको कर्मफल पछि दुःख भोग्नु पर्ने छ, असत्य कुकर्म छोड़नू अनि सत्य धर्म गर्नु, पाप काम त्यग्नु - भनी दिनु हवस। यदि मेरो छोरीले विश्वास गरेन भने प्रमाणको निम्ति यसो भन्नु हवस - तिम्रो बाबुको घरमा फलाम, ताबा, चाँदी र सुनले भरिएको भाँड़ा चारवटा छ। सुनको लट्ठी र सुनको कलश (बुम्बा) छ। त्यो बेचेर समय-समयमा आर्य महाकव्यानालाई भोजन-दान दिएर हाम्रो नाममा त्यो दान गरेको संकल्प (ङोवा) गरिदिनु। यदि यसरी हाम्रो नाममा समय समयमा दान गरेर संकल्प गरिदिए हाम्रो दुषित कुकर्म कम्ति भएर छिट्टै यो प्रेत लोकबाट मुक्ति हुनेछ। "यस प्रकारको समाचार पठाएर मनुष्य लोकमा "भिक्षु डोशिनके" ले सबै बृतान्तमा वर्णन गरिदिनु भयो। सबै भने जस्तो प्रमाण पाएर त्यो

वेश्य काम गर्ने छोरीले कुकर्म त्यागी आर्य महाकत्यानालाई दान पुण्य गरी माता, पिता दाजु, भाउज्यू र नोकरनीको नाममा संकल्प गरिदिए अनि तिनीहरू सबै प्रेतलोकवाट मुक्त भए।

यस्तै प्रकारको इतिहास यहाँ वर्णन गरिएको छ। बर्षाकालको गुप्तस्थान उपबास सकिए पछि गुरु जेतारी नामक बुद्धका चेला जनपद नामक जिल्लाको भ्रमण गर्नु निस्कनु भयो। यसरी भ्रमणमा जाँदा एउटी कुरूप स्त्री प्रेत पांच सयजना छोरा छोरीको आमासंग भेट भएछ। त्यस प्रेतले गुरु जेतारीलाई देखेर वहाँलाई भनेछ - मेरा पति नानीहरूको लागि खाना खोज्न बुद्धगया गएको बाह्र वर्ष भयो अहिलेसम्म पनि आइपुगेन। तपाई बुद्धगया जानु भए मेरो पतिलाई खाना लिएर छिट्टो आउनु नत्र भने नानीहरू भोकले गर्दा मर्छ भनी समाचार दिनु होला। गुरु जेतारीले सोधे - "मैले तिम्रो पति कसरी चिन्नु - तिम्रो पति कस्तो छ ? सबै प्रेत एक प्रकारको भए तिम्रो पतिलाई म चिन्न सकिदनँ।" स्त्री प्रेतले भनी - "मेरो पतिलाई सजिलै चिन्न सकिन्छ, मुख ठूलो छ, नाक टोड्को परेको छ, आँखा काना छ, घृणा लाग्ने कुरूप भएको छ यस्तो प्रकारको नौ दुर्गुणले युक्त भएको छ।" वहाँ बुद्धगया जानु भएछ। त्यहाँ एक जना बुद्धका चेला प्रव्राजकले "तोर छु र तोर्म" पिण्ड र बलितुष्ट चढ़ाई रहेको बेला त्यहाँ धेरै प्रेतहरू भेला भएको भीडमा त्यस पांचसय जनाको बाबु पनि रहेछ। प्रेतको पत्नीले पठाएको समाचार त्यस प्रेतलाई भनिदिए। प्रेतले भने - "म यहाँ बाह्र बर्ष भईसक्यो तरै पनि खाना पाएको छुइनँ। एक दिन शीलवान भिक्षुले सिङान फ्याँक्दा अरू धेरै प्रेतहरू जम्मा भएर खोसा खोस गरेर त्यो सिङान पनि अलिकति मात्र पाएँ। अरू त कुरा

के गर्नु ? यसरी झगड़ा गरेर मिझान खानु जाँदा अरू प्रेतले कुटेर लुछेर शरीरभिर घाउ भएको छ।"

यस्तो प्रकारको दुःख प्रेतलोकमा जहाँ जन्मे तापनि भोक र तिर्खा लाग्ने दुःख हुन्छ। हामीहरू एक छाक नखाँदा त कति भोक लागेको दुःख हुन्छ, प्रेतहरू कयौं वर्षसम्म पनि भोक्कै बस्नु पर्दा कतिको दुःख हुन्छ होला। यस्तो पानीको नाम पनि सुन्न नपाउने लोकमा जन्म भए के गर्ने ? प्रेत लोकमा जन्म हुने मुख्य कारण कन्जुस गर्नाले हो। आफूले खानु सक्दैन । अरूलाई पनि दान गर्नु सक्दैन्। प्रेत लोकमा जन्म नलिनुको निम्ति हामीले दान पूण्य कर्ममा ध्यान दिनु पर्छ। कन्जुस गर्ने बानी त्याग्नु पर्छ। कन्जुस गर्नेहरू आफूले राम्रो खानु पनि सक्दैन अनि राम्रो लुगा लगाउनु पनि सक्दैन। पछि मत्यु हुने समयमा त्यो धन सम्पत्ति जति भए पनि आफूलाई फाइदा त गर्दैन नोक्सान मात्र गर्छ। हामीले आफ्नो शरीर त छोड़ेर जानु पर्छ झन त्यो कन्जुस गरेर राखेको धनले त हामीलाई दुर्गतितिर लैजान्छ। यसकारण हामी यस्तो दुर्गतिमा जन्म नलिने कर्म गर्नु पर्छ। प्रेतहरूको नाम यसप्रकार छ :- कुम्भाण्डः, पिशाचः, भृतः, पूतनः, कटपुतन, उन्मादः, स्कन्दः, अपस्मार, छाया राक्षसः, रेवती ग्रहः, शकुनि ग्रहः, ब्रह्मराक्षस आदि।

**३) तेस्रो दुर्गतिको पशुको दुःख विषय वर्णन** :- घोप्टेर चार खुट्टाले हिड़ने लाई पशु भनिन्छ।

पशु दुई भागमा विभग्त भएको छ

*१) निमग्न पशु*

*२) छरिएको पशु*

**१) निमग्न पशु** - समुद्रमा हुने पशु जस्तै, घड़ियल, शंख कीरा, भ्यागुता, माछा, गोही, सर्प इत्यादि अनगन्ती छ। ठूलो भन्दा ठूलो जन्तु सुमेरू पर्वतमा धेरैपल्ट बटारिएर बसेको छ। सानु भन्दा सानु चाँहि आँखाले नदेखिने किटाणुहरू छ। ठूलोले सानुलाई खाने दुःख हुन्छ। सानुले ठूलोलाई खाने दुःख हुन्छ। ठूलो माछाले सानु कीरा, माछा सबै खान्छ। ठूलालाई सानु सानु किरा जन्तुहरूले शरीर छेड़ेर ठूलोको शरीरमा नै टाँसिएर मासु खान्छ तरै पनि ठूलोले केही पनि गर्न सक्दैन। आफुलाई टोकेको दुःख सहनु बाहेक अरू केही उपाय छैन। कति चाहिँ निसपट अन्ध्यारो भएको ठाउँमा जन्मेर बस्नुपर्छ जहाँ घामको किरण पुग्न सक्दैन। आफ्नो हात खुट्टा खुम्च्याएको पनि देख्दैन यस्तो दुःख सहनु पर्छ। सर्पहरूलाई तातो बालुवामा बस्नु पर्ने दुःख हुन्छ फेरि साँपलाई आकाशबाट चिल र गरूड पक्षीले खाईदिने डर भोग्नु पर्छ।

**२) छरिएको पशु** - यी पशुहरूले मनुष्य लोक र देवलोकमा लाटो भएर अरूको काम गर्नु पर्ने दुःख पाउँछन्। घरेलु जानवर र जंगली जानवरहरूलाई आफ्नो आफ्नो प्रकारको दुःख छ। जंगली जन्तुहरू एक मूट्ठी धाँस पनि राम्रो संगले ढुक्कै खानु पाउँदैन, कसैले मार्छ कि कत्तैबाट दुश्मन आउँछ किभन्दै यता उति हेर्दै घास खान्छ। एउटा जन्तुले अर्को जन्तुलाई खाने गर्छ। बाघ, चितुवा, सिँह, शिकारी सबैले सानु जन्तु मृग, जरायोहरूलाई मार्छ। कुखुरा र सानु सानु चराले कीरा फटेग्रां खान्छ फेरि कुखरा र सानु सानु चरालाई चिल बाजले खान्छ, यसरी एकले अर्कालाई खान्छ, त्यसलाई फेरि अर्कोले खाइदिन्छ।

शिकारीले जंगली जन्तु मार्नुको लागि पाशो, काँड़ धनु, बन्दुक, छुरी आदिको प्रयोग गर्छ। कति जन्तुको आफ्नो दुश्मन आफ्नै शरीरमा हुन्छ। कसरी भने कति जन्तुको सिङ़ बहुमूल्य हुन्छ, हात्तीको दाँत, कस्तुरीको बिन्दा, सिपी माछाको मोती, बाघ र चितुवाको छाला आदि।

भालुको पित्ता, कति चाँहि रौको लागि आफ्नो प्राण गुमाउनु पर्छ। कति चाँहि मासुको निम्ति मर्नु पर्छ। यसरी धेरै कारणहरूले गर्दा पशुको हत्या हुन्छ। घरेलु पशु त झन अति लाटो र अज्ञानतामा परेको हुन्छ, तिनीहरूलाई मार्नका लागि छुरी लिएर त्यस पशुकोअघि आइपुग्दा पनि मार्छ भनेर थाहा पाउँदैन, उल्टो मार्नु आउने मान्छेलाई माया लाग्दो गरेर हेरिबस्छ, भाग्नु त कता हो कता, थाहा नै हुँदैन। यस्तै प्रकारले दुध धुने, भारी भोक्नु पर्ने दुःख बोकालाई खसी बनाउने दुःख, गोरु भैसी, ऊँट आदि जन्तुको नाक छेड़ने दुःख, हलो जोत्नु पर्ने दुःख यस्तै प्रकारको दुःख धेरै छ। घोड़ामाथि चढ़ेर पीठमा कति घाउ हुन्छ। यसरी घाउ भई भई पनि भारी भोक्नु पर्छ। दुःख्यो भन्नु र बिसाउनु नपाउने दुःख हुन्छ। घोड़ा हिँड़नु सकेन भने चाबुक लगाउँदै हिड़ाउँछ; यसरी हिर्काउँदा कति दुःख हुन्छ भन्ने विचार पनि गर्दैन। घरमा पालेको भेड़ाको ऊन काटछ, जबसम्म बूढ़ो हुँदैन त्यस समयसम्म ऊन काटछ। दुध धुन्छ, अरू पनि धेरै काम लगाउँछ, भारी बोक्ने इत्यादि। गाई, भैंसी भेड़ा सबै जन्तु बूढा बूढी नभइञ्जेलसम्म काम लगाउँछ। जब थारा हुन्छ काम गर्नु सक्दैन अनि कसाईलाई बेचिदिन्छ कि आफैले मारेर मासु खान्छ। आफ्नो काल गतिले मर्ने त कम्तिनै होला प्रायः सबै कसाईले मारेर मासुको व्यापार गर्छ। जीवनभर दुःखै दुःख सहनु पर्छ। अन्तमा पनि सुख र शान्तिले मर्नु पाउँदैन। यस्तो

प्रकारको असह्य दुःख पाएको पशु देख्दा आफू चाहिँ त्यो दुःख पाइरहेको पशु हो भनी भावना गर्दा कतिको दुःख हुन्छ अनि दुःख खप्नु पर्नेछ। पशुलोकमा जन्मेको पशुहरूलाई करूणा र माया गर्नु पर्छ। सानु कीरादेखि ठूलो जन्तु सबैलाई सुख र दुःख भएको विवेक नगर्ने कुनै पनि छैन। यी पशु सबै हाम्रा पूर्वजन्मको माता पिता नभएको कुनै छैन। पूर्वजन्ममा यी पशु सबैले आफ्नो माता र पिताले जस्तो गुण गरेको छ। यस्तो गुणकारी माता र पितालाई करूणा, दया र माया नगरी कसलाई गर्ने ? यी सबै पूर्वजन्मका माता पिता हुन् भनी हामीले उनीहरूले गरेको गुण फर्काउनु पर्छ तर अहिले हामीले गुण फर्काउनुको साटो उल्टा दुःख दिइरहेका छौं। आफ्नो शरीरमा साना काँड़ा घोचेकोसम्म पनि दुःख सहन सक्दैन भने अरू पशु प्राणी पनि आफू जस्तै सम्झनु पर्छ, कुनै पनि प्राणीले दुःख मन पराउँदैन सुख पाउने इच्छा नै गर्छ। हामीले पशु प्राणीलाई सुख दिनु त होइन प्राणसम्म लिने दुःख दिन्छौ। सबै प्राणी आफू जस्तै हो भनी सम्झनु पर्छ। यसरी तीनै दुगतिको लोकमा जहाँ जन्मे पनि अति धेरै लामो आयु लिएर दुःख भोग्न पर्छ। यसरी अज्ञानताको कारणले सधै घरि घरि दुर्गतिमा जन्मेर मुक्तिको बाटो पाउनु कठिन पर्छ। दुर्गतिमा जन्म लिने कर्मको बिऊ अनादि कालदेखि रोपिएको हो। अझै पनि अज्ञानताको कारणले गर्दा दुर्गतिमा जन्म लिने विऊ रोप्छौं। यसकारण अघि आफूले कुकर्म गरेको पश्चात्ताप गरेर भित्री मनबाट माफ माग्नु पर्छ अनि अबदेखि उसो प्राण गए पनि जावस् यस्तो कुकर्म गर्दिनँ भनी प्रतिज्ञा गर्नुपर्छ अनि शील पालन गर्नु पर्छ। पशु प्राणीहरू सबैलाई करूणा, दया र माया गरी आफुले तीन कालमा गरेको पूण्य सबै यी प्राणीहरूका नाममा संकल्प गरेर आन्तरिक हृदयले प्राणीधान (प्रार्थना) गर्नु पर्छ कि सर्ब दुर्गतिका प्राणीहरूले

चाँड़ै मुक्ति पाउन् अथवा बुद्धज्ञान प्राप्त होम् भनी भावना मर्धै गर्नु उत्तम धर्म हो। हामीले पूण्य कर्म जे जस्तो गरे पनि यी दुर्गतिमा जन्म लिएका प्राणीहरूका उद्धार गर्नुको निम्ति उनीहरूका नाममा सबै पूण्य सकंल्प गरिदिनु पर्छ यसो गरे सारा जगतको कल्याण हुने छ।

**४) चौथो स्वर्गीय आनन्द र सुखको लोकमा भोग्नु पर्ने दुःखको वर्णन :-**

षष्ट गतिका प्राणीहरूमा नरक, पशु र प्रेतलोक दुर्गतिको जन्म हो। दुर्गतिमा जन्म लिए त दुःखै दुःख मात्र छ। फेरि मनुष्य, असुर र देवलाकलाई स्वर्ग भनी भन्दछ। यो स्वर्गमा आनन्द र सुख छ भनी विचार गरे सुख र आनन्द छैन र यहाँ दुःख लुकेको सुख पाउँछ। यी मध्ये पहिलो मानिसको दुःख यसप्रकार छ -

मनुष्यलोकमा मुख्य ठूलो तीन प्रकारको दुःख छ अनि चारवटा अर्को ठूलो दुःख चाँहि जन्मनु, वृद्ध हुनु, विमार हुनु र मृत्युको दुःख छ। आफ्नो शत्रु भेटदा पनि दुःख हुन्छ, इष्टमित्र र सन्तानसँग छुटन पर्दा नि दुःख हुन्छ, नचित्ताएको आईलागे या आफुले चित्ताएको असफल भए त्यो पनि दुःखै लाग्छ, यस्तो प्रकारको दुःखहरूमध्ये प्रथम तीन प्रकारको ठूलो मुख्य दुःख मध्ये पहिलो परिवर्तनीय दुःख हो।

**(क) परिवर्तनीय दुःख -** भोक लागेको बेला खाना खान्छौं। या शरीरमा पोष लाग्नुको निम्ति खाना खान्छौं। यसरी खाना खाएर पेट अघाउँदा धेरै आनन्द र सुख पाउँछ। यदि खाना मिठो भए पेट त अघाउँछ मुख अघाउँदैन। यसकारण मिठो भएको हुनाले खाना धेरै

अपच भएसम्म खाए अपच हुन्छ अनि विमारी भएर दुःख पाउनेछ। यसरी सुख हुँदा हुँदै दुःखमा यस्तो प्रकारले परिणत हुन्छ। जाड़ो महीनामा आगो या घाम तापे जाड़ो भएको दुःख सुखमा परिणत हुन्छ, फेरि आगो या घाम ज्यादा तापे फेरि गर्मी र पोल्ने दुःख हुन्छ। घाम ज्यादा तापे विमारी पनि हुनेछ र दुःख भोग्नु पर्नेछ। आफू सुख र आनन्दसंग बसेको समयमा चोर आएर चोरी गरे, घरमा आगो लागे, अचानक विमार भए, गृह र भूट लागे या परेदशबाट नराम्रो खबर आए आफू दुःखीत हुन्छ। यस्तै प्रकारले सुख दुःखमा परिणत हुन्छ।

**(ख) दुःख माथि पनि दुःख** - कोड़ लागेको मान्छेलाई कोड़को घाउ भएको दुःख र पीडा धेरै हुन्छ यस्तो दुःख र पीडामाथि पनि पिलो निस्के असह्य दुःख हुन्छ। पहिलो दुःख नहटि अर्को दुःख थपिन्छ। बाबु मरेर अति दुःख भएको समयमा आमा पनि मर्नु यस्तो प्रकारले दुःख माथि दुःख हुने हुन्छ "मरौमाथि कात्रो" भने जस्तो।

**(ग) सांस्कारिक दुःख** - हाम्रो जीवन संस्कारले तयारी भएको हुनाले जन्मदेखि मृत्युसम्म दुःखपूर्ण जीवन विताउनु पर्छ। कोशिश गरेर धन सम्पत्ति थुपार्छ सुख पाउनका लागि तर यो सुख धेरै बेरसम्म हुँदैन यी सुख सबै क्षणिक हो। तिलको दानाभित्र तेल भए जस्तो तिलको दाना चाँहि संसारिक सुख हो तेल चाँहि भित्र लुकेको दुःख कष्ट हो। यो दुःख बाहिरबाट देख्दैन त्यस्तै तिल फुटे मात्र तेल निस्कन्छ, सुख क्षणिक हो यो सुखमा दुःख लुप्त हुन्छ।

*उदाहरण* - अहिले हामी लुगा लगाएको खाना खाएको, घरमा

बसेर आराम गरेको, तमासा हेरेको, मद पान गरेको यी सब मनोरञ्जन कुकर्म हुन्, अनि दुःख पाउने बिऊ हुन् । जति पनि मनोरञ्जन गरिन्छ सबै दुःखको विऊ भनी बुझ्नु पर्छ कारण संस्कारले तयारी भएको कुनै पनि वस्तु सुख वा दुःख स्थीर छैन, सुख सकिए पछि दुःख आउँछ । एक कप चिया खानु पनि पाप लाग्नेछ । चयापत्ति तयार गर्नु कति दुःख गर्नु पर्छ । प्रथम चयापत्तिको बोट रोप्दा जमिन खन्नु पर्छ, यसरी जमिन खन्दा कति कीराहरूको हत्या हुन्छ । फेरि मजदुरहरूको परिश्रम गरेर कर्म गर्नु पर्छ उनीहरूले गर्मी र ठण्डाको दुःख सहेर यी चयापत्ति तयार गरी हामीले चिया पिउँछौ अनि आनन्द मान्छौ । यो सुख भोग गरेको बिऊ दुःख रोपिन्छ अनि फल पनि दुःख भोग्नु पर्छ ।

हामीले भेड़ाको ऊन र खरायो रौको सुइटर लगाउँछौ । भेड़ा र खरायोको ऊनको सुइटर लगाउँदा आनन्द र खुशी हुन्छौ । भेड़ाको ऊन काटदा ऊनमा हजार हजार जुम्रा हुन्छ यसरी ऊन काटदा सबै जुम्रा पनि काटिन्छ र हत्या हुन्छ । फ़ेरि भेड़ा चराउने गोठालाको पनि अति दुःख लाग्दो जीवन हुन्छ । एकै ठाउँमा कहिले बस्न पाउँदैन । गर्मी महीनामा माथि लेकतिर जान्छ । ठण्डा महीनामा तल गर्मीतिर झर्छ । उनीहरू बास बस्दा ढुंगाको चेप ओड़ारतिर बस्छन् । यस्तो दुःख गरेर ऊन तयार गर्छ । त्यो ऊन फेरि व्यापारीले व्यापार गर्छ । व्यापार गर्दा कति झूट बोल्न पर्छ । यसरी संसारको चिज जे जति पनि छ सुखभित्र दुःख लुकेको हुन्छ ।

पशुको छालाको लुगा हामीले खुशी हुँदै लगाउँछौ । कुनै प्राणीको हत्या गरी यो छालाको लुगा तयार गर्दा त्यो प्राणीको प्राण जाँदा कतिको दुःख भयो होला यी सब पाप हामीले भोग्नु पर्छ । यस्तै प्रकारले

हामीले भात खान्छौं पेट अगाए पछि खुशी हुन्छौ। यही धान उब्जाउ गर्दा हजार हजार कीराहरू मरिएको हुन्छ, प्रायः एक दाना धान उब्जाउ गर्दा एक एकवटा प्राणीको हत्या भएको हुन्छ। यी सब सुखमा दुःख लुकिएको हुन्छ। यसको फल त हामीले दुःख भोग्न पर्छ।

यस्तो प्रकारले हामीले सुखभोग गरेको सबै संस्कार को मुख हो यो सुख र आनन्द क्षणिक हो। अहिले हामीले आनन्द गरेको दुःखको बिऊ हो, फल महादुःख भोग्नु पर्नेछ।

**मानिस जन्मँदाको दुःख को वर्णन :-**

संसारका मानिस गर्भबाट जन्म हुन्छ। नानीको जन्म भयो भन्नु सजिलो छ यसरी खुशी भएर भन्दा जति सजिलो छ त्यसको हजार गुणा ज्यादा जन्मनि र जन्माउनु दुःख छ।

हाम्रो आत्माले गर्भधारण गर्नु भन्दा अघि जन्म र मरणको मध्यस्थित भ्रममा हुन्छ। यस अवस्थमा यो आत्माले सबै बुझ्न सकिन्छ। यो आत्मा आफ्नो कर्म अनुसार उत्तम या निच कूलमा जन्मन्छ। यस आत्मालाई आफ्नो कर्मले कहाँ अनि कस्को कोखमा जन्म लिनु पर्नेछ त्यहाँ लैजानेछ। जबसम्म पति पत्नी समागमको चरम अवस्यामा पुग्दैन तबसम्म त्यो आत्मा गर्भभित्र बास गर्न सक्दैन। यदि छोरा भएर जन्म हुने कर्म भए बाबुप्रति रिस उठछ आमालाई माया लाग्छ। यदि छोरी भएर जन्म हुने कर्म भए आमाप्रति रिस उठछ बाबुप्रति माया लाग्छ। आत्मा गर्भमा प्रवेश हुँदा बाबुको मलद्वारबाट पसेर वीर्यसंग गर्भमा प्रवेश हुन्छ। यसरी आत्मा प्रवेश हुँदा पति-पत्नीलाई अत्यन्त आनन्द हुन्छ। बाबुको वीर्य र आमाको रातो रज र आत्मा यी तीन मिलेर

तोरीको दान जति तरल पर्दथको "मेर मेर" भन्ने अवस्था एक हप्तासम्म रहन्छ। सात दिन पछि त्यहाँ वायु चल्छ र त्यो तरल पर्दाथ अलिकति बाक्लो जस्तो हुन्छ त्यसलाई "नुर नुर पो" भन्छ। यो पनि एक हप्तासम्म बस्छ। त्यसपछि त्यो एउटा कडा अण्डा जस्तो "तर तर" भन्ने अवस्था हुन्छ। यसरी हप्तै पछि हावा चल्छ सात हप्तासम्म यो बिस्तरै एउटा अण्डा जस्तो हुन्छ। सात हप्ता पुग्दा त्यहाँ नाईटो बनिन्छ। चार तत्व पनि उत्पत्ति हुन्छ सात हप्ता भित्रमा ने प्रथम नाइटो बनिसकिए पछि कोष विभाजन को क्रिया प्ररम्भ हुन्छ। बिस्तार बिस्तार कोष बड्दै जान्छ, कोषमा हावा पनि चलिबस्छ, आँखा नाक, कान, मुख, हात-खुट्टा टाउको सबै बिस्तार बिस्तार गरेर अडतिस (३८) हप्तामा पूर्ण रूपले गर्भमा नानी तयार हुन्छ। नानी पूर्ण रूपले तयार हुन ३८ हप्ता लाग्छ। कति चाहिँ ३८ हप्ताा नपुगि नै आफ्नो कर्म अनुसार जन्म लिनेछ कोही ज्यादा कम्ति छ वर्षसम्म पनि बस्नु पर्नेछ। गर्भमा हप्ता हप्तामा हावा त चलिनै रहन्छ। यसरी हावा चल्दा गर्भ भित्रको शिशु चलेर घुम्छ, कसरी भने टाउको तल देखि माथि भएर फरि त्यही स्थानमा बस्नु पर्छ। गर्भ भित्र बस्दा कस्तो दुःख छ भने अन्धकार भित्र बस्नु पर्छ आफ्नो हात खुट्टा खुम्च्याएको पनि नदेख्ने निष्पट अँध्यारोमा बस्नु पर्ने दुःख छ जेल खाना भित्र बसेको जस्तो हुन्छ। गर्भभित्र कस्तो गन्ध छ भने गुहुको कुण्ड जस्तो दुर्गन्धभित्र प्रायः दश महीना बास गर्नु पर्छ। हामी एक क्षण त दुर्गन्ध सहनु सक्दैनौ भने यति लामो समयसम्म दुर्गन्धमा बस्नु पर्ने दुःख हुन्छ। हामी पनि त्यही दुर्गन्धमा बास गरेर नै संसारमा आएका छौ तर यी सब दुःख हामीले भन्नु सक्दैनौ। गर्भका दुःख कस्तो छ भन्ने कुरो बाहेक बालक कालको दुःख त हामी भन्न सक्दैनौ। यी सब हाम्रो ज्ञानको कुरो होइन। यी सब

सर्वज्ञान सम्याक सम बुद्धहरूले मात्र जान्ने र बुझ्ने कुरो हो। गर्भ बास बसेको पाँच हप्तादेखि नानीले दुःखको अनुभव गर्छ। इन्द्रियहरू पूर्ण उत्थान भइसकेपछि गर्भभित्र हुने दुःख भोग्नु पर्छ। आमाले तातो खाना खाए गर्भको शिशुलाई आगोभित्र हालेको दुःख हुन्छ। टण्डा पानी या खाना खाए चिसो पानीमा डुबेको जस्तो दुःख हुन्छ। आमा सुत्दा पर्वतले थिचेको जस्तो दुःख हुन्छ। आमा उठदा दुई पर्वतले चेप्टाएको जस्तो दुःख हुन्छ। भोक लाग्दा भीर (भिरालो) बाट झरेको जस्तो दुःख हुन्छ। हिँड़दा झड़ङ मड़ङ गर्दा, भूकम्प भए जस्तो दुःख हुन्छ, फेरि आँधी वतासले उड़ाएर लगेको जस्तो दुःख हुन्छ। यस्तो प्रकारको दुःख भोग्दै गर्भभित्र बस्नु पर्नेछ। गर्भ अवस्थामा मैथुन वा सम्भोग गर्नु हुँदैन। यदि सम्भोग गरे गर्भको शिशुलाई अझ साह्रो दुःख हुनेछ। यसरी गर्भ अवस्थामा सम्भोग गरे बाबुको लिङ्गले शिशुलाई स्पर्श गरे - तिखो छुरीले रोपेको जस्तो दुःख हुनेछ। गर्भ अवस्थामा सम्भोग गर्नु हुँदैन। आमा बाबु अलग भएर बस्नु उचित हुनेछ। यसो गर्नाले नानी ज्ञानी हुन्छ। आमाले गर्भ अवस्थामा व्रर्त बस्ने, तीर्थ गर्ने, धर्मको उपदेश सुन्ने, धर्म ग्रन्थ पढ़ने, ठूलो ठूलो महात्माको जीवन चरित्र पढ़ने, अरूको भलाई चित्ताउने, अरूमाथि नराम्रो नचित्ताउने, खाना पनि राम्रो राम्रो खाने, ठूलो ठूलो लामा रिम्पोछे, महापुरूषहरूको दर्शन गर्ने यस्तो प्रकारले पालन गर्नु सके गर्भ अवस्थाको शिशुको बुद्धि तेज र ज्ञानी हुनेछ। मंत्र जप गरे अति उत्तम हो। यस्तो गर्भ अवस्थामा सम्भोग गरे, नराम्रो चित्ताउने गरे, झगड़ा गरे, कुव्यवाहार गरे, नराम्रो किसिमको कुराहरू सुने शिशुको बुद्धि पनि त्यस्तै प्रकारको हुन जान्छ, शरीर पनि राम्रो हुने छैन। कर्मअनुसार गर्भ अवस्थाको समय सकिएर जन्म लिने समय हुन्छ। अघि झैं गर्भमा हावा चल्दा

नानीको टाउको योनिपट्टि हुन्छ। यस अवस्थामा शिशुलाई बलियो मानिसले जोड़संग तानेको दुःख हुन्छं। शिशुले आफ्नो बल चेष्टा गरेर योनिपट्टि बाहिर निस्कने कोशिश गर्छ। आमाको योनि साँघुरो भएको कारणले शिशु निस्कनु साह्रो पर्छ। यसरी योनिबाट बाहिर निस्कँदा कस्तो दुःख हुन्छ भने फलामको साँधुरो दुलोबाट हात हाल्दा कतिको दुःख हुन्छ त्यस्तै दुःख हुन्छ फेरि फलामको चुरा हातमा लगाउँदा कतिको मुश्किल पर्छ अनि हातमा पीड़ा हुन्छ त्यस्तै दुःख शिशु योनिबाट निस्कँदा दुःख हुन्छ। यस समयमा आमा र शिशु दुइजनाले नै मृत्युको डर भोग्नु पर्छ किआमा मर्ने डर हुन्छ कि शिशु मर्ने डर हुन्छ। कि त मरणको अन्तिम चरणमा पुगेर बाँच्छ। यस विषयमा पद्मसम्भव गुरु रिम्पोछले भन्नु भएको छ – "आमा र नानी दुइजना, शिशु जन्मँदा एक एक पाइला त यमलोकमा टेकिसकेको हुन्छ या आधा प्राण यमलोकमा पुगेको हुन्छ।" यसकारण शिशु जन्मँदा अति दुःख हुन्छ आमा र शिशु दुईजनालाई भय र दुःख हुन्छ। यस्तो साँघुरो योनिबाट शिशु आफ्नै बलले निस्कनु पर्छ। निस्कँदा फलामको दुलोबाट निस्के झैं दुःख हुन्छ। गर्भबाट निस्केपछि जब पलङ या नरम लुगामा राख्ने छ। यसरी नरम लुगामा शिशुलाई राख्दा काँड़ामा राखेको जस्तो दुःख हुन्छ किनभने अघि गर्भमा हुँदा आमाको मासु र आमाको शरीरको तापको कारणले गर्दा शरीरमा त्यति दुःख कष्ट हुँदैन तर यसरी गर्भबाट निस्के पछि प्रथम लुगामा राख्दा जस्तै नरम लुगा भए पनि काँड़ामा सुताएको कष्ट भोग्नु पर्छ। नानीको जालि निकाल्दा शरीरबाट छाला निकालेको जस्तो कष्ट हुन्छ। नानीको नाभी काटिदिँदा आफ्नो प्राण गए जस्तो कष्ट भोग्नु पर्छ शरीरको मैला सफा गरेर धुँदा र पुछिदिँदा फलामको काँड़े तारको ब्रुसले खोर्से जस्तो कष्ट भोग्नु पर्छ। आमाको काखमा

उठाउँदा चील बाफले कुखराको चिङ्ना उठाएर लगे जस्तो दुःख हुन्छ। मासुको ढल्ला जस्तो मरेको भनौं-त-मरेको हाइन, सास त फेर्छ, जीउँदो भनौं त जीउँदो कसरी भन्नु टाउको पनि उठाउनु सक्दैन। यस्तो अवस्थामा ओछ्यानमा सुलु र लड़ी बस्नु मात्र सक्छ। टट्टी र पिसाबमा लटपट भएर बस्नु पर्ने दुःख हुन्छ। भोक र तिर्खा लाग्दा, भोक लाग्यो, तिर्खा लाग्यो, ओछ्यानमा पिसाब फेरेर चिसो हुँदा चिसो भयो भनि केही भन्नु सक्दैन विमार भएर यो दुख्यो त्यो दुख्यो भनि भन्नु सक्दैन, शरीरमा घाउ भए पनि केही बोल्न सक्दैन, जे जसो भए पनि रूनु मात्र सक्छ। जब नानी रून्छ तब आमाले आफ्नु अन्दाजले बुझ्नु पर्ने हुन्छ। यस्तै प्रकारको धेरै दुःख कष्ट सहनु पर्ने दुःख भोग्नु पर्छ अनि हामी सबैले यी दुःख कष्ट भोगेर यो अवस्था पार गरि सक्यो तर हामालाई केही थाहा छैन कुनै दुःख नपाई ठूलो भए जस्तो हामी सम्फन्छौ।

## बृद्ध अवस्थामा दुःख हुने विषयको वर्णन -

मानिस बालककालदेखि बढ्दै जवान हुन्छ। जवान हुँदा धन सम्पत्ति कमाउने, व्यापार गर्ने सांसारिक काममा भुलिन्छ। यस संसारको काम कहिले पनि सकिँदैन। एक सक्यो अर्को शुरू हुने, पोखरीमा पानीको तरंग आए जस्तो एकपछि अर्को मेलैसित आउने, यस्तो कर्म चाँहि पाप नभएको कुनै पनि हुँदैन अनि पाप चाँहि विऊ भएर फल चाँहि दुःख पाउँछौ। यस सांसारिक क़ाममा केही सार गर्व छैन, नभए पनि यस्तै काममा भुल्दा भुल्दा बृद्ध भएको थाहा हुँदैन। जब बृद्ध अवस्थाले छुएर आउँछ। तब अघि जवानमा भएको अनुहार र शरीरको ज्योति घटेर जान्छ, अघि फैं उज्यालो हुँदैन। शरीरको शक्ति र ताकत

सबै घटेर जान्छ। खाना पीना स्वादिष्ट खाए पनि शरीरको यंत्र कलेजोले पचाउन सक्दैन अनि ज्यादा खानु सक्दैन। आँखाको इन्द्रिय कमजोर भएको करणले टाडोको बस्तु देख्न सक्दैन, सानु सानु चिज देख्न सक्दैन। कानको इन्द्रिय कमजोर भएर कान राम्रो सुन्न सक्दैन। जिब्रोको इन्द्रिय कमजोर भएकोले खानाको स्वाद पाउँदैन बोल्दा पनि जिब्रो राम्रोसंग लाग्दैन। चित्तको इन्द्रिय कमजोर भएकोले मुषित स्मृति हुन्छ, वा स्मृति शक्ति घटेर जान्छ, सबै कुरो बिर्सिने हुन्छ अघिको स्मृति केही रहन्दैन। छाँत सबै झरेकोले खाना खानु केही स्वाद र मज्ञा हुँदैन कड़ा चिज टोक्न सक्दैन, मासु पनि राम्रोसंग चपाउन सक्दैन। बोली पनि राम्रो बोल्न सक्दैन। शरीरको शक्ति घटेकोले गर्दा कम्ति लुगा लगाए जाड़ो लाग्छ। जाड़ो भएर लुगा ज्यादाँ लगाए शरीरमा ताकत नभएकोले लुगा पनि भारी गह्रौं लाग्छ। तृष्णाको इच्छा भएर मनले मजोरञ्जन गर्नु खुशी हुन्छ तर शरीरले सक्दैन। केटा केटीदेखि लिएर ठूलो मानिस सबैले बूढ़ा बूढ़ीलाई गिज्याउँछ, हाँसो उड़ाउँछ यसो गर्दा बृद्ध मान्छेको मन दुख्छ अनि दुःखी हुन्छ। शरीरको ताकत र शक्ति घटेर वा शरीरका तत्वहरूको ताकत कम्ति भएकोले गर्दा सधै विमार भईबस्ने हुन्छ। आफुले केही सोधे अरूले हत्तपत्त जवाब दिँदैन्। अनि दुःखी हुन्छ। बसेको जग्गाबाट जुरूक्कै उठन पनि सक्दैन दुइ हात भूइँमा टेकेर कठिनतासाथ उठन सक्छ। यसरी उठदा काठको केलो जमिनबाट उखाल्दा कतिको साह्रो पर्छ त्यतिकै साह्रो उठनलाई लाग्छ। हिँड़दा सोझो पनि हिँड़न सक्दैन टाउको घोप्टाएर हिँड़छ। लट्ठीको भरमा हिँड़न पर्छ। केटा केटीले चरा पक्रिनु जाँदा जसरी जान्छ त्यस्तै चालमा हिँड़ने हुन्छ। बस्दा जवान जस्तो बस्नु सक्दैन, हात खुट्टाको जोड़नी सबै दुःखेर, शरीर सबै थाकेर बिस्तारैसित बस्नु

पर्छ, यसरी बस्दा एक मनको भारी झरे झैं शरीरलाई दुःख हुन्छ। शरीरमा भएको मासु सबै गलेर शरीर र अनुहारमा चाउरी पर्छ। भित्रको मासु र रगत सुकेर गाला र जोड़नीको हड्डी बाहिर निस्कन्छ। चित्तको स्मृतिशक्ति घटेर लाटा र लठेप्रो जस्तो हुन्छ। यसरी कहीँ जानु सक्दैन र ओछ्यानमा सुतिबस्छ। यस्तो धेरै दुःख र कष्ट सहेर बस्नु भन्दा मरेको भए राम्रो हुने थियो भनी सोच्छ। फेरि मर्नु डर पनि लाग्छ, मरेर कस्तो डर र दुःख हुन्छ होला भनी सोच्छ। ईष्टमित्र सन्तान धन सम्पत्ति घरद्वार सबै त्याग गर्नु पर्ने मृत्युको बाटो आफु एक्लै जानु पर्ने दुःख हुन्छ। यस प्रकारको दुःख बृद्ध अवस्थामा हुन्छ। यो परम सत्य हो।

## विमारी अवस्थामा दुःख हुने विषयको वर्णन -

यी शरीर पाँच तत्वले बनिएको कारणले यी पाँच तत्व गड़बड़ भए रोग लाग्ने छ जस्तै सुकेनाश, पित्तको रोग, क्यान्सर जस्तो अरू पनि थुप्रै बिमार लाग्ने छ। शरीरमा शक्ति भएको जवान मान्छे भए पनि रोग लागे रोगको कारणले यस्तो दुःख र कष्ट हुन्छ कि एउटा कुखुरालाई ढुङ्गाले टाउकोमा हिर्काउँदा कस्तो हुन्छ त्यस्तै गरी रोग लागे जस्तै बलवान ताक्त भएको जवान भए तापनि उसको ताकत र शक्तिको केही चल्दैन। ओछ्यानमा पर्नु पर्छ। शरीर यता उति गर्ने शक्ति पनि हुँदैन। तिमीलाई के भयो कसरी यस्तो विरामी भयो भनि सोद्धा - बोल्ने शक्ति पनि नभएर विस्तरैसंग जवाब दिन पर्छ। दाहिने, देब्रे, उत्तानो, घोप्टो जसरी सुते पनि आराम हुँदैन। यसरी रोग लागे शरीरको यंत्रले ठीकरूपले काम गर्न सक्दैन यसकारण खान पनि रूचि हुँदैन। खाना नखाए शरीरमा दुर्वलता आउँछ अनि रोगले झन ज्यादा

पीड़ा दिन्छ। रातमा निद्रा लाग्दैन। दिनमा दिन लामो लाग्छ, रातमा रात लामो लाग्छ। सुखको समय बितेको थाहा पाउँदैन यही समय नै दुःख कष्ट हुँदा लामो लाग्छ। औषधी खाँदा खाँदा वाक्क लाग्छ। ओपरेशन गर्नु पर्दा पनि त्यति नै दुःख कष्ट सहनु पर्ने हुन्छ यसरी विमारी हुँदा अब मर्ने रहेछ भनि अति साह्रो डर लाग्छ। कति भूतप्रेत, दशाग्रह लागेर भ्रममा परेर आफूले आफ्नो हत्या गर्छ, आत्महत्या, हाम फालेर मर्ने, झुण्डिएर मर्ने इत्यादि। कोढीको रोग लागेको मानिस मरेको बराबर हो। कारण कोढीको रोग लागेको मानिसलाई छि छि र दुर दुर गर्छ, समाजबाट पनि निकालिदिन्छ, यस्तो अवस्था आफ्नो लास आफैले हेर्न परे जस्तो हो। विमारी आफैलें केही काम गर्न सक्दैन अघिको बानी-व्यवहार सबै बदली भएर रिसौलो खस्रो कुरा गर्ने हुन्छ, विमार निकै लामो भए विमारी स्याहर्ने पनि वाक्कै भएर भनेको जस्तो मान्दैन। यसरी सधैं सुत्दा आफ्नो ओछ्यानले पनि बिझाउने हुन्छ। टट्टी र पिसाब ओछ्यानमा नै हुन्छ। यसरी टट्टी पिसाब गर्नु पर्दा लाज त लाग्छ तर के गर्नु लजाएर पनि भएन। यस्तो प्रकारको दुःख त मानव जीवनमा अनेकौं छ। यस पछि अन्तिम दुःख मृत्यु हो।

**मृत्यु हुने बेलामा दुःख हुने विषयको वर्णन -**

मानिसको जन्मसिद्ध अधिकार मृत्यु हो अनि यो परमसत्य पनि हो। शरीर ओछ्यानबाट उठन नसक्ने हुन्छ। खाना देखेकर पनि खानु इच्छा हुँदैन। मरणको दुःख आइलाग्दा दुखित भएर आउँछ। अभिमान र घमण्ड सबै नाश भएर जान्छ। भ्रममा परेर घर छोड़ेर अर्को घरमा गए झैं यो शरीर त्यागेर अर्को शरीरमा परिणत हुने मृत्युको कारणले हो। मानिस जन्मेको दिनदेखि जति दिन, महीना, वर्ष बित्दै जान्छ,

हामीले भन्छौं नानी दिन दिनै बड्दैछ तर वास्तवमा यो बड्को होइन आयु घटेको हो। एक एक सेकण्ड गर्दै हाम्रो आयु घटिरहेको छ तर हामीलाई थाहा छैन। नानी जति ठूलो भयो हामी खुशी हुन्छौं, हामीलाई यो थाहा छैन कि जति ठूलो भयो, मृत्युको नजिक हुँदै जान्छ। जन्मेकोदेखि एक सेकेण्ड पनि नरोकी हामी सबैजना मृत्युको मुखमा गईरहेका छौं। यसरी दिन दिनै हाम्रो आयु छोटो छोटो हुँदै जानेछ। मृत्यु आयु सकेर मात्र पनि मृत्यु हुँदैन, आफ्नो पूण्य सकेर मात्र पनि मृत्यु हुँदैन तर भाग्य वा कर्म सकिए मृत्यु हुन्छ। भाग्य र पूण्य दुवै भए आयु सकिए, भाग्य भएको कारणले यदि आयुको पूजा गरे वा अपारमिताको पूजा गरे आयु बढ़ाउनु सक्नेछ अनि बाँच्न सक्छ। पूण्य सकिए पनि पूण्यको कर्म गरेर पूण्य बड़ाउनु सकिन्छ। भाग्य नसकी मृत्यु भए त्यो अकाल मृत्यु हुनेछ। आयु नसकी मृत्यु भए पनि अकाल मृत्यु भन्ने छ। यसरी पूण्य पनि त्यस्तै हों यदि भाग्य ने सकिए केही उपायले बचाउनु सक्दैन। बज्राधारा, भगवान् बुद्ध अनि भैषज्या राजा स्वंय आउनु भए पनि बचाउनु सक्दैन। यसरी सबै उपाय गर्दा पनि केही पत्तो नलाग्ने हुन्छ। रोगले ग्रस्त पारी अत्यन्त कष्ट सहनु पर्छ। यसरी दिन र रात कष्ट र व्यथा भइरहन्छ। सुत्दा उठन मन लाग्ने, उठदा सुत्न मन लाग्ने धेरै छटपट भईरहन्छ। शाखा सन्तान ईष्टमित्रहरूले चारैपट्टिबाट धेरेर बसे पनि कसैले आफूलाई फाइदा गर्नु सक्दैन। आफ्नो दु:ख कष्ट उनीहरूले भोग्न सक्दैन, आफ्नो कष्ट आफूले मात्र भोग्नु पर्छ। धन सम्पत्ति राश भए पनि आफूले लानु सक्दैन। मन पनि देख्दैन, पछि पनि आउँदैन। अघि जवानी कालमा गरेको कुकर्म सम्झँदा पश्चाताप हुन्छ। दुर्गतिको दु:ख सम्झेर आउँदा भयभीत भएर डर लाग्छ। यसरी मृत्यु आउँदा डराउने हुन्छ। जीवितमा भएको ज्योति पनि हराउँदै

जाँदा भित्रीबाट चिसो भएर आउँछ। पापिष्ट मान्छे मर्ने बेलामा दुइ हात छातीमा राखेर आफ्नो नङले आफ्नो छाती कोतार्छ अघि आफुले गरेको कुकर्म सम्फेर अब दुर्गतिमा जन्म लिने रहेछ भनी डराउँछ। अघि जवान हुँदा आफ्नो हातमा पुरा अधिकार हुँदा अखिरी मरणको समयमा काम लाग्ने सुकर्म नगरेकोले गर्दा, मृत्यु हुने समयमा आफूले थाहा पाउँछ कि आफु कँहा जन्म लिने रहेछ भनी अनि अब महादुःख पाउने रहेछ भनी अघि सुकर्म वा धर्म नगरेकोमा पश्चाताप गर्दै आफ्नो छातीमा आफ्नो हातले पिटदै नङले चिथोर्छ। मनमा ठूलो पछुताउ गर्दै मुटुमा काँडा घोचे झै हुन्छ। यस समयमा पछुताउ गरेर अति ढिलो भईसकेको हुन्छ। अब पश्चाताप गरेर पनि केही फाईदा हुँदैन। यसरी छातीमा हातको नङले चिथोर्दै आफूलाई धिक्कार्दै मृत्युको मुखमा जानेछ। यसैले भन्दछ कि "पापी मानिस यसरी मरेको देखे वा हेर्नु उचित हो। यसरी पापी मानिस मरेको देखे कर्म फल सिकाउने गुरु हुन।" मर्नु भन्दा पहिला नै दुर्गतिबाट यमदुतहरू खण्डन गर्नु आईपुग्छन्। यसरी यमदुतहरू आउँदा मन भयभीत भएर डराउँछ, अनि वेदनाको सामना गर्नु पर्छ वा आफ्नो अनुभव, चेतना भाव सबै दुःखमा परिणत हुन्छ। खाना र पिउनेको नाममा पानी मात्र थोपा थोपा गरेर निल्नु सक्छ। अखिरमा मृत्यु लोकबाट यमदूतहरू प्राण लिन आउँछन्। यस समयमा आफ्नो सन्तान, ईष्टमित्र, घरद्वार, धन सम्पत्ति आफ्नो माया लाग्ने शरीर त्याग्नु पर्दा अत्यन्त दुःख भएर आउँछ। आफ्नो छोरा छोरी परदेश जाँदा केही महीना या वर्ष दिनपछि फर्किहाल्ने हो तरै पनि असाध्य दुःख र पीड़ा हुन्छ। केही समयको निम्ति बिछोड़ हुँदा त यति साह्रो दुःख मान्छ भने, झन जन्माँदा पनि संगै जन्मेको यो शरीर, जीवनभर या शरीरलाई रक्षा र माया गरेर

बसेको, विमार हुँदा पनि स्याहरेर बसेको, सानु काँड़ाले पनि धोच्नु नदिएर जोगाएर राखेको शरीर अब सधैको लागि त्यागेर जानु पर्दा कतिको दुःख हुन्छ होला, अब फेरि फेरि कहिले पनि देख्न पाउने छैन यस्तो असाध्य दुःख भोग्नु पर्छ कि सीमा नभएको दुःख हुनेछ। घरमा पालेको कुकुर बिरालो आदि मर्दा त कस्तो दुःख लाग्छ, आफू बाट छुटिएर जाँदा, झन आफ्नो शरीर र मन अलक हुँदा कस्तो दुःख होला आफै विचार गर्नुपर्छ। अब अखिरमा चार तत्व विस्तारैसंग लीन हुँदै जान्छ। हाम्रो मासु र हड्डी माटो र ढुंगामा लीन भएर जान्छ। यस अवस्थमा मर्ने मान्छेले आफ्नो शरीर तल तल झरेको अनुभव गर्छ अनि उसले सिरानी होचो भयो सिरानी अग्लो लगाई दिनु भन्छ। स्पर्श शक्ति पनि हुँदैन अनि कुतकुती पनि लाग्दै हात खुट्टा सबै लत्रक्क हुन्छ जता राख्यो त्यतै जाने। यस्तो अवस्थामा हाम्रो मासु र हड्डी माटो र ढुंगा झै निश्प्राण हुन्छ स्पर्श थाहा पाउँदैन। दोस्रो रगत पानीमा लीन भएर जान्छ। यस्तो अवस्थामा प्रथम आँखामा अलिकति आँसु निस्कन्छ र मुख सुकेर आउँछ। अनि पानी माग्छ पानी दिए पानीको स्वाद पनि थाहा हुँदैन। तेस्रो शरीरको ताप वा गर्मी आगोमा लीन भएर जान्छ यसरी लींन हुँदा शरीरको ताप विस्तारै ठण्डा भएर आउँछ। चौथो सास वाहिरी हावा बतासमा लीन भएर जान्छ यस बेला सास रोक्दै चल्दै गर्छ, अखिरमा रोकिन्छ। प्रथम गर्भमा प्रवेश हुनु भन्दा अघि पनि नदेखेको यो आत्मा फेरि पनि अदृश्य भएर जानेछ। सास गएपछि यो आत्मा तीन दिनसम्म अचेत अवस्थामा हुन्छ। तीन दिनपछि मात्र यस आत्माको चेतन खुल्छ त्यसपछि आफ्नो मृत शरीर भए त्यही शरीरलाई आफ्नो जुन वर्ग छ त्यसैको रूप देखिने छ जस्तै मर्ने मान्छे मुसा वर्गको छ भने त्यो आफ्नो शरीर पनि मुसाको लास नै

देख्छ। आफुले अरू मानिसहरूलाई देख्छ अनि बोलाउँछ तर जवाब पाउँदैन कारण अरूहरूले मरेको मानिसले बोलाएको सुन्दैन। अनेक प्रकारको दुःख हुन्छ। यो अवस्थामा आफुलाई बचाउने कोही हुँदैन। एक्लै खालि हात जानु पर्छ, यसरी गएपछि फेरि फेरि फर्केर आउनु सक्दैन। यति बेला सत धर्मले मात्र आफुलाई बचाउनु सक्छ अरू कसैले पनि बचाउन सक्दैन। यसैले गर्दा अघिका महापुरूषहरूले भन्नु हुन्थ्यो "धर्म गर्ने मन आमाको गर्भबाटै उत्तपन्न हुन्छ, यसकारण जन्मनुको साथमा मरणको स्मरण गर्नु।" मृत्यु, बालक, जवान, बृद्ध सबैलाई अचानक आउँछ यसकारण धर्म भोलि पर्सि गर्छु भनेर भन्नु हुँदैन, गरिहाल्नु पर्छ, मृत्युको समयमा यही धर्मले मात्र फायदा गर्छ। अहिले समय हुँदा मृत्यु नसम्झेर शत्रुलाई वशमा गर्ने उपाय गर्ने, ईष्टमित्र बढ़ाउने, धन कमाउने यस्तै प्रकारको काममा भुलेर तृष्णा, रिस र अज्ञान यी तीनको वशमा परेर भ्रममा पर्नु पर्छ। मिलारेपाले भन्नु हुन्छ - "धन सम्पत्तिले प्रथम सुख दिन्छ आफूलाई अनि अरूको पनि भलाई गर्छ। जति धनसम्पत्ति भए पनि सन्तोष हुँदैन। मध्यममा अझै कञ्जुसी भएर जानेछ। सक्दैन खर्च गर्नु धर्म र पूण्यका कर्ममा पनि। शत्रु र प्रेत यी दुइलाई इशारा गरेर स्वागत गरे झैं हो। आफुले दुःख कष्ट गरेर कमाएको धन अरू मानिसको निम्ति मनोरञ्जन हुनेछ। अखिरीमा आफ्नो प्राण लाने ग्रह हुनेछ। आफ्नोमा धन भएको कारणले शत्रुको मनमा काँडा बिजे झै आरिस गर्छ। धनको भण्डार भएकोले गर्दा मनमा शान्ति हुँदैन शत्रु लाग्ने डरले। मैले यस्तो सांसारिक लोभ्याउने बस्तु त्यागेको हो। यस्तो पैशाचिक र चतुराई व्यवहार गराउने धन मलाई चाहिँदैन म त्यसलाई घृणा गर्छु। आफ्नोमा जति चिज भए त्यति नै दुःख र कष्ट ज्यादा हुन्छ। धन सम्पत्ति छैन

भने शत्रु पनि हुँदैन।

पुत्र पहिला देवपुत्र झैं हुन्छ। यति माया गर्छ भनी साध्य छैन। पछि ऋण उठाउने साहु झैं हुन्छ। सबै दिए पनि सन्तोष नहुने। अर्काको पुत्री बुहारी बनाई घरमा ल्याउँछ, आफ्नो माता पितालाई घरबाट निकालिदिन्छ। बाबाले बोलाएर पनि जबाव दिँदैन। आमाले बोलाए पनि आउँदैन। अखिरीमा छिमेकि पनि भित्री हृदयबाट नै कपटी गर्ने आफ्नो नाश गर्ने। त्यही पुत्र कूलको शत्रु भई आफ्नो मनमा काँड़ाले चिथोरै झैं आशान्ति बनाउने। यस्तो संसारको गुहु जस्तो छोरा मलाई चाहिँदैन। मैले सबै त्यागेको हो। पहिलो पुत्री देवपुत्री झैं हँसिलो अनुहार भएकी धन सम्पत्ति नाफा गर्ने प्रातापी हुने। पछि चाँहि बाधा नदिइ ऋण उठाउने। पितालाई जे जति पनि भनेर लैजाने। आमाले थाहा नपाई लुकाएर सबै लाने। जति दिए पनि खुशी नहुने। गुणकारी माता पितासंग रिसाएर ठुस्स पर्ने। अखिरमा चैं राक्षसनी झैं रातो अनुहार बनाउने। छोरी राम्रो भए पनि के गर्नु अर्काको गौरव र स्वर्गीय आनन्द बड़ाउने। तृष्णाको कारणले लाज लाग्दो दोष गरे पनि आफनै पुत्री भएको हुनाले के गर्ने ? यस्तो सर्बनाश गर्ने राक्षसनी जस्तो भएकोले गर्दा मनमा काँड़ाले धोचे झै लाग्ने, कहिले नसकिने सन्ताप र दु:ख दिने छोरी मैले त्यागेको हो। सर्वनाश गर्ने पुत्री मलाई चाहिएन। संसारमा धन सम्पत्ति, छोरा छोरी जे भए तापनि अलिकति पनि सुख छैन दु:खै दु:ख मात्र छ। हामी सबैलाई धन सम्पत्ति चाहिन्छ तर कमाउनु साह्रो छ। रोग, मृत्यु, शत्रु र दरिद्र यी सबै जुन चाहिँ चाहिँदैन त्यो चैं आफुमाथि आईलाग्छ। मनुष्य जीवनमा कत्तैबाट पनि सुख छैन।

**पाँचौ असुर लोकको दुःख विषय छोटकरीमा वर्णन -**

पूर्वजन्ममा आरिस गरेको कर्मको फल पाएर असुर लोकमा जन्मन्छ। असुरहरूको आपस्तमा पनि रिस, आरिस र डाहको कारणले संधै कलह झगड़ा भइरहन्छ। कामलोक देवहरूको सुख, शान्ति र मनोरञ्जन देखेर आरिस गर्छ। आरिसले जलेर देवहरूसंग झगड़ा र लडाई गर्नु आउँछ यसरी झगड़ा गर्नु आउँदा देवहरूको फौज आएर हातमा बज्र, तलवार, भाला जस्तो हतियार लिएर माथिबाट तल पठाउँदा असुरहरू कति मर्छ, कति घाइते हुन्छ कतिको शरीरको मासु टुक्रा टुक्रा हुन्छ। यसरी नै सधैँ लडाई गर्ने, मर्नु पर्ने दुःख छोटकरीमा वर्णन गरेको हो।

**छोटो देव लोकको दुःख विषय छोटकरीमा वर्णन -**

देव लोकमा सुखै सुख भएको कारणले सत्य धर्म गर्नुको मन आउँदैन। सधैँ यस्तै सुख र मनोरञ्जन भएकोले गर्दा दुःखको नाम पनि छैन। यस्तो सुख र शान्ति भएको कारणले धर्म गर्ने मन उत्पन्न हुँदैन। आयु कल्प कल्प भएर बसे तापनि धर्म गर्ने मन हुँदैन। देवलोकको सुख पनि परिवर्तनशील हो। पूर्वजन्मको सुकर्मको फल सकिएर आयु पनि सकिन्छ। यसरी मृत्युको दुःख देवहरूले पनि भोग्नु पर्छ। चतुर महाराज देवलोक देखिमाथि काम धातु देवलोकसम्म मृत्युको दुःख भोग्नु पर्छ। यसरी आयु सकिनु एक हप्ता अघि मृत्यु हुने चिन्हहरू पाँचवटा हुन्छन्। देवहरू आफ्नो शरीरको ज्योति कैयौ कोषसम्म उज्यालो दिन्छ।

१ देवहरूको शरीरको ज्योति हराएर जान्छ

२ आफ्नो आसनमा बस्दा अल्छी लागेर एक आसनमा बस्नु सक्दैन।

३ फूलको माला सबै पुरानो र ओइलिएर जानेछ।

४ देव वस्त्रहरू सबै मैला भएर गह्राउन थाल्नेछ।

५ शरीरमा पसिना आउनेछ।

यी पाँचवटा चिन्ह पाएपछि देव आफैले थाहा पाउँछ कि अब मृत्यु हुने रहेछ भनी। यी पाँचवटा लक्षण पाएपछि अरू देव साथीहरू पनि आफूदेखि छुट्टिएर अलग्गै हुन्छन्। अब मर्ने रहेछ भनी दुखित हुन्छन्। यसरी साथीहरू सबै टाडोबाट फूल माला फ्याँकिर आफ्नो साथीको निम्ति प्रार्थना गर्छन्। मृत्युपछि मानिसको जन्म लिएर दश कुशल कर्म गर्नु अनि फेरि देवलोकमा जन्म भएर फेरि भेटौं भनी प्रार्थना गरिदिन्छन्। यसरी प्रार्थना गरेर सबैजनाले एक्लै छोडी दिन्छन्। यसरी पानीबाट बाहिर निकालिएको माछा झै छटपटिँदै एक्लै बस्नु पर्छ। एक हप्ता एक्लै बसेर पाँचवटा दुःख भोग्नु पर्छ। देवलोकको एक हप्ता मानिसको लोकको सात सौ वर्ष हुन्छ। यसरी सात सय वर्ष मृत्युको दुःख भोग्नु पर्छ। यसरी मृत्यु भएर कहाँ जन्म लिने रहेछ पछिको जन्म कहाँ हुने रहेछ सबै देवहरूले पनि थाहा पाउँछन्। यसरी मृत्युपछि दुःख पाउँछ भनी दुःखी हुन्छन्। यस देवलाकमा एक हप्ता दुःख भोग्नु पर्छ। यसरी एक हप्ता मृत्युको दुःख भोग्नु पर्दा असह्य दुःख हुनेछ। कारण सुखमा बसेर एक्कासी दुःख पाउँदा नरकको प्राणीहरूको दुःख भन्दा पनि ज्यादा पीर र दुःख हुन्छ। नरकका प्राणीहरू सधैं दुःख भोगिरहेकोले गर्दा केही जस्तो दुःख मान्दैन। कल्प कल्पे

मुखमा बसेकोले गर्दा एकै चोटि यस्तो दुःख सहनु सक्दैन। यस्तो दुःख रूप धातु र अरूप धातु देवलाकको देवले भोग्न पर्दैन। उनीहरू मरे तापनि देवलोकमा नै जन्म लिन्छ। ब्रह्म लोकको देवहरू पनि पूर्वह्जन्मको कर्म फल सकिए पछि नरकको दाउरा भएर आगोमा जलिबस्ने दुःख भाग्नु पर्छ। षष्ट गतिको प्राणीहरू जहाँ जन्मे तापनि सुख कहीँ पनि छैन सियोको टुप्पोमा बसे भै यी छ लोक जहाँ जन्मे तापनि सुख नामको लागि मात्र हो यो सुख बदलि भएर दुःखमा परिणत हुन्छ।

**६) सांसारिक दोष दृढ भएको कारणले निःसरण उत्पन्न कसरी हुने विषय -**

यस त्रिलोकको स्वभाव दुःख रहेछ भनी जानेर यी दुःखबाट मुक्ति भई निर्वाण प्राप्त गर्ने छोटकरीमा वर्णन यस प्रकारको छ– यस त्रिलोक भवसागरमा जहाँ जन्मे पनि दुःख नभएको कहीँ छैन। यी छवटा लोक सबैमा नै दुःख नभएको कहीँ छैन। दुःख मध्ये कसैको ज्यादा, कसैको कम्ति गरेर आफ्नो आफ्नो कर्मको अनुसार दुःख भोग्नु पर्छ। सियोको टुप्पामा बस्दा सुख कहाँ हुन्छ र ? त्यस्तै गरी यो भवसागरमा जहाँ जन्मे पनि सुख र शान्ति कहाँ छ र ? यसैकारण यस दुःखको कारण बुझ्न मुक्तिको कामना गर्नुको लागि हामीले आफ्नो मनलाई धर्मपट्टि फर्काउनुको निम्ति यी तलका चारवटा विषय बुझ्न अति आवश्यक छ

१) दुर्लभ क्षण सम्पत्तिको जीवन पाउन कठिनको विषय

२) मानिस जन्मे पछि मृत्यु निश्चय छ, मृत्यु एक सत्य हो भन्ने विषय।

३) कर्म फल बुझ्ने विषय।

४) भवसागरमा जहाँ जन्मे पनि सुख छैन दुःखै दुःख मात्र छ भनी बुझाउने विषय।

यी चार निवारण राम्रोसंग बुझेर जानेर राम्रोसंग ध्यान गर्नु पर्छ। यसरी ध्यान गरेर यस्तो प्रकारको बोध हुनु पर्छ कि मातृभूमिमा भएका जम्मै इष्टमित्र शाखा सन्तान यो भवसागरको चक्रमा फसाउने नोकर हो। यसकारण यिनीहरू सबै भवसागरबाट उम्कनु वा मुक्ति हुन नदिने यही संसारको भवचक्रमा बाध्ने फलामको साङ्लो जस्तो हो भनी बुझेर इष्टमित्र शाखा सन्तान सबै त्याग गर्नु पर्छ। चार निवारण राम्रोसंग बोध नभएर यी सब ज्ञान बोध हुँदैन। कुबेरको जस्तो धनसम्पत्ति भए पनि आफ्नो पूण्यले चारै द्विप विजय गरेको महाशक्तिशाली राजा भए पनि, देवलोकमा स्वार्गीय सुख शान्ति सबै प्रकारको धन सम्पत्तिले परिपूर्ण भए पनि यी सुख क्षणिक हो। सुख त सुख हो तर यो सुख केही समयपछि दुःखमा परिणत हुन्छ। माने पत्ताको शीत जस्तो मात्र हो, विहान हेर्दा अति राम्रो हुने घामको किरण आए पछि सबै बिलिएर जानेछ। यस्तो क्षणिक सुखमा भुलेर बसे, पछि दुःखै दुःख भोग्नु पर्नेछ। यो भवसागर माथिबाट हेर्दा खरानी केही नभए जस्तो तर खरानीमा टेक्दा आगोले पोल्ने। राक्षसको देशमा लडाई मात्र हुन्छ शान्तिको नमुना पनि हुँदैन। यो संसार पनि त्यस्तै नै हो। विषालु अजिङ्गरको गुँड़मा विष मात्रै हुन्छ अमृत हुँदैन त्यस्तै ने यो भवसागरमा पनि दुःख मात्र छ सुख र शान्ति त नामको लागि मात्र छ। यसकारण यो चारवटा निवारण राम्रोसंग ध्यान गरेर ज्ञानबोध गर्नु पर्छ। यसरी बोध भए दुःखको स्वभाव बुझ्न सक्छ। यसरी बुझे पछि आन्तरिक हृदयबाट

यस दुःखबाट मुक्ति पाउने चेष्टा र भावना लिएर ध्यान गर्नु पर्छ। यसपछि मुक्ति पाउने विऊ धर्म हो, अनि धर्मको द्वारमा प्रवेश गर्दा कसरी गर्न पर्छ अनि शरण गमन के हो ? कस्तो हो ? कसरी गर्नु पर्ने हो यसको विषयसा छोटकरीमा उल्लेख गरीन्छ।

**प्रथम शरण गमणमा लाग्नु पर्ने विषय -**

यस भवसागरको दुःखबाट मुक्ति हुनको निम्ति उत्तम र सत् गुरुको नितान्त आवश्यक छ। उत्तम र सत् गुरुको शरणमा नगई दुःखनीय भवसागरबाट पार हुन सक्दैन। मुक्ति पाउनुको मूल आधार नै शरण गमन हो, जसरी एउटा घर बनाउँदा मूल खाम्बा र जगको ढुङ्गा नभई घर बनाउन सक्दैन त्यस्तै नै बुद्धज्ञान प्राप्त गर्न शरण गमन नभई हुँदैन। शरण गमन गर्ने बौद्ध धर्ममा प्रवेश हुने ढोका हो। जसरी घरभित्र पस्नुको निम्ति ढोका चाहिन्छ त्यस्तै ने बौद्ध धर्ममा प्रवेश गर्ने ढोका शरण गमन हो। त्रिरत्नको शरण गमन गर्ने बुद्धिष्ट हो अनि नगर्ने हिन्दु, खृष्टान, मुसलमान, जैन आदि हो। शरण गमन गर्नको लागि श्रद्धा र भक्ति मूल आधार हो। श्रद्धा र भक्तिबिना शरण गमन गरे भवसागरबाट पार हुन सक्दैन। शरण गमन गर्दा श्रद्धा र भक्तिसाथ गर्नु पर्छ। धर्मको मूल आधार श्रद्धा, भक्ति र विश्वास हो। हामी कत्तै परदेश या टाड़ा ठाउँमा जानु परे कुनै साधन चाहिन्छ जस्तै बसगाड़ी, रेलगाड़ी, हावा जहाज इत्यादिमा चढ़ेर जानु पर्छ। प्रथम हामी गाड़ीमा चढ़दा पैसा दिएर टिकट काटनु पर्नेछ। बसगाड़ीको, रेलगाड़ीको र हावा जहाजको टिकट जुनै काटे पनि आफू जाने ठाउँमा पुग्न त पुग्छ तर ढिलो छिटो मात्र हो। विस्तारै पुग्ने हिसाबले

गए पनि ठीकैको हिसाबले गए पनि एकदम छिटो पुग्ने हिसाबले गए पनि भिन्न भिन्नै टिकट काटनु पर्छ दाम पनि कम्तीको कम्ती नै छ ठीकैको पनि छ ज्यादा दामको पनि छ। हावा जहाजमा गए पैसा ज्यादै लाग्छ छिटो पनि पुग्छ, रेलगाड़ीमा गए ठीकैको हुन्छ। त्यस्तै नै विश्वास, श्रद्धा, भक्ति टिकट जस्तो हो। पैसा कम्ती भए टिकट पनि कम्ति नै पाउँछ पैसा ठीकैको छ भने टिकट पनि ठीकैको नै पाउँछ। पैसा ज्यादा भए टिकट पनि हावाजहाज जस्तो छिट्टो पुग्ने पाउने छ। स्वच्छ अचितानीय भक्ति भए हावाजहाज जस्तै छिट्टै पुग्ने छ। ठीकैको भक्ति भए रेलगाड़ी चढ़े झै हुनेछ। भक्ति कम्ति भए बसमा चढ़े झैं हुनेछ। श्रद्धा र भक्ति पनि तीन प्रकारको छ -

**प्रथम** - *स्वच्छता श्रद्धायुक्त भक्ति* - त्रिरत्न गुरु, बुद्ध, धर्म र संघको शरणमा गएर यी भाव सागरको दुःखबाट मुक्ति हुनको निम्ति स्वच्छ हृदयले श्रदा भक्ति गरेर शरण गएको हो अनि यस्तै गर्नु पर्छ।

**दोस्रो** - *आन्तरिक हृदयबाट विश्वास गर्ने* - गुरु, बुद्ध धर्म र संघहरूको अचिन्तनीय लीला र अचम्भ अचम्भको कर्म देखेर र सुनेर त्रिरत्नमाथि दृढ विश्वास र भरोसा गर्ने हो। यस प्रकारको दृढ विश्वास र भरोसा त्रिरत्नलाई गर्नु पर्छ।

**तेस्रो** - *अभिष्ट वा अभिमत श्रद्धा र भक्ति* - त्रिरत्न बुद्ध, धर्म र संघमा भएको गुण , ज्ञान र शक्ति जति छ आफूले प्राप्त गर्ने इच्छा गर्ने हो - वहाँहरूको जस्तो गुण ज्ञान र शक्ति हामीले पनि प्राप्त गर्नु इच्छा गरेर कोशिश गर्ने अनि दुःखबाट मुक्ति भएर बुद्धज्ञान प्राप्त

गर्नु सक्नु पर्छ।

**दोस्रो शरण गमन कसरी अनि कसलाई गर्नु पर्ने यो बुझ्ने विषय -**

मुक्ति या बुद्धज्ञान प्राप्त गर्नुका लागि कसको शरणमा जानु पर्ने हो भने सांसारिक देव जस्तै ब्रह्मइन्द्र देव राजा, दिब्या दर्पन मदकल (चेन) अष्ट योद्ध मार जो भए तापनि अहिलेको लागि मात्र रोग हटाउने, चित्ताएको पुराई दिने रूप राम्रो बनाउने यही संसारभित्र मात्र फाइदा गर्नु सक्छ तर मुक्ति दिन सक्दैन कारण आफैहरू पनि यो संसारको पूण्य सकेर यमलोकको भ्रमण गर्नु पर्नेछ यसकारण आफै पनि यो संसारबाट मुक्ति भएको नहुनाले हामीलाई कसरी मुक्ति दिने ? यी देवहरू सबै यही भवसागरभित्र छ मृत्यु लोकबाट मुक्ति भएको छैन अधिको पूर्वजन्ममा पूण्य कर्म गरेकोले देवलोक जन्म लिएको हो अनि यो पूण्य सकिएपछि यी देवहरू सबै आफ्नो कर्म अनुसार मृत्यु भएर दुर्गतिमा जन्म लिनु पर्नेछ। आफै त यो मृत्युलोकबाट मुक्ति भएको छैन अरूलाई कसरी मुक्ति गर्न सक्छ ? जेलखानाभित्र भएको कैदीलाई जेलखाना कै कैदीले कहाँ निकाल्नु सक्छ ? कुनै पनि कैद्दीलाई जेलबाट निकाल्नुको लागि जेल बाहिर भएको हाकिम या वकिलले मात्र सक्छ। त्यस्तै नै भवसागरबाट मुक्ति गराउनुको निम्ति आफू पनि भवसागरबाट मुक्ति भइसकेको हुन पर्छ। यसकारण आफू र प्राणीहरूलाई उद्धार गर्ने त्रिरत्नलाई शरण गमनको मूल आधार राख्नु पर्छ। भगवान् बुद्ध शरण दिने मार्ग दर्शक हुन्। भगवान् गौतम बुद्ध आदि बुद्धहरूको ज्ञान र गुणको अनुमान अवर्णनीय छ।जसरी माटोको धुला र अणु गन्ती गरेर साध्य हुँदैन, त्यस्तै गरी भगवान् बुद्धको ज्ञान

र गुणको अनुमान लगाउन सक्दैन। धर्म शरण गमन गर्ने आधार बाटो हो। भगवान् बुद्ध बाटो देखाउने अगुवा हुन्। धर्म चाहिँ बाटो हुन्। धर्म बाटोमा सगैं जाने साथी संघ हुन्। निरोध सत्यको निम्ति मार्ग सत्य चाहिन्छ। सर्व बुद्ध अनि उत्तम आर्य संघको हृदयमा भएको धर्म अवर्णनीय छ। धर्म उपदेश अनि कुनै अक्षरको रूप भएसम्म सतधर्म रत्न स्वयं हो भन्ने श्रद्धा भक्ति गर्नुपर्छ। संघ रत्न शरण गमन गर्ने साथीहरू हुन्। संघमध्ये पनि उत्तम अरहंत (अर्हत), प्रतेका बुद्ध, मार्गज्ञान प्राप्त भएको, भूमिज्ञान प्राप्त भएको धेरै छ जस्मा गन्ती गरेर साध्य छैन। यी मध्ये पनि सबभन्दा उत्तम संघ बोधिसत्वहरू हुन। बोधिसत्वहरू धेरै छन्, कोहि दश भूमिज्ञान भएको नवम, अष्ट, सप्त, छैंटौ, पञ्च, चौथो, तृतीय, द्वितीय अनि प्रथम भूमिज्ञान भएको हुन्छ। यस्तो भूमिज्ञान प्राप्त भएको बोधिसत्वहरूलाई श्रद्धा र भक्ति गरेर वहाँहरूको शरणमा जानु पर्छ। अरू पनि साधरण धर्मको बाटोमा लाग्ने, भिक्षुहरू, लामाहरू जो सत धर्मको बाटोमा लागेकाहरू सबैलाइ संघ रत्नको विचार राख्नु पर्छ। किताबमा भएको ज्ञान पढेर पनि हामीले बुझ्न सक्छौं। यस कारण किताबका उपदेशहरू पनि मार्ग र मार्गी को विचार राखेर धर्मरत्नको श्रद्धा र भक्ति गर्नुपर्छ।

भगवान् बुद्ध बैद्य (डाक्टर) जस्तै हो। डाक्टरले दिएको उपदेश औषधीको प्रयोग कसरी गर्नु पर्ने ? खाना के के खानु पर्ने ? कुन खाना खानु नहुने ? यी सब विषयमा दिएको निर्देश पत्र धर्म रत्न जस्तै हो, औषधी संघ रत्न जस्तै हो। कुनै रोगी डाक्टरकहाँ गएर जाँच गरेर मात्रै निको हुँदैन डाक्टरले दिएको उपदेश र औषधी ठीक रूपले खाए मात्र रोगी निको हुनेछ। त्यस्तै गरी भगवान् बुद्ध स्वयं आउनु भएर

हामीलाई स्पर्श या दर्शन गरेर मात्र मुक्ति पाउन सक्दैन। वहाँले दिनु भएको धर्म उपदेशको ठीक रूपले पालन गरेनौ भने यस भवसागरबाट मुक्ति पाउन सक्दैनौ। डाक्टरले दिएको औषधी रोगीले सेवन गरेन भने रोगी कहाँ निको हुन्छ र ? रोग झन झन बढ्दै जान्छ। यसकारण भगवान बुद्धको धर्म उपदेश अनुसार हामीले पालन गरे हामी निश्चय नै बुद्धज्ञान प्राप्त गर्ने छौ यसमा कुनै संदेह छैन।

साधरण रूपले शरण गमन गर्दा प्रथम आफूले जुन जग्गामा शरण गमनको पाठ गर्छ, जस्तै गुम्बा या आफनै घरको पूजा कोठामा आदि जहाँ गरे तापनि त्यस ठाउँ सुन चाँदी हीरा आदिले बनिएको सम्झनु पर्छ। आफ्नो अघि स्वंय भगवान् बुद्ध वा पद्मसम्भव वा आर्य अवलोकितेश्वर जो भए पनि ज्योतिको रूपले बनिएको ऐनाभित्रको प्रतिबिम्ब झै देख्नु त देख्नु तर स्वभाव शून्य जस्तो भावना गर्नुपर्छ इन्द्रिनी झै देख्न मात्र सक्ने स्पर्श गर्नु नसक्ने। यस्तो प्रकारको भगवान्को रूप सम्झेर वहाँ स्वंय हुनु हुन्छ भनि श्रद्धा र भक्तिसंग शरण गमनको पाठ गर्नु पर्छ। शरण गमन गर्नु भन्दा अघि यस्तो प्रकारको सम्झनु पर्छ सर्व प्राणी हाम्रो माता पिता हुन्, यी प्राणीहरू कल्प कल्पदेखि महादुःखमा परेका छन्, यस्तो दुःखबाट मुक्ति दिनुका निम्ति म हजुरको चरणमा शरण गमन गर्दैछु। जबसम्म सर्व प्राणी यस महादुःखबाट छुटकारा पाउँदैन तबसम्म म भगवान् बुद्धको शरणमा पर्छु भन्ने भावना गर्नु पर्छ। यसरी शरण गमन गर्दा आफू एकलै सम्झनु हुँदैन। आफ्नो दाहिनेपट्टि आफ्नो बाबा, देब्रेपट्टि आमा आफ्नो अगाड़ि आफूलाई नोक्सान गर्ने शत्रु विघ्न वाधा दिने गृह भूत शैतान, वरिपरि इष्टमित्र शाखा सन्तान त्रिलोकको सर्व प्राणी सबैले आफू जस्तै दुई हात जोडी



१८।।

श्रद्धा र भक्तिसाथ शरीरले ढोक गर्नुपर्छ, वचनले **"बुद्धं शरणं गच्छामी, धर्म्मं शरणं गच्छामी, सघं शरणं गच्छामी"** भनि शरण गमन गर्नु पर्छ। चित्तले श्रद्धा र स्वच्छ भक्ति गर्नु पर्छ। शरण गमनको पाठ धेरै छ आफ्नो आफ्नो धर्म गुरु अनुसार बताइएको हुन्छ। यी माथि बताइएको शरण गमन साधरण प्रकारको हो। गुरुको शरणमा जाने हिदम (इष्टदेवको)को शरणमा जाने, खाण्डो (डाकीनी) को शरणमा जाने असाधरण प्रकारको शरण गमन हो। उपायको उत्तम बज्रायानामा निर्माणकायाको शरण नसोको शरणमा जन्छ, सम्भोगकायाको शरण सास को शरणमा जान्छ, धर्मकाया बीर्यको शरणमा जाने हो। शरण गमन गर्दा मुख्य श्रद्धा र स्वच्छ भक्तिको आधारमा गर्नु पर्छ।

**तेस्रो त्रिरत्न बुद्ध धर्म संघको गुण सम्भिनु र बुझ्न पर्ने विषय -**

सर्वज्ञ = उत्तम श्रेष्ठ ज्ञान भएको हो। पवित्र शुद्ध भूमि अपरिवर्तन शील हो। पवित्र शुद्ध भूमिमा वोधिसत्व अर्हत अनि मार्ग दर्शन ज्ञानबोध भएकाहरू मात्रै जन्म लिनेछ। यस लोकमा सांसारिक देवहरू पनि जान सक्दैन, भूमि पनि यहाँ जस्तै हुँदैन। सबै हीरा मणिहरूले बनिएको हुन्छ। यस लोकमा बोधिसत्वहरू मात्र बस्छन् । यो पृथिवीलोक क्षणिक अनि अशुद्ध हो। यो निमार्णकायाको लोक हो। यो पृथिवीलोक त्रिधातुको तीनैलोकदेखि लिएर शुद्ध पवित्र भूमि स्थानसम्म यी सबै लोकमा के के छ कस्तो कस्तो छ माटो अनि अणु परम अणुदेखि लिएर ठूलो ठूलो बस्तु, परम अणु किटाणुदेखि लिएर ठूलो ठूला जन्तु सबैको मनमा के कसो छ सबै गोटा गन्ती बुझ्न सक्ने र जान्न सक्ने ज्ञान छ। यी सर्व प्राणीको एक एक गरी पूर्वजन्ममा के

थियो कसको जन्म थियो कैयौ पूर्वजन्मको ज्ञान जान्न सक्छ अनि कैयौ भविष्य कालको विषयमा जान्न सक्छ। हाम्रो पूर्वजन्म के कस्तो थियो त्यो भन्दा पनि अघिको पूर्वजन्म यसरी कैयौ पूर्वजन्मको ज्ञान वहाले भन्नु सक्नु हुन्छ। यो पृथिवीको माटो मुछेर एकपट्टि राखेर कुनै एक प्राणीले उसको पूर्वजन्म कति थियो अनि आमा र बाबु को को थिए भनेर प्रश्न गरे, एकजनाले चाँहि माटोको डल्लो तोरीको दाना जत्रो एकएक जन्म बताउँदै एक एक डल्ला गर्द्रै गन्ती एकपट्टि राखे यो पृथिवीको माटो सबै सकिन्छ तर प्राणीको पूर्वजन्मको गन्तीको टुङ्गो हुँदैन। समवृतिसत्य र परमअर्थ सत्यज्ञान यी दुवैको ज्ञान भगवान् बुद्धले जान्नुहुन्छ। वहाँले नजानेको केही छैन्। धर्मताको ऐनामा स्पष्ट देखे झै सबै जान्नु हुन्छ। जबसम्म दश भूमिको ज्ञान्न प्राप्त हुँदैन तबसम्म सबै ज्ञान जान्न सक्दैन। यसको प्रमाण धेरै छ, त्यसमध्ये यसप्रकार छ। मौदगल्यायानका माता मृत्युपछि कहाँ जन्म लिए भनी मगोल पुत्रले आफ्नो ज्ञानबाट हेर्दा देख्न सकेन अनि भगवान् बुद्धकहाँ गएर विन्ती गरे कि मेरो ज्ञानले मेरो आमाले कहाँ जन्म लिएकी छिन् थाहा पाउन सकिनँ, बताईदिनु हवस्। भगवान्ले भन्नु भयो "तिम्रो ज्ञानले यी त्रिधातुको त्रिलोक मात्र छ भन्ने अभिज्ञान छ, तर होइन यो जस्तो त्रिधातुको त्रिलोक अर्को पनि छ र त्यस लोकमा जन्म लिएको छ भनी बातउनु भयो " मौदगल्यायानले भने त्यहाँ पुराई दिन हवस भनी विन्ती गरे अनि वहाँले भन्नुभयो, त्यस लोकमा जाँदा मेरो ऋद्धी शक्तिमा जाऊ भनी तीन पाइला लम्केर त्यहाँ पुगेर आमासंग भेट भए अनि फर्किने समयमा भगवान्ले भन्नुभयो अघि अउँदा त तिम्रो शक्तिमा आयौ अब जाँदा मेरो शक्तिमा जाऊ भनि यसो भन्नु भयो "मौदगल्यायान" आँखा बन्द गरेर बेणु बन सम्झिनु भन्दा आँखा खोल्दा त वेणु बनमा

पुगेसकेछ। यस्तै प्रकारको उदाहरण धेरै छ। अर्हत एक भूमिज्ञान प्राप्त गरेकोदेखि नवम भूमिज्ञान प्राप्त भएको बोधिसत्वहरूले पनि यी सर्वज्ञान पाएको हुँदैन। जबसम्म दश भूमिज्ञान प्राप्त भएर बुद्धज्ञान प्राप्त हुँदैन तबसम्म सर्वज्ञको ज्ञानबोध हुँदैन, सर्वज्ञको ठोष प्रमाण दिनू सक्दैन। जस्तै गुड़ र मह कस्तो छ भन्दा गुलियो छ भन्छौ, गुलियो कस्तो छ भन्दा त्यसलाई ठोष प्रमाण दिएर बताउनु सक्दैन, जसले खाएको छ उसले मात्र जान्दछ, गुलियो यस्तो छ भनी कुनै रूप बताउनु सक्दैन। जब बुद्धज्ञान प्राप्त हुन्छ तब सर्वज्ञ सवृद्धि र परमअर्थको ज्ञानबोध हुन्छ। यसैकारण भगवान बुद्धलाई सर्वज्ञ सम्यकसमबुद्ध भनिन्छ। भगवान् बुद्धले नजानेको केही छैन, जान्नु पर्ने पनि केहि छैन, त्याग्नु पर्ने पनि केहि छैन, लिनु पर्ने पनि सबै लिइसकेको, सिक्नु पर्ने पनि छैन, नसिकेको पनि छैन सबै पूर्ण भएको। सफा आकाशमा घाम लाग्दा घामको किरणलाई केही चिजले वाधा नदिई जहाँसम्म पुग्नसक्छ त्यहाँसम्म पुग्छ जमीनमा किरण स्पर्श भइसकेपछि त्यहाँबाट कहीँ जानु सक्दैन त्यस्तै नै जति जान्नु पर्ने, सिक्नु पर्ने, त्याग्नु पर्ने, लिनु पर्ने, सबै पूर्णरूपले पूर्ति भएकै ज्ञान सर्वज्ञ सम्यकसमबुद्ध हुन्। यो सब गुण बुद्धज्ञान प्राप्त भए पछि आफै प्राप्त हुन्छ।

**भगवान बुद्धले दया र करूणा कसरी दर्शाउँछ प्राणीको निम्ति यसको विषय -**

समस्त आकाशले जहाँसम्म ढाकेको छ त्यहाँसम्म प्राणी व्याप्त छ। आकाशको त शुरू पनि छैन अन्त पनि छैन। आकाश बराबर नै प्राणी असंख्य रूपमा छ यी प्राणीहरू सबै महादुःखमा परेको छ। यी दुखित प्राणी सबैलाई भगवान् बुद्धहरूले समतुल्यताको दृष्टि महाकरूणा

र असीम दयाको नजरले नित्य सधैं करूणा दर्शाइरहेको हुन्छ। जस्तो कि एउटै छोरा भएको आमाले कतिको माया गर्छिन्। आफ्नो छोरालाई जुन मायाको सीमा नै हुँदैन। त्यस्तै गरी सर्व बुद्धहरूले प्राणीहरूलाई एउटा छोरा भएको आमाले जस्तै दया र करूणाले प्रेम गर्छन्। अघि कल्प कल्प जन्मदेखि भविष्यमा कल्प कल्प जन्मसम्म, जबसम्म सर्व प्राणीहरूको मनमा बोधिचित्त उत्पन्न अनि मुक्ति हुँदैन सर्वज्ञ समबुद्धहरूका महाकरूणा, महामैत्री र अचिन्तनीय दयाको धारा अटुट आई नै रहन्छ। ८

**दुःख कष्टबाट बचाउने शक्ति विषय -**

दुःख र कष्टमा परेका प्राणीहरूलाई उद्धार गर्ने र बचाउने अचिन्तनीय शक्ति भगवान् बुद्धहरूका छन्। वहाँहरू दिन र रात एक क्षण पनि आराम नगरी, क्षण क्षणको समय पनि नष्ट नगरी, अलिकति पनि आँखा झिम्म नगरी प्राणीहरूको उद्धार गरिरहेका हुन्छन्। वहाँहरू क्षण क्षणमा सबै लोकमा गएर प्राणीहरूको उद्धार गर्छन्। जस्तै नरक लोकमा असह्य दुःख भोगी रहेका प्राणीहरूका उद्धार गर्न "भिक्रमको" अवतार लिएर प्रदर्शन गर्छन्। प्रेतलोकमा "गुरु बैरोचनाको" अवतार, पशुलोकमा "सिङ्गी रब डेन" को अवतार, मनुष्य लोकमा मनुष्य कै प्रदर्शन गरेर, असुरलोकमा असुर कै प्रदर्शन गरेर देवलोकमा देव कै प्रदर्शन गरेर प्राणीहरूको आँफ्नो आफ्नो दुःखबाट उद्धार गर्छन्। यसरी प्राणीहरूको उद्धार गर्नु जाँदा प्राणीहरूको श्रद्धा र भक्ति छैन भने बुद्धहरूले पनि बचाउन र उद्धार गर्न सक्दैन।

उदाहरण - कुनै पानीजहाज समुद्रमा डुबे त्यहाँ भएका

मानिसहरूलाई बचाउनका निम्ति माथि आकाशबाट हवाइजहाज वा हेलिकप्टर अएर बचाऊकारीले माथिबाट डोरी फ्याँकिदिएर डोरी समात्ने आदेश गर्छ अनि तल भएका मानिसहरूले डोरी समातेर त्यहाँबाट निकालेर उद्धार गर्नेछ। यदि तलका मानिसहरूले डोरी नै नसमाते बचाऊकारीले बचाउन सक्दैन। बचाउकारीहरूको त्यहाँ भएका सबै मानिसहरूलाई बचाउने र उद्धार गर्ने उद्देश्य हुन्छ। तर तलका मानिसहरूले डोरी समातिनदिए बचाउय्कारीको केही सीप लाग्दैन। त्यस्तै गरी हवाइजहाजमा भएका बचाउकारी बुद्धहरू हुन्, डोरी वहाँहरूको करूणा, मैत्री र दया हुन् तल भएका मानिसको हात र हातले समात्ने श्रद्धा र भक्ति हो, मानिस दुःखमा परेका प्राणीहरू हुन्। यसकारण बोधिचित्त उत्पन्न हुनका लागि र मुक्ति पाउनका निम्ति मुख्य श्रद्धा र भक्ति हो। कुनै पर्वत चढ्नु परे हात नभई पर्वत चढ्नु सक्दैन त्यस्तै नै हात श्रद्धा र भक्ति जस्तो हो। श्रद्धा र भक्ति विषयमा यहाँ दुइवटा प्रमाणित कथा छ।

१) श्रद्धा र भक्ति स्वच्छ भए कुकुरको दाँतमा पनि बुद्धज्ञान प्राप्त गर्नुसक्छ। उहिले तिब्बतमा आमा र छोरा थिएछन्। छोरा भारतवर्षमा घरि घरि व्यापार गर्नु जाँदो रहेछ। यसरी जाँदा एक दिन बूढी आमाले भनेछ "भारतवर्षमा भगवान् बुद्धहरू आउनु भएको र बुद्धज्ञान प्राप्त गरेको देश हो। बुद्धगयामा बुद्धले ज्ञानप्राप्त गरेको स्थान हो र त्यहाँबाट म विहान र बेलुकी ढोक, सत्कार गर्नको लागि उत्तम आधार भगवान् बुद्धको कायाको अंग जे भए पनि ल्याईदिनू।" आमा बूढीको मनमा यस्तो विचार हुन्छ कि भारतवर्षमा भगवान् बुद्धले ज्ञानबोध गर्नु भएको हो अनि महापरिनिर्वाण पनि भारतवर्षमा

नै भएको हुनाले त्यहाँ भगवान्को केही न केही आधार त पाउँछ। छोरा भारतवर्षबाट फर्केर आउँदा आमाले भनेको चिज बिर्सन्छ। यसरी धेरैपल्ट गएर सधैं नै भुलेर आमाले भनेको कुरो ल्याउन बिर्सन्छ। अर्कोपालि ल्याइदिन्छु भनी यसरी टार्दो रहेछ। आमाले फेरि पनि - "यसपालि पनि ल्याएन भने म तिम्रै सामु झुण्डिएर मर्नेछु" भनी कसम खाएछ। छोरा भारतवर्षबाट फर्केर घरको निकै नजिगमा आइपुग्दा झसङ्ग आमाको कुरो याद आएछ, यस पाली पनि बिर्सिएर आएछ, अब यस्तो आपतमा परेछ यदि केही चिनो नलगि दिए आमा झुण्डिएर मर्ने डर भयो। यता उता आँखा घुमाएर हेर्दा एउटा कुकुरको पुरानो टाउको लडिरहेको देखेछ। त्यही कुकुरको एउटा दाँत निकालेर एउटा राम्रो लुगामा पोको पारेर आमालाइ यसो भनेछ - "आमा यो भगवान् बुद्धको ठूलो दाँत हो, तपाईलाई ढोक र सत्कार गर्ने आधार हो।" आमाले कुकुरको दाँतलाई भगवान् बुद्धका दाँत हुन् भनी अचित्तानीय श्रद्धा र स्वच्छ भक्ति गरेर सधैं ढोक गर्दो रहेछ। यसरी सधैं पूजा, ढोक र सत्कार गर्दा गर्दा कुकुरको दातबाट मसिनो सेतो सेता मोतीको दाना जत्रो भगवान् बुद्धका अस्तु धेरै उत्पन्न भएछ। बूढी आमा मर्दा इन्द्रेनी लागेर शरीरको वरिपरि ज्योतिको तम्बु जस्तो भएछ। यस्तो भएको कारण कुकुरको दाँतको शक्ति र आशिर्वाद होइन। बूढी आमाको अचित्तानीय श्रद्धा र स्वच्छ भक्ति गरेर कुकुरको दाँतलाई नै भगवान् बुद्धको दाँत हो भनी दृढ विश्वास र स्वच्छ भक्ति गरेको कारणले गर्दा भगवान् बुद्धको आशिर्वाद कुकुरको दाँतमा लागेर कुकुरको दाँत र भगवान्को दाँतमा केही भिन्नता नभएको हो।

२) अर्को तिब्बतको कोङबु भन्ने जग्गामा एकजना कोङपो बेन

भन्ने लाटो स्वभाव भएका मानिस थिए। तिनी ल्हासामा ज्योवो रिन्पोछे शाक्यमुनिको मुर्ति दर्शन गर्नु गए। यो मुर्ति भगवान् बुद्धको हो अनि भारतवर्षबाट चीनमा, चीनबाट तिब्बतमा लगेको हो यसकारण यो मुर्तिको दर्शन गर्नु अति ठूलो तीर्थ मानिन्छ। "ज्योवो रिन्पोछे" का गुम्बामा ज्योवो बेन पुगे। गुम्बाभित्र पुजारी नभएको समयमा पुगे, पुजारी कतै बाहिर गएका थिए। "ज्योवो रिन्पोछे" को मुर्तिअघि पूजामा चढ़ाएको पानी, घिऊको दीयो (छेमी), तोरमा देखेछ। यसरी देख्दा उसको मनमा यस्तो लागेछ कि "ज्योवो रिन्पोछे" ले यो चम्बाको तोरमा यो दीयो बत्तीमा चोबेर खाँदो रहेछ। यो दीयो बत्ती घिऊ नकक्रोस भनी बालेको रहेछ भनी बुझ्नेछ। "ज्योवो रिन्पोछे" ले जसरी सेवन गर्छ म पनि त्यसरी नै खान्छु भनी तोरमा दीयो बत्तीमा चोबेर खाएछ। यसरी खाए पछि "ज्योवो रिन्पोछ" को चेहरामा हेरेर यसो भने – "तपाईको खाना तोरमा कुकुरले लगे तापनि मुसुक्क मुसुक्क मुस्कुराउने, दीयो बत्ती हावाले हल्लाउँदा पनि मुसुक्क मुसुक्क मुस्कुराउने लामा कोमल, सन्तोषजनक अति राम्रो कहिले नरिसाउने स्वभावको।" ज्वोवा बेनले फेरि यसो भने – "मेरो यो दोचा (जुत्ता) तिमीलाई जिम्मा दिँदैछु एकक्षण हेरिदिनु हवस् म तपाईंलाई एकपल्ट परिक्रमा गरेर आउँछु," भनेर दोचा ज्योवो रिन्पोछेको अगाड़ि राखे। कोङपो बेन परिक्रमा गर्नु जाँदा गुम्बाभित्र पुजारी आईपुगे। पुजारीले ज्योवो रिम्पोछेको सामुन्ने त्यो दोचा राखेको देखेर यस्तो मैला दोचा कसले यसरी राखेछ भनी दोचा फ्याँक्नुको लागि टिप्दा ज्योवो रिम्पोछेले यसो भन्नु भएछ "यो दोचा कोङपो बेनले मलाई राख्नु दिएको हो, नफ्याँक्नू।" कोङपो बेन फेरि आएर दोचा उठाएर यसो भने "कोमल हृदय भएको सन्तोषजनकक स्वभाव र पवित्र लामा वा गुरु भन्ने

तपाई हो रहेछ तपाई अर्को वर्ष मेरो गाउँमा आउनु हवस्, म सुङ्गुर मारेर मासु पकाउँछु, गौंको मिठो छ्याङ बनाइराख्छु।" ज्योवो रिम्पोछेले पनि हुन्छ म आउँछु भनी वचन दिएछ। कोङपो बेन घरमा फर्केर आफ्नो स्वास्नीलाई यसो भने "मैले ज्योवो रिम्पोछेलाई निमन्त्रण गरेको छु, वहाँले बाटो चिन्दैनन् होला, तिमीले सधैं याद गर्नू। एक वर्षपछि एक दिन उसको पत्नी पानी लिनु कुवाँमा जाँदा ज्योवो रिम्पोछेको प्रतिबिम्ब कुवाँको पानी भित्रदेखी। यसरी देख्दा घरमा फर्केर गएछ अनि आफ्नो लोग्नेलाई यसो भनी - "तिम्रो पहुना तल कुवाँभित्र पसेको त होइन ? हेर्नु जाऊ।" कोङपो बेनले पानीभित्र हेरे अनि साँच्चै ज्योवो रिम्पोछ पानीभित्र देख्दा ज्योवो रिम्पोछे पानीभित्र पसेछ भनेर आफै पनि त्यो पानीभित्र हाम फलेर पस्दा ज्योवो रिम्पोछेलाई हातमा समातेर बाहिर निकाले। हातमा समातेर दोहऱ्याउदै घरको छेउमा एउटा ठूलो ढुङ्गाको छेउमा पुगेर "ज्योवो रिम्पोछेले यसो भने "म गृहस्थीको घरमा जादिनँ" भन्नु भएर ठूलो ढुंगाभित्र अल्पेर गए। त्यो ढुंगामा ज्योवो रिन्पोछे अल्पिनु भएकोले हिज आज पनि त्यस ढुङ्गाको नाम "ज्योवो रिम्पोछे" स्वयं अल्पेको ढुङ्गा भन्छ। कुवाँलाई पनि ज्योवो रिम्पोछेको पानी भन्छ। यी सब भएको कारण कोङपो बेनको श्रद्धा र स्वाच्छ अटल भक्ति भएकोले गर्दा हो। उसले ज्योवो रिम्पोछेको मुर्तिलाई मुर्ति नसम्झेर स्वयं हामी जस्तै जीवित हो भन्ने भावना भएर यसो भएको हो। श्रद्धा र स्वच्छ भक्ति नभएर उसले तोरमा खाएर दोचा मुर्तिको सामु राखेर यस्तो प्रकारको कर्म त कुकर्म हो तर उसको अचित्तानीय श्रद्धा र स्वच्छ पवित्र भक्ति भएको कारणले गर्दा भगवान्को मुर्ति पनि बोलेको हो। श्रद्धा र भक्तिको बल यति ठूलो हुन्छ। गुरु पद्मसम्भाव स्वयंको पनि यसो भन्नु भएको छ -

"अचिन्तनीय गुण छ त्रिरत्नको
अचिन्तीत स्वच्छ भक्ति भए श्रद्धाको
अचिन्तीत आशीर्वाद पाउनेछ भगवानको
निस्सन्देह भक्ति भए चित्ताएको पुग्ने छ जस्तो पनि
भक्ति नै नभए भक्तजनको रोपो झै हुन्छ भुटेर बिऊ अन्नको"

भगवान्‌को वाणीसुत्रबाट – भक्ति नभएको मानिसले कुशल धर्म पाउने छैन बिऊ सुख प्राप्तिको। धानको बिऊ भुटेर रोपे कहिले उम्रन्छ टुसा धानको ? श्रद्धा र भक्ति नभए भुटेर धानको बिऊ रोपे झैं हो। गुरु रिम्पोछे पद्मसम्भावले यसो भन्नु भएको छ – "स्वच्छ भक्ति भएको श्रद्धालु स्त्री पुरूष दुवैको लागि म कहीँ हुँदिनँ उनीहरूकै शिरमा हुन्छु। मेरो धर्ममा मरण र मृत्यु भन्ने छैन। श्रद्धा र स्वच्छ भक्ति जस जसले गर्छ मलाई म उस उसकै अघि हुन्छु सधैं।" भगवान्‌बाट अधिष्ठान र आशीर्वाद कम्ति ज्यादा, सानु-ठूलो, पाउनु हामीमाथि निर्भर छ। भगवानको आशीर्वाद सानु-ठूलो, कम्ति ज्यादा भन्ने हुँदैन सधैं र सबैलाई बराबर आशीर्वादको धारा बही नै रहेको हुन्छ। जस्तो आकाशबाट वर्षा बर्सदाँ बराबर एकनाशले पानी पर्छ, पानी थाप्नुको निम्ति जत्रो भाँड़ा थापे पानी त्यति मात्र आटउँछ, भाँड़ा ठूलो पोखरी या समुद्र जत्रो भए पानी पनि त्यति नै आटउने छ। भाँड़ा सानु भए पानी पनि अलिकति मात्र अटाउने छ। अरू पानी पोखिएर जानेछ। यदि भाँड़ा नै नथापे पानी पाउँदैन। पानी नपरेको त होइन तर पानी नथाप्नेको पो गल्ती हो। त्यस्तै नै पानी परेको भगवान्‌को आशीर्वाद

हो। भाँड़ा हाम्रो श्रद्धा र भक्तिको आधार हो।

यसकारण श्रद्धा र भक्ति गरेर **"बुद्धं शरणं गच्छामी"** भनेर बुद्धको शरणमा गए वहाँले हामीलाई दुःखबाट बचाउनु सक्छ भने, अझै अचित्तनीय स्वच्छ भक्ति गरेर श्रद्धाको साथमा भगवानलाई पूजा अर्पण गरे, ढाग गरे मुक्ति हुँदैन भन्ने कुनै सन्देह नगरे पनि हुन्छ। निस्सन्देह मुक्ति हुनेछ। सर्व प्राणीहरूले एकसाथ आफ्नो आफ्नो मनले जे जसो प्रार्थना गरे त्यो सब अलग अलग एक एक गरेर सबको प्रार्थना बुझ्न सक्नु हुन्छ यस्तो प्रकारको अचित्तनीय ज्ञान भगवान् बुद्धको छन्। यसरी धर्म गर्दा प्रार्थना गर्दा विघ्न बाधा गर्ने मारहरू धेरै हुन्छन्। तर भगवान् बुद्धको शरण गमन गरेर **"बुद्धं शरणं गच्छामी"** मात्र भनको कारणले सर्व विघ्न बाधा हटेर जानेछ। त्रिरत्नको अचित्तनीय गुण सम्झेर स्वच्छ भक्तिले श्रद्धा गरेर त्रिरत्नको शरण गमन गरे बाहिरी दशा ग्रह भित्री रोग सबै शास्ति दुःखबाट बचाउँछ। ग्रह दशा विघ्न बाधा सबै हटेर जानेछ। गम्भीर धर्म गर्नेलाई विघ्न बाधा पनि गम्भीर नै हुन्छ।

गृहस्थीको घरमा एक वर्षसम्म दुःख विमार, ग्रह-दशा, विघ्न-बाधा, आँखी-डाहा नहोस् भनी पूजा गर्ने चलन छ। पूजा आदि गर्दा लामा या पुजारी राम्रो हुन पर्छ। आफुले पाउनु पर्ने सबै ज्ञान पाएको हनु पर्छ। तर हिज आज यस्तो कहाँ हेर्छ र ? हाम्रा दाताहरूले जस्तो लामा पाए त्यस्तै लामालाई पूजा गराउँछन्। यसरी राम्रो ज्ञान नभएको लामालाई बोलाएर पूजा गर्छ घरमा क्रोधी देवताको मण्डाला स्थापित गरेर उत्पत्तिक्रम र उत्पन्नक्रमको केही ज्ञान नजानी नबुझी त्यो ग्रह-दशा फ्याँक्नु बनाएको आटाको ढँड़ोलाई आईफल जस्तो

ठूलो ठूलो आँखा पारेर क्रोधीको रूप जस्तो भई त्यो आटाको ढँड़ोमाथि रिस गर्दै "खुग खुग स्वे स्वे या यो ग्योव ग्योव" (आइज आइज, मार्छु मार्छु, जा जा, हिर्का हिर्का) भन्दै तोरमा मासु लगाएर रगत र मासुको पूजा चढ़ाउँदै गर्छ। यो त कुशल धर्म होइन, यो त रगत चढ़ाउने कालो धर्म पो हो। सर्व प्राणीलाई आफ्नो नानी जस्तो गर्ने भगवान्‌लाई आफ्नै नानी मारेर वहाँलाई निमंत्रण गरेर नानीको मासु र रगत भोजन दिए वहाँ प्रसन्न हुन्छन् र ? यस विषयमा मिला रेपोले यसो भन्नु भएको छ "ज्ञान र प्रज्ञाको देवता गृहस्थीको घरमा चित्ता र उपकार गर्नुको निम्ति निमंत्रण गरेको राजा राज सिंहासनबाट झरेर तल जमदार (मेतर) मैला टट्टी सफा गर्ने काम लगाएको जस्तो हो।" झे दम्पा साङ्गेले पनि यसो भन्नु भएको छ –"गुह्य बाद धर्मको मण्डाला बाखाको खोरमा बन्द गरेको जस्तो हो।" यसरी रगत र मासु चढ़ाएर पूजा गरे ज्ञान र प्रज्ञाको देव धर्म पालाहरू कहाँ आउँछन् र ? आउँदैनन्। नराम्रो प्रेत भूत पो आएर त्यहाँ चढ़ाएको रगत, मासु र तोरमा खाएर खुशी हुन्छ अनि केही दिनको लागि फाइदा हुन्छ तर पछि सबै नष्ट गरिदिन्छ अनि फेरि दुःखको दुःखै हुन्छ। यसकारण यस्तो प्रकारको पूजा गर्नु भन्दा त बुद्धको शरण गमन गर्नु उचित हुन्छ। कुनै राम्रो शील भएको लामा वा भिक्षु निमंत्रण गरेर एक लाख शरण गमनको पाठ गर्नु लगाए ठूलो फायदा हुनेछ। आफैले पनि एक लाख शरण गमनको पाठ गर्नु सके अति उत्तम हुनेछ। यसरी बुद्धहरूको शरण गमन गरे वहाँहरूले हामीलाई बचाउँछन्। हामीले नचित्ताएको आई लाग्दैन। जस्तो चित्ताए पनि पुग्ने छ। धर्मपाला अनि अरू कुशल देवताहरूले हामीलाई बचाउँछन्। नराम्रो दशा ग्रहले हामीलाई छुनु सक्दैन। बौद्ध धर्मको ढोका जस्तो त्रिरत्नको शरणमा जानु हो। बौद्ध

धर्मको मूल आधार त्रिरत्नको शरणमा जानु हो। त्रिरत्नको शरण गमनसम्म गरे निर्वाण वा मुक्तिको विऊ हुनेछ। कुकर्म कम्ति वा घटेर जानेछ। कुशल कर्म वा धर्म बड़ेर जानेछ। सबै शील लिनु भन्दा अघि त्रिरत्नको शरणमा नगए शील पाउँदैन। प्रथम शरण गमन गर्नु नै पर्छ। प्रतिमोक्षको शील, बोधिचित्तको शील, गुह्य बज्रथानको शील, जुनै शील लिए पनि प्रथम त्रिरत्नको शरण गमन गर्नु पर्छ। बज्रायनाको अधिष्ठान (वाङ) गर्दा वा लिँदा पनि प्रथम त्रिरत्नको शरण गमन गर्नु पर्छ। एक दिनको उपषोध व्रत शील पालन गर्दा पनि त्रिरत्नको शरण गमन गर्नै पर्छ। त्रिरत्नको गुण जानेर बुझेर शरणमा गएको फल त यति छ भनेर अन्दाज गर्नु सक्दैन। समुद्रको पानी नापेर नाप्नु सकला, तर त्रिरत्नको गुण बुझेर अनि जानेर शरणमा जानुको फल यति छ भनेर बताउनु सक्दैन। त्रिरत्नको आधार जस्तै भगवान्‌को प्रतिमा, वहाँको वाणी, धर्म पुस्तक र चैत्यहरूमा अलिकति पनि समबन्ध भए, बुद्ध धर्म संघ भन्ने नामसम्म पनि कानमा सुनेको फलले एक दिन मुक्ति प्राप्त गर्छ। त्रिरत्नको नाम सुने मात्र यो बिऊ हुनेछ, फल बुद्धज्ञान प्राप्त गर्नेछ। मुक्ति प्राप्तिको अवधि आफ्नो कर्म अनुसार ढिलो छिट्टो हुनेछ। कोशेश र कुशल कर्म भए चाँडै बुद्धज्ञान प्राप्त हुनेछ। यसको उदाहरण यस प्रकार उल्लेख छ - भगवान आफ्ना शिष्यहरूसित वेणु बनमा विराजमान हनु भएको समयमा एक जना गृहस्थी खिमदा पालछेन भन्ने मानिस आफ्नो स्वास्नी, छोरा छोरी सबै मरेर गृहस्थी जीवनबाट वैराग भएर भिक्षु हुन भनी आएछ। यसरी भिक्षु हुन्छु भनी अर्हत शारिपुत्रकहाँ गएछ। त्यस समय भिक्षु हुन्छु भन्दा पनि उसको पूर्वजन्मको भिक्षु हुने पूण्य छ वा छैन भनी अर्हतहरूले वहाँहरूको अभिज्ञानले पूर्वजन्मको स्मृति गर्थे। यसरी नै पूर्वजन्मको

पूण्य हेर्दा अर्हत शारिपुत्रले भन्नु भएछ तिम्रो कैयौं जन्मको स्मृति गरेर हेर्दा पनि तिम्रो भिक्षु हुने पूण्य छैन रहेछ र यस जीवनमा राम्रो पूण्य कर्म गर्नु अर्को जन्ममा भिक्षु हुन सक्छौ भनी आज्ञा गरेर त्यस गृहस्थी भिक्षु हुन पाएन। यसरी सांसारिक जीवनमा यसरी वैरागी मन आएर पनि भिक्षु हुन नपाउँदा आफैले आफैलाई यसो भन्दै फर्केछ – "म अति अभागी रहेछु, मेरो यस संसारमा पनि कोही छैन। सांसारिक जीवन त्यगेर भिक्षु हुनु भन्दा पनि भिक्षु हुन पनि पाइनँ।" यो सबै भगवान् बुद्धले थाहा पाउनु भएर शारिपुत्रलाई बोलाउनु भएर त्यस गृहस्थीलाई भिक्षु ग्रहण गर्नु दिनु भनी आज्ञा दिनु भएछ। शारिपुत्रले गृहस्थीको भिक्षु हुने पूण्य छैन भनी भन्दा भगवान्ले यसो भन्नु भएछ – "तिम्रो अभिज्ञानले देख्न नसकेको मात्र हो त्यस गृहस्थीको पूण्य छ।" शारिपुत्र ले सोध्नु भएछ – "कुन जन्ममा र कस्तो पूण्य गरेको छ, दया गरेर बताईदिनु हवस।" भगवानले भन्नु भयो – "आज भन्दा धेरै कल्प अघिको कुरो हो। एउटा शिकार र शिकारी कुकुरले एउटा बनेललाई खेद्दै खेद्दै एउटा चैत्यमा परिक्रामा गरेर भागे। त्यो चैत्य खोरवा जीग नामक प्राचीनकालका भगवान् बुद्धका अस्तुको चैत्य हो। यसरी अन्जानमा एकपल्ट परिक्रमा गरेको फलका कारणले आज त्यस गृहस्थी भिक्षु हुन सक्ने पूण्य छ। त्यो बनेल यो गृहस्थको पूर्वजन्म हो।" त्यस बनेललाई चैत्य भनेको पनि थाहा थिएन, यसको परिक्रामा गर्नु पर्छ भनेर पनि जान्दैन थियो, यसरी नजानी थाहा नभई परिक्रामा गरेको फल त यस्तो पाइन्छ भन हामीले श्रद्धा र स्वच्छ हृदयले भक्ति गरेर शरण गमन गरे कतिको फल पाउँछौं। यी माथिका इतिहासबाट थाहा पाइन्छ।

धेरै वर्षको कुरो हो एउटा चोरलाई पक्रेर शरण गमन गर्दै लट्ठीले हिर्काएछ **“बुद्धं शरणं गच्छामी, धर्मं शरणं गच्छामी, संघम् शरणं गच्छामी”** (साङ्गेला क्यापसुछि क्षेला क्यापसुछि, गनेदुइन ला क्याप सुछि हो”) धेरैपल्ट शरण गमनको पाठ गर्दै हिर्काएछ त्यसपछि छोडिदिएछ। त्यो चोर एउटा ठूलो पुलकोमुनि बसेर जति दुःख्यो त्यति नै अघि शरण गमन गरेको पाठको याद आउँद रहेछ त्यति शरण गमनको पाठ भन्दारहेछ यसरी जति ज्यादा दुःख्यो त्यो पाठ “साङ्गेला क्याप सुछि क्षेलो क्याप सुछि गनेदुइन ला क्याप सु छि” भन्दै हिर्कायो भन्दो रहेछ यसरी दुःख्दा दुःख्दा शरण गमन गरी बस्दो रहेछ। त्यस पुलकोमुनिबाट भूत प्रेत हिँड्ने बाटो रहेछ। त्यो भूत प्रेतहरू संधै झै आउँदा आज यो शरण गमनको पाठ गरेको सुनेछ यो सुन्दा भूतहरूले अहो आज यास बाटो जानु हुँदैन। यो पुलमुनि बुद्धको शरण गमन, धर्मको शरण गमन, संघको शरण गमन गर्ने बुद्धको चेला रहेछ यो बाटो जानु हुँदैन भनी अर्को बाटो गएछ। यदि ती भूतहरू त्यो बाटो आएको भए त्यो चोरको प्राण लिने थिएछ, शरण गमन पाठ गरेको करणले गर्दा उसको मृत्यु भएन। त्यो चोरले भित्री मन र भक्ति गरेर त शरण गमन गरेको थिएन। त्यसै उसको दुखाई भुल्नको लागि मात्र त्यो शरण गमन ग ेको थियो। यसकारण स्वच्छ हृदयले भक्ति र श्रद्धा गरेर त्रिरत्नको शरण गमन गरे त्यसको फल आकाश बराबर पाउने छ।

घरमा उपकार गर्नुका निम्ति लामाहरू बोलाएर धर्मपालाहरूको पूजा गर्नु भन्दा ठूलो स्वच्छ हृदयले भक्ति गरेर त्रिरत्नको शरण गमनको पाठ गरे सबै विघ्न बाधा, ग्रह-दशा, राग कष्ट हटेर जानेछ। ॰

त्रिरत्नको गुण र ज्ञानहरू युग युग कल्प कल्पसम्म भनेर पनि भनी सक्दैन।

**चौथो मूल शरण गमनको विषय -**

त्रिरत्नको शरण गमनमा जानु पर्ने मूल कारण के हो भने यस त्रिलोकमा जहाँ जन्मे पनि दुःख मात्र छ। झन दुर्गतिमा जन्म लिए महादुःख छ। यी दुःखहरू सम्झँदा मात्र पनि सहनु नसक्ने दुःख र महाडर हुन्छ। यस्तो दुःख र भयबाट बचाउने शक्ति त्रिरत्नका मात्र छ। यस दुःखबाट आफैले आफैलाई बचाउने शक्ति छैन। यस दुःखको भवसागरबाट बचाउन सक्ने शक्ति त्रिरत्नको मात्र छ भनी दृढ स्वच्छ हृदयले भक्ति र श्रद्धा गर्नु पर्छ। स्वच्छ हृदयले यस्तो प्रकारको भक्ति गर्नु पर्छ कि आजदेखि बोधिचित्त प्राप्त नभइसम्म मरे पनि, बाँचे पनि, माथि गएपनि, तल गए पनि, दुःख पाए पनि, सुख पाए पनि, भोकै बस्नु परे पनि, ठण्डा भए पनि, गरम भए पनि जस्तो जे भए पनि कुनै कुरोको वास्ता नगरी त्रिरत्न बुद्ध, धर्म र संघको शरणमा लीन हुन्छु भनी भित्री हृदयबाट नै त्रिरत्नको शरणमा जानु पर्छ। बुद्धि, हृदय र छातीभित्रबाट नै शरण गमन गर्नुपर्छ। त्रिरत्नको शरणमा जाँदा पिताले के भन्छ, माताले के भन्छ, इष्टामित्रले के भन्छ यी सबैको वास्ता नगरी शरीर, वचन र चित्त एक गरेर त्रिरत्नलाई जिम्मा दिएर शरण गमन गर्नु पर्छ। शरण गमन गर्दा मनको विचार र लक्षण एक हुनु पर्छ ॥

पाचौं शरण गमन गर्दा विचारको भिन्नता

शरण गमन तीन प्रकारको हुन्छ।

**१) निम्न बर्ग पुरूष २) मध्यम पुरूष ३) महापुरूष**

*१) निम्न बर्ग पुरूष* - भवसागरमा, दुर्गतिमा, नरक प्रेत र पशुलोकमा जन्म नहोस्। मानिस अनि देव लोकको सुख पाउनुको निम्ति र दुर्गतिमा जन्म नहोस भनि त्रिरत्नको शरण गमन गर्नु गर्छ। यसरी आफूमात्र स्वर्गको सुख पाउने इच्छा गर्ने निम्न वर्गको पुरूष हो। नरक, प्रेत र पशुको दुःख बुझेर यी तीन लोकबाट मुक्ति भएर देव मनुष्य जन्मको आशा राखेर त्रिरत्नको शरण पर्ने निम्न वर्गको पुरूष भन्दछ।

*२) मध्यम पुरूष* - यो भवसागरमा स्वर्गदेखि नरकसम्म जहाँ जन्मे पनि दुःखै दुःख मात्र छ भनी बुझेर स्वर्गको पनि आशा नगरेर आफु मात्र निर्वाण प्राप्त गर्नुको लागि त्रिरत्नको शरणमा जाने मध्यम पुरूष हो।

*३) महापुरूष* - यी तीन लोकमा जहाँ जन्मे पनि दुःख छ यो अनन्त दुःखमा परेका सर्व प्राणीहरू हाम्रा माता पिता नभएका कोही छैनन्, पूर्वजन्ममा हामी सबैलाई आफ्नो माता पिता भई कत्रो गुण गरेको थियो। त्यो गुण हामीले तिर्न सक्दैनौ। अहिले आफ्नो कुकर्मको कारणले ती प्राणी सबै अन्यन्त दुःखमा परेको छ भनी बुझेर सर्व प्राणीहरूलाई यस दुःखबाट मुक्ति गराउन अनि सम्याक समबुद्धको क्षेत्रमा पुऱ्याउनका निम्ति त्रिरत्नको शरणमा जाने महापुरूष भन्दछ। आकाश जहाँसम्म व्याप्त छ प्राणी पनि त्यति नै छ, यी सर्व प्राणीलाई दुःखको सागरबाट मुक्ति गराउन पाऊँ भन्ने उद्देश्य र भावना राखेर त्रिरत्नको शरण गमन हामी सबैले गर्नु पर्छ। यस्तो उद्देश्य अति उत्तम

हो ।।

छैटौं शरण गमनको शिक्षामा छोड़न पर्ने र पालन गर्नु पर्ने नियम विषय - (१) **प्रथम छोड़न पर्ने शिक्षा विषय** (२) **दोस्रो पालन गर्नु पर्ने शिक्षा विषय** (३) **तेस्रो अनुरूप त्यो जस्तै पालन गर्नु पर्ने शिक्षा विषय ।**

१) **प्रथम छोड़न पर्ने शिक्षा विषय** - (क) आफू र सर्व प्राणी यस दुःखको भवसागरबाट पार हुने र निर्वाण प्राप्तिको निम्ति भगवान् तथागत बुद्धहरूको शरणमा गइसकेपछि मुक्ति नभएका सांसारिक देवता देवीको शरणमा जानु हुँदैन । सांसारिक देवता जस्तै ब्रह्म, विष्णु, इन्द्र, महादेव आदिको शरणमा जानु हुँदैन । उनीहरू आफै पनि मुक्त भएका छैनन्, अरूलाई कसरी मुक्ति दिन सक्छन् र ? फेरि गाउँ घरमा मान्ने देवी, देवराली, प्रेत शक्तिशाली भूत, पित्री, नाग देव आदिको शरणमा पनि जानु हुँदैन अनि शरणमा पर्नु पनि हुँदैन । सांसारिक देव देवताहरूले यस लोकको मनोकामना त पूर्ण गरिदिनेछ तर मृत्युपछि हामीलाई बचाउनु सक्दैन जस्तै जेलभित्रको कैदीले कदैलाई कसरी मुक्ति दिन सक्छ र ? त्यस्तै नै हो ।

(ख) धर्मको शरण गइसकेपछि प्राणी सबैलाई कुभलो गर्ने, कुभलो चित्ताउने, सपनामा पनि प्राणीलाई नराम्रो गर्ने प्राणीलाई दुःख दिने हिर्काउने सबै त्याग्नु पर्छ । प्राणी हत्या त झन सानु मच्छरदेखि हात्ती, मानिससम्म सबै त्याग्नु पर्छ । सधैं भलो र उपकार गर्नु पर्छ ।

(ग) संघको शरणमा गइसकेपछि नास्तिकको संगत गर्नु त्याग्नु पर्छ । बौद्ध धर्मलाई नराम्रो गर्ने, बुद्धको निन्दा गर्ने संगत सबै छोड़नु

पर्छ। बौद्ध धर्म गर्ने भएपनि काटमार गर्ने, अरू प्राणीहरूलाई सताउने, कुभलो चित्ताउनेको संगत छोड्नु पर्छ। आफ्नो गुरु लामाको निन्दा गर्ने, नराम्रो गर्ने, धर्मलाई र संघलाई निन्दा गर्ने, गुह्य बज्रयानको धर्मलाई निन्दा गर्ने सबै संगत त्याग्नु पर्नेछ।

## २) दोस्रो पालन गर्नु पर्ने शिक्षा विषय -

(क) भगवान् तथागत बुद्धका शरणमा गइसकेपछि भगवानको प्रतिमा छ्योर्तेन साजा(छभा), जुनै भए पनि यी सब स्वयं भगवान् हुन भनी पवित्र स्थानमा राख्नु पर्छ। कत्तै भुइँतिर भरेको भए टिपेर चोखो पवित्र स्थानमा राख्नु पर्छ। यसरी भगवानको स्वरूपलाई स्वयं हुन भनि श्रद्धा र भक्ति गरे फल अचित्तनीय पाउने छ यस विषयमा छोटकरी कथा यस प्रकार छ - "उहिले एक समयमा एउटा "साजा" (माटोको छजा) बाटोमा भरिरहेको थियो। त्यस बाटोमा जाने एउटा मान्छेले त्यो "साजा" देखेछ। त्यो "साजा" भगवानको प्रतिमा स्वयं हुन् भन्ने श्रद्धा र भक्तिले त्यो "साजा" पानीले भिज्छ होला भनी केहि चिजले नभिज्ने गरी ओड़ाउनु पऱ्यो भन्ने विचारले यता उता हेरेछ अनि त्यहाँ एउटा फाटेको जुत्ता देख्दा त्यो जुत्ताले "साजा" ओड़ाएर राखी दिएछ। फेरि त्यही बाटो एक जना मानिस जाँदा उसले त्यो "साजा" जुत्ताले ओड़ाएको देखेछ। यसरी देख्दा उसको मनमा यस्तो लागेछ। "भगवान्‌को स्वरूप यो मैला जुत्ताले कस्तो छोपेको भनी त्यो जुत्ता फ्याँकिर त्यो "साजा" एउटा चोखो र पानीले नभिज्ने स्थानमा राखी दिएछ। यसरी साजा बनाउने, जुत्ताले छोप्ने र जुत्ता फ्याँकने तीनैजना मृत्युपछि राजाको जन्म पाएछन्। तीनै जनाको स्वच्छ भक्तिको कारणले जुत्ताले छोप्न पनि नराम्रो मन नभएकोले गर्दा यस्तो ठूलो

फल पाएको हो। यसकारण सर्व महापुरूषहरूले भन्नु हुन्छ “स्वच्छ हृदय भए मार्ग पनि स्वच्छ हुन्छ, दुषित हृदय भए मार्ग पनि दुषित नै हुनेछ ।”

(ख) धर्मको शरण गइसकेपछि भगवान बुद्धका वाणी लेखिएको पुस्तकको ठेलीदेखि लिएर सानु एउटा अक्षर सम्म पनि भगवान् बुद्धको वाणी हुन् भनी पवित्र मान्नु पर्छ। जताभावी गर्नु हुँदैन।

(ग) संघको शरणमा गइसकेपछि रातो, पहेलो या संघको बस्त्र लगाएको सबैलाई चाहे उनीहरूसित प्रतिमोक्षको तीन शील नभए पनि धर्म गर्ने मित्र सम्झी श्रद्धा गर्नु पर्छ।

**३ तेस्रो अनुरूप शिक्षा विषय -**

(क) भगवान् बुद्धको शरणमा गएपछि आफ्नो मूल गुरु लामालाई स्वयं बुद्ध हो भनी श्रद्धा र भक्ति गरी वहांको छायासम्म कुल्चनु हुँदैन। स्वयं भगवान् बुद्ध हुन भनी सत्कार गर्नु पर्छ।

(ख) धर्मको शरणमा गएपछि आफ्नो मूल गुरु वा लामाको वचन स्वयं बुद्ध वाणी हुन् भनी आज्ञा पालन गर्नु पर्छ। वहाँले जस्तो भने पनि पालन गर्नु पर्छ, उल्लङ्घन गर्नु हुँदैन।

(ग) संघको शरणमा गए पछि गुरुका चेलाहरू आफ्नो धर्म साथी सबैलाई सत्कार गर्नु पर्छ। धर्म साथीहरूले मन नपराउने इच्छा विरूद्ध सबै त्याग्नु पर्छ।

विशेष गरेर गुह्य तांत्रिक बज्रायानमा आफ्नो गुरु शरण जाने आधार भएकोले गर्दा गुरुको शरीर संघ हो। वहाँको वचन धर्म हो।

वहाँको चित्त बुद्ध हो। यसकारण आफ्नो गुरुको सेवा सत्कार आज्ञा पालन गरे त्रिरत्नको सेवा गरेको स्वच्छ भक्ति र श्रद्धा गरेको अचिन्तानीय फल पाउने छ। आफ्नो गुरुले जस्तो व्यवहार गरे तापनि गुरुको निन्दा गर्नु हुँदैन जे जसो कर्म गरे तापनि सबै राम्रै हेर्ने वा देख्ने गर्नु पर्छ। सधैं आन्तरिक हृदयबाट गुरुलाई प्रार्थना गर्नुपर्छ। जस्तै दुःख भए पनि, सुख भए पनि, राम्रो भए पनि, नराम्रो भए पनि, विमारी भए पनि, सञ्चो भए पनि आफ्नो मन सधैं गुरुको चरणमा राखेर शरणमा जानु पर्छ। सुख आनन्द भए पनि गुरु त्रिरत्नको कृपाले हो भन्नु पर्छ। यो संसारमा आफुलाई सुख भए पनि, धर्मको मन अलि कति उत्पत्ति भए पनि गरम भएको समयमा शीतल हावा आएकोसम्म पनि गुरुको कृपाले भएको हो भन्ने सम्फनु पर्छ। यस विषयमा बोधिचार्य अवतारमा यस्तो भन्नु भएको छ "रातो यथा मेघघनाधकोर विद्धुत क्षण दर्शयति पुण्येषु मति : क्षण स्यात्।" घोर अन्धाकार रातमा विजली चम्कँदा क्षण भर सबै देख्न सक्छ, त्यस्तै ने बुद्धको महिमाको कारणले मानिसको मन वा बुद्धि क्षणभर भए पनि पुण्य कर्म गर्ने मन भएर आउँछ।

**अनुकार्य शिक्षा विषय :-**

त्रिरत्नको ज्ञान र गुणको स्मृति गरेर आन्तरिक हृदयबाट शरणमा जानु पर्छ। यसरी शरणमा गएपछि जे खाए पनि, पिउने काम जे गरे तापनि, नयाँ लुगा जे लगाए तापनि पहिला त्रिरत्नलाई चढाउनु पर्छ। यसरी त्रिरत्नलाई पहिला चढाएर आफूले खाए आफ्नो पूण्य बड़ेर जानेछ। यसरी चढाउँदा भगवानले सबै सेवन गर्ने र पिउने त होइनन् र आफ्नो भाग कम्ति पनि हुने होइन, त्रिरत्न आफ्नो स्वर्यको निम्ति

प्रसन्न हुने पनि होइनन्, प्रसन्न हुनुहुन्छ तर अरू प्राणीको निम्ति, आफ्नो निम्ति होइन। कारण त्रिरत्नलाई जे जस्तो चढाउँदा आफ्नो स्वार्थको निम्ति प्रसन्न भए वहाँहरू बुद्ध होइनन्। यदि पूजा नगर्दा केही नचढाउँदा वहाँहरू रिसाएर दुःखी भए वहाँहरू बुद्ध होइनन्। त्रिरत्नको स्वाभाव एक नाश बराबर र समान दृष्टिका हुन्छन्। वहाँहरूलाई पूजा गर्दा, बत्ती, पानी, प्रसाद आदि नचढाउँदा आफ्नो स्वार्थको निम्ति प्रसन्न र अप्रसन्न दुवै हुँदैनन्। तर प्राणीहरूले पूण्य गर्दा, धर्म कर्म गर्दा पूजा चढाउँदा त्रिरत्तन भगवानहरू प्रसन्न हुन्छन्। तर स्वार्थीको निमित्त होइन। वहाँहरू प्रसन्न भएको कारण यी प्राणीहरूले आज यस्तो पूण्य गरेकोले गर्दा यसको फलस्वरूप पछि यी प्राणीहरूले बुद्धज्ञान प्राप्त गर्छन् अनि बुद्धज्ञान प्राप्त गर्नुको निम्ति आज बिऊ रोप्यो अनि आनन्दमय सुख पााउनेछन् भनी अभिज्ञानले भविष्य जान्दछ र प्रसन्न हुन्छन्। फेरि अर्कोतिर पाप कर्म गर्दा, काटमार गर्दा, पूजा आदि नचढाउँदा, कुकर्म मात्र गर्दा त्रिरत्न भगवान् तथागत बुद्धहरू आफ्ना स्वार्थको निम्ति अप्रसन्न र अप्रसन्न हुनु हुन्न तर प्राणीहित कै निम्ति मात्र अप्रसन्न हुन्छन्। यसरी प्राणीहरूले पाप गर्दा, काटमार गर्दा, बुद्धहरूलाई नराम्रो झुठो पूजा चड़ाउँदा, कुनै पनि कुशल कर्म नगर्दा, पूण्य कर्म नगर्दा वहाँहरूले मन दुखाउनुहुन्छ अप्रसन्न हुन्छन्। तर वहाँहरू आफ्नो स्वार्थको निम्ति होइन। आज यसरी प्राणीहरू दुर्गतिमा जन्म लिएर महादुःख भोग्नु पर्नेछ भनी अभिज्ञानले भविष्य थाहा पाउनु हुन्छ, यसरी थाहा पाएर आज यी प्राणीहरूले दुःखको बिऊ रोपे भनी असाध्य दुःखी र नाराज हुनुहुन्छ। बुद्धहरूलाई बत्ती नचढाउँदा अंध्यारो पनि हुने होइन, चढाउँदा उज्यालो पनि हुने होइन। पानी चढाउदा वहाँहरूको तिर्खा मेट्ने पनि होइन, नचढाउँदा तिर्खा

लाग्ने पनि होइन। यसरी स्वच्छ हृदयले चोखो पानी चढाए, पूजा आदि गरे आफ्नो पूण्य बढ़ेर जानेछ, पूण्य बढ़ेर गए ज्ञान प्राप्त गर्नु सजिलो पर्नेछ। यसकारण समय समयमा त्रिरत्नको पूजा गर्ने, पूण्य संचय गर्ने, शरण गमनको गुणहरू सुनाएर शरण गमन गर्नु लगाए अति उत्तम हुनेछ। सानुदेखि लिएर ठूलो जे जस्तो हुन्छ पूण्य कर्म गर्ने गर्नु पर्छ। यसरी पूण्य गर्दा प्राणी हत्या सबै त्याग्नु पर्छ। ठूलो जनावर हात्तीसम्म कसैको प्राण हत्या गर्नु हुँदैन। यसरी त्रिरत्नको गुण मनमा सम्झी दिनमा छ पल्ट ढोग गर्दै शरण गमनको पाठ गर्नु पर्छ। प्राण गए पनि जावस् तर त्रिरत्नको शरण गमन त्याग्नु हुँदैन खेल ठट्टासम्ममा पनि त्रिरत्नको शरण त्याग्नु हुँदैन। त्रिरत्नको कसम खानु हुँदैन्। साँचो भए पनि झुटा भए पनि त्रिरत्न "कुञ्जो सुम" भनेर कसम खानु हुँदैन।

**सातौं शरण गमनको फल विषय -**

त्रिरत्नको शरण गमन गरेको फल यति पाइन्छ भनेर वर्णन गर्नु सक्दैन। स्वच्छ हृदयले श्रद्धा र भक्तिसाथ शरण गमन गरे प्रथम बुद्धिष्ट हुनेछ अनि बुद्धका शिक्षार्थी हुनेछ। यसरी शरण गमन गरेर त्रिरत्नको शरणमा गए जुनै शील पानि पाउने छ। कारण त्रिरत्नको शरणमा नगई कुनै शील पनि पाइँदैन। जस्तै शील लिनु परे प्रथम त्रिरत्नको शील नभई हुँदैन। यो शरण गमन भाँड़ा जस्तो हो। भाँड़ा भए जे जस्तो कुरो पनि हाल्न सकिन्छ त्यस्तै नै प्रथम त्रिरत्नको शरणमा जानु पर्ने मुख्य हो। शरणमा गए पछि पञ्च शील, प्रबज्राक, भिक्षु, बोधि, चित्ता गुह्य, तांत्रिक शील जे जसो सबै शील पाइन्छ। शरण गमनको पाठ गरे पछि बाहिरी गृहदशा, भूतप्रेत, डाहा आदि भित्री रोग कष्ट विरामी सबै हटेर जानेछ अनि आफूलाई कसैले पनि

बिगार्न सक्दैन। आयु पनि लामो हुने, अकाल मृत्यु पनि नहुने, मृत्यु पछि पनि सुखी हुने, राम्रो राम्रो जीवन पाउने हुन्छ। पूर्वजन्मको पाप पनि काटिएर शुद्ध हुन्छ। पूर्वजन्ममा त के कुरा यही जीवनमा पाँच महापाप गर्ने पनि त्रिरत्नको शरण गमनको फलले पाप काटिन्छ। आफ्नो पिता बिम्बिसार मार्ने छोरो अजातशत्रु पनि त्रिरत्नको शरणमा स्वच्छ हृदयले श्रद्धा र भक्तिको साथमा गएको कारणले गर्दा एक हप्ता मात्र बज्रा नरकमा जन्मेर एक हप्तापछि अर्हत ज्ञान प्राप्त भयो। यदि त्रिरत्नको शरणमा नगएको भए कल्प कल्पसम्म बज्रा नरकमा जन्मेर दुःख भोग्नु पर्ने थियो। पिताको हत्या नगरेको भए त झन भुमिज्ञान प्राप्त भएर बुद्धज्ञान प्राप्त हुने थियो। भगवान्को भाइ देवदत्त पनि बुद्धको शरणमा आन्तरिक स्वच्छ हृदयले श्रद्धा र भक्तिको साथ गएको कारणले अर्हत ज्ञान प्राप्त हुनसक्यो। "बिमल वा डीमा मेपा" भन्ने सुत्रमा भगवान्को वाणी यस्तो छ - "शरण गमन गरेको पूण्यको फलको रूप हुने भए यो आकाश भन्दा पनि विशाल हुने थियो।" "जीमाही गीङपो सुत्र" भन्ने पुस्तकमा यसो भनी उल्लेख गरिएको छ - "सर्व प्राणीको भलाइको निम्ति त्रिरत्नको शरणमा गए एक सय मारले पनि आफूलाई मार्न सक्दैन। कुनै पनि विघ्न बाधा पर्नु सक्दैन। आफ्नो शील भङ्ग भए पनि शरण गमनको बलले मुक्ति पाइन्छ। आफ्नो शील पनि शुद्ध भए, भावना पनि शुद्ध भए पछि राम्रो राम्रो जीवन प्राप्त गर्दै अन्तमा बुद्धज्ञान प्राप्त हुनेछ। बाहिरी विघ्न बाधाहरू सबै नाश गरिदिन्छ। आफूले जस्तो चित्ताएको छ त्यस्तै पुग्नेछ। विस्तारै विस्तारै पछि बुद्धज्ञान प्राप्त हुनेछ। चिन्तामाणी झैं जस्तो प्रार्थना गर्छ त्यस्तै पुग्ने छ। यो कलियुगमा प्राणीहरूको आयु छोटो छ साथै पूण्य पनि हुँदैन। धर्म च्रक परिवर्तन गर्दा या सुन्दा पनि बाहिरी र

भित्री विघ्न बाधा धेरै हुन्छ। गुह्य गम्भीर धर्म गर्दा मार विघ्न बाधा पनि नगम्रो र धेरै हुन्छ। बाहिरी दशा ग्रह भूत प्रेतले दुःख दिने भित्री रोग कष्टको पीर र दुःख हुने। मनमा नाना प्रकारको विचार उत्पन्न हुन्छ। यसरी बाहिरी भित्री रोग कष्ट ग्रह दशाले धेरै सताए त्रिरत्नको शरण गमन स्वच्छ हृदयले श्रद्धा र भक्तिसंग गरे सबै दुःख-विमार, ग्रह दशाबाट मुक्ति हुन्छ। यसकारण त्रिरत्नको शरणमा स्वच्छ हृदयले श्रद्धा र भक्तिले शरण गमन गरे यसको फल अचिन्तनीय पाउने छ। पछि बुद्धका जस्तै भावना र ज्ञान प्राप्त हुनेछ। जब बुद्धज्ञान प्राप्त हुन्छ त्यहाँदेखि शरण गमन गर्नु पर्ने छैन। त्यस बेला आफै बुद्ध भइसकेको हुनेछ। बुद्धज्ञान प्राप्त भए पछि कसैको शरण जानु पर्ने छैन।"

**बोधिचित्त उत्पत्ति हुने विषय** - प्रथम आमा चिन्नु पर्ने, आमाको गुण स्मरण गर्नु पर्ने, आमाको ऋण तिर्नु पर्ने विषय -

**पहिलो उपेक्षा (मनको एकनासपन वा बराबर) ध्यान गर्ने विषय -**

आफ्नो आमाको गुण सम्झिनु, स्मरण गर्नु र बुझ्नु भन्दा अघि उपेक्षाको ध्यान गर्नु अति आवश्यक छ। उपेक्षा भनेको रिस पनि नगर्ने, माया-प्रेम पनि नगर्ने दुवैको मध्यममा बराबर दृष्टिले दया र करूणा गर्ने हो। हामीले आफ्नो प्रिय शाखा-सन्तान, इष्टमित्रलाई मात्र करूणा, दया र माया गर्छौं। शत्रुलाई रिस गर्ने, आफूले मन नपराउने व्यक्तिलाई छि छि दूर दूर गर्छौं। यसरी कसैलाई माया र प्रेम गर्ने, कसैलाई नगर्ने, कसैलाई रिस गर्ने यस्तो मतभेद गरे बोधिज्ञान प्राप्त हुन सक्दैन। सर्व प्राणीलाई एक समान रूपले दया, प्रेम र करूणा

गर्नु पर्छ । शत्रुप्रति रिस नगरि, इष्टमित्र आफन्तहरूप्रति तृष्णाको मात्र मोह प्रेम पनि गर्नु हुँदैन । सर्व प्राणीहरूलाई बराबर समान रूपले माया, दया, करूणा र प्रेम गर्ने ध्यान गर्नु पर्छ । यो ध्यान अभ्यास गर्दा आफूले कुनै अन्जान मानिस सम्झेर ध्यान गर्नु पर्छ । यस्तो अन्जान मानिस प्रति माया पनि हुँदैन, रिस पनि हुँदैन । यसरी अन्जाने मानिस सम्झेर उसले दुख नपावस् भन्ने भावना गर्नु पर्छ । उसले दुःख सपनासम्ममा पनि नपावस् भन्ने इच्छा गर्नु पर्छ । हाम्रो मनले सबै प्राणीहरूलाई एकनाश बराबर रूपले हेर्न सक्नु पर्छ । माया र रिस कम्ती ज्यादा माया वा रिस राम्रो नराम्रो गर्ने कर्मैलाई प्रेम ज्यादा गर्ने वा कम्ती गर्ने यो सब दोष र क्लेश आफ्नो मनबाट हटाउनु पर्छ । यस्तो दोष र क्लेश भए धर्म अशुद्ध हुनेछ । यसकारण शत्रु र इष्टमित्र भन्ने सम्बन्ध नित्य र सत्य होइन । यही जीवनमा पनि धेरै जस्तो इष्टमित्रहरू दुश्मन भएको पाइन्छ शत्रु पनि इष्ट भएको पाइन्छ । भगवान बुद्धका वाणीमा यस्तो भन्नु भएको छ – "पूर्वजन्ममा शत्रु पनि इष्टमित्र, माता पिता भएर हामीहरूलाई धेरै गुण, माया र प्रेम गरेको छ, यसरी आफूलाई धेरै फाइदा गरिदिएको छ जुन गुणको हामी ऋणी छौ । फेरि आमा बाबु, इष्टमित्र पूर्वजन्ममा आफ्नो शत्रु भएर धेरै नोक्सान गरेर आफ्नो प्राणसम्म लिने पनि छ । यसरी शत्रु र इष्ट भनेर मतभेद गर्नु पनि व्यर्थै हो । कुनै पनि नित्य र सत्य होइन । **बुद्धका चेला आर्य कत्यानले यसो भन्नु भएको छ – "बाबुको मासु खाएर आमालाई लट्ठीले हिर्काउने शत्रुलाई माया गरेर काखमा राखेको पत्नीले चाहिँ पत्तिको हड्डी खानु तृष्णा गर्ने । यो संसारको कस्तो हाँस उठदो लिला अचम्भको ।" यसको कथा यसप्रकार छ । एक समयमा आर्य कत्यना भिक्षाटनमा जानु हुँदा एउटा**

**गृहस्थीको घर पुग्नु भएछ। त्यहाँ गृहस्थी खाना खाँदै गरेको समयमा पुग्दा वहाँ एक क्षणसम्म भिक्षा पर्खनु भएछ।** एउटा स्त्रीको काखमा नानी, माछा खाँदै रहेछ, स्त्रीको छेऊमा एउटा कुकुर हड्डी पाउँछ भनेर बसेको रहेछ। त्यो स्त्रीले चाहिँ कुकुरलाई लट्ठीले हिर्काउँदो रहेछ। यस्तो दृष्य देख्दा वहाँले यी सबै प्राणीको कस्तो कस्तो संस्कार रहेछ भनि अभिज्ञानले एक क्षण ध्यान गरेर हेर्नु भएछ, यसरी हेर्दा वहाँले यी प्राणीहरूको पूर्व जन्मको संस्कारका यस्तो प्रकारको दर्शन भएछ - पूर्वजन्मको आमा कुकुर रहेछ, बाबु चाहिँ माछा, आफूलाई नोक्सान गर्ने शत्रु छोरा भई जन्मेर काखमा रहेछ। यस्तो प्रकारको दृश्य देख्दा माथि लेखिएको कुरो भन्नु भएको हो।

**गुरु रिम्पोछे पदमसम्भावा तिब्बतमा हुनु हुँदा तिब्बतको राजा ठि सोङ देहु चेनको छोरी राजकुमारी लाच्याम पेमा सत्र वर्षको उमेर पुग्दा मृत्यु भएछ। यसरी मृत्यु हुन्दा राजाले गुरु रिन्पोछेलाई यसो भन्नु भएछ - "धर्म राज गुरु रिन्पोछे** - मेरो छोरी लाच्याम पवित्र कर्म गरेको थिएछ अनि अहिले मेरो छोरी भएर जन्म्यो तपाईको दर्शन पनि गर्नु पायो। यति पवित्र भएर पनि आयु छोटो हुनुको कारण चाहिँ के होला ?" गुरु रिन्पोछेले भन्नु भयो - "तिम्रो छोरी राजकुमारी लाच्याम पेमा पवित्र कर्म गरेर तिम्रो छोरी जन्मेको होइन - पूर्वजन्ममा म, राजा तिमी र खेन्चे बोधिसत्व हामी तीनजना नेपालमा एउटा नराम्रो सानु जातमा जन्मेका थियौं। नेपालको बौध चैत्य बनाउने समयमा तिम्रो छोरी लाच्याम पेमा एउटा मौरीको जन्म लिएको थियो। राजा तपाईको घिच्रोमा मौरीले चिल्दा अनजानमा तपाईका हातले मौरी मारी दियो। आज त्यो मौरीको प्राण हत्या गरेको ऋण चाहिँ तिम्रो छोरी भएर जन्म्यो अनि ऋण सकेपछि मृत्यु

भएको हो। राजा तपाई स्वयं मञ्जुश्रीको अवतार भएपनि कर्मको फल भोग्नु पर्छ भने झन अरू साधरण प्राणीको त के कुरा ?" यसरी पूर्वजन्मको शत्रु आफ्नो ऋण उठाउन आफ्नो छोरा छोरी भएर जन्मन्छ। आफ्नो छोरा छोरी भनेर असाध्य माया गर्छ। छोरा छोरीलाई दुःख विमार हुँदा, दुःख पाउँदा आफूले दुःख पाएको भन्दा ज्यादा दुःखी हुन्छ। यस्तो भएको कारण पूर्वजन्ममा एकले अर्कोलाई नोक्सान गरेको चिनो हो। अहिले आफ्नो छोरा छोरी इष्टमित्र र सबैले आफ्नो शत्रु भन्दा पनि नराम्रो गर्ने पनि छ। छोरा छोरीले बाबु आमालाई दुःख दिएर वृद्ध अवस्थामा धेरै कष्ट दिने पनि छ। यसरी इष्टमित्र शत्रु भएर जन्मने पनि सत्य र नित्य होइन। इष्टमित्र पनि नित्य र सत्य होइन। यसरी इष्टमित्र र शत्रु भनेर मतभेद गरी राम्रो र नराम्रो गर्ने त कुकर्म सञ्चय गर्नु मात्र हो। यस्तो प्रकारको भूत, वर्तमान र भविष्य जन्म सम्वन्धि गन्ती गरेर साध्य छैन। यस प्रकारले विवेक र विचार गर्दा शत्रु र इष्टमित्रमा के मतभेद छ र ? सर्व प्राणी आफ्नो आमा बाबु इष्टमित्र नभएको कुनै पनि छैन। कुनै न कुनै पूर्वजन्ममा आमा बाबु भएको नै हुन्छ। भगवान् बुद्ध यसो भन्नु हुन्छ - "यो पृथिवीको माटो मुछेर एकपट्टि राख्यो अनि सानो तोरीको दाना जत्रो गोली बनाउँदै पूर्वजन्मको आमा बाबु भएको गन्ती गर्दा यो पृथिवीको माटो सबै सकिन्छ तर आमा बाबुको गन्ती सकिँदैन्।" यसकारण शत्रु र इष्टमित्र सबैलाई आफ्नो माता पिता सम्झी वहाँहरूले हामीलाई गुण गरेको छ भनी सर्व प्राणीलाई बराबर रूपले दया, माया र करूणा र मैत्री गर्नु पर्छ। यस्तो प्रकारले उपेक्षाको ध्यान गर्नु पर्छ, जबसम्म सबै प्राणीमाथि महाकरूणा उत्पत्ति हुँदैन तबसम्म ध्यान गर्नु पर्छ।

**आमा चिन्नु पर्ने विषय —**

सर्व प्राणीहरू र बन्धु बान्धवहरूको सम्बन्ध कस्तो छ त्यसको विषयमा भगवान बुद्धले यसो भन्नु भएको छ "सर्व प्राणी हाम्रो पूर्वजन्मका माता हुन।" वहाँको अभिज्ञानले कल्प कल्प भूतकालको स्मरण गर्ने शक्ति छ कल्प-कल्पपछि भविष्यको जन्म जान्ने र बुझ्ने शक्ति छ। यस्तो शक्ति बुद्धज्ञान पाएर मात्र प्राप्त हुन्छ। यस्तो प्रकारको अभिज्ञानले वहाँले सबै कुरो जान्नुहुन्छ अनि सर्व प्राणीहरू पनि पूर्वजन्मको आमा रहेछ भनी जान्नु भएको हो। आफ्नो या हाम्रो पूर्वजन्ममा प्राणी भएर जन्म लिएको गन्ती गरेर सम्भव छैन। यी त्रिलोकमा कुनै पनि यस्तो जग्गा छैन जहाँ आफू नजन्मेको होस्। यस्तो जन्म अवर्णनीय छ। आकाशले जति व्यप्त गरेको प्राणी छ सबै एक एक गरेर पूर्वजन्ममा आमा भएको छ। कुनै पनि प्राणी छैन हाम्रो आमा नभएको अझ बढ़ी दुइपल्ट, तीनपल्ट, अनेकपल्ट पूर्वजन्ममा आमा भएको पाईन्छ। यसरी आमा भएर जन्मको गन्ती गरेर सम्भव छैन। ८

**आमाको गुण स्मृति वा सम्झिने विषय - ८**

आफ्नै जन्मको बेला विचार गरे यही जीवनमा आमाले कति गुण गरेको छ। आमाको गुण अवर्णनीय छ। प्रथम आमाले दश महीना गर्भमा बोकी कति दुःख गरिन होली। आफ्नो प्राण भन्दा पनि ज्यादा माया गर्नु भयो गर्भमा छँदै। गर्भ अवस्थामा आमाले कति दुःख कष्ट सहनु पऱ्यो होला, गर्भमा भएको नानी मर्छ कि भनी कति काम कुरोमा जोगाउँथी होली, आफू हिँड़दा पनि कति असुविस्ता भएर हिड़नु पऱ्यो होला, फेरि लड़छ कि भन्ने डर बोक्दै कति जोगिएर हिँड़िन होली, गर्भ अवस्थाको दुःख आमा आफैलाई मात्र थाहा हुन्छ अनि बुद्धलाई। नानी जन्मिने समयमा पनि आमाले एक पाइला त

यमलोकमा टेकिसकेकी हुन्छिन् । जीवन र मृत्युको संघर्ष गरी नानीलाई जन्म दिन्छिन् । कति आमा यस्तै नानीलाई जन्मदिँदा प्राण त्याग्ने गर्छिन् । नानीलाई आफ्नो शरीरको ताप दिएर छातीको दुध दिएर नरम नरम पोशाक लगाई दिएर, गर्मी र ठण्डा दुवैबाट बचाएर अतुलनीय माया र स्नेह दिएर पालन पोषण गर्छिन् । रातमा सुत्दा पनि आमा राम्रोसंग सुत्न सक्दिनन् कारण नानीलाई कुल्च्यो कि चेप्टायो कि भनि झसङ झसङ हुँदै नानीको रक्षा गर्छिन् । भोक पो लाग्यो कि, तिर्खा पो लाग्यो कि, पिसाब पो गर्‍यो कि, टट्टी पो गर्‍यो कि यस्तो प्रकारको विचार गरेर सुत्दा राम्रो गरी सुत्न पनि पाउँदिनन् । आफुले नखाई नखाई नानीलाई मिठो मिठो खाना दिन्छिन् । आफ्नो मुखभित्रको खाना पनि निकालेर नानीलाई दिन्छिन् । नानी रूँदा पनि आमाले हत्तार हत्तार हेर्न पुग्छिन् । बालक अवस्थामा मरेको भनौं सास मात्र छ, जिउँदो भनौं टाउको पनि उठाउन सक्दैन । मासुको ढल्ला जस्तो केही भन्नु पनि नसक्ने, जे जसो भए पनि रूनु मात्र जान्ने यसरी आमाले नानीको के कस्तो दुःख विमार भोक तिर्खा तातो-चिसो आफैले बुझेर बालक नानीलाई स्याहर सुसार गर्छिन् । टट्टी, पिसाब, सिङान आफ्नो हातले नघिनाई सफा गर्छिन् । कति त आमाको मुखमा पर्छ तरै पनि माया गरेर आँखा झिम्म पनि नगरी हेरी बस्छिन् । नानी विमार हुँदा आमाको मनमा यस्तो लाग्छ नानी विमार नहोस वरू म आफै विमार होस् कारण नानी विमार भए केही भन्नु सक्दैन के दुःख के विमार भयो यसकारण आमाको मनमा यस्तो विचार हुन्छ । फेरि नानी विमार भए आफु विमार भएको भन्दा पनि ज्यादा पीर र कष्ट आमाले सहने गर्छिन् । नानी अलिक ठूलो भएर बामे सर्ने भएपछि फेरि अर्को दुःख हुन्छ । यसरी बामे सर्दा कत्तै लड़ी पो जान्छ, आगोमा पो पर्छ कि,

पानीमा पो डुब्छ कि भन्ने सुर्ता आमाले भोग्नु पर्छ। नानी हिँड्ने भए पछि कतै लड्छ कि भन्ने डर आमाले भोग्न पर्छ। आमा कतै टाड़ो गए या बजार सौदामा गएं आमाको मन नानीमाथि नै हुन्छ। घरमा नानीले के पो गऱ्यो कि, लड्यो कि, चोट पटक लाग्यो कि यस्तो प्रकारको सोचाइ आमाको मनमा भइरहन्छ। जबसम्म आफ्नो आँखाले देख्दिनन् तबसम्म मनमा झुक् झुक् हुन्छ। आफ्नो आँखाको सामु भए मात्र संतोष हुने आमाको मन। नानीले जति दुःख दिए पनि, नराम्रो काम गरे पनि, जति काम बिगारे पनि, जति सताए पनि नानीप्रति माया र स्नेह नै गर्छिन्। आमा बाबुले आफ्नो नानीको लागि धन सम्पत्ति जम्मा गरिदिन्छन्। धन सम्पत्ति जम्मा गर्नका निम्ति कति पाप गर्नुपर्छ, अरूलाई नराम्रो बचन गरेर झुट बोलेर, आफूले नखाई नखाई आफ्नो शरीरले नोक्सान भोगेर, आफ्नो नानीको सुख र आरामको निम्ति सब थोक गर्छन्। यसरी जम्मा गरेर आफ्नो नानीहरूलाई जे जसो चाहिन्छ इच्छा पुरा गरिदिन्छन्। अरूलाई नदिइकन सर्द सम्पत्ति आफ्नो नानीलाई दिन्छन्। यस्तो गुण तौलेर तौलिसक्दैन, गुण तिरेर तिरिसक्दैन। यस्तो अवर्णनीय गुण गर्नु भएको छ। आफ्नो आमाको गुणको स्मृति र सम्झना गर्नुपर्छ। आमाको गुणको हामी सबै ऋणी छौं। आमा र बाबुले यति मात्र होइन धेरै गुण गर्नु भएको छ। खाना खानु, बामे सर्नु, हिँड्नु सबै नै आफ्नो आमाले सिकाउँछिन्। बामे सर्नुदेखि लिएर हातमा समातेर हिड्नु सिकाउँछिन्, टट्टी गर्नु, लुगा लगाउनु, राम्रो राम्रो वाणी, आमा-बाबा भन्नु, क, ख देखि बोल्नु सबै नै आमाले नै सिकाउँछिन्, यो राम्रो हो त्यो नराम्रो भनि सबै आमाले नै चिनाउँछिन्। यी सब कुराहरू आफैले विचार गरे आमाको गुण कतिको रहेछ भनि जान्न सकिन्छ। ☺

**आमाको गुण तिर्ने विषय -**

यस संसारमा आमाले जस्तो गुण कसैले पनि गरेको हुँदैन, आमाको गुण माथि बताए अनुसार अचिन्तनीय छ। यस्तो गुण गर्ने आमाले दुःखको इच्छा कसरी गर्नु सक्छिन्, सर्व प्राणीहरूले सुख पाउने इच्छा गर्छिन्, कसैले पनि दुःख पाउने इच्छा गर्दिनन्। यसरी दुःख त्याग्ने इच्छा गर्छिन् अनि सुख पाउने चेष्टा गर्छिन्। सुख पाउने इच्छा गर्छिन् तर सुख पाउने विऊ र कारण रोप्न जान्दिनन्, दुःख त्याग्ने इच्छा गर्छिन् तर दुःखको विऊ र कारण नराम्रो अकुशल कर्म छोड्न जान्दैनन्। गोरू गाड़ी भैं गोरूले आफ्नो घिच्रोमा बाँधेको डोरी अनि आफ्नो पछि चाँहि गाड़ीमा भाड़ी हालेको हुन्छ, त्यो दुःखको भाड़ी कति त्याग्ने कोशिश गरेर हिँड्छ तर आफुसँग सँगै आउँछ त्यस्तै नै सर्व प्राणीहरूले दुःख त्याग्ने इच्छा गर्छ तर यसको कारण नराम्रो कर्म चाहिँ त्याग्नु जान्दैन। सुख प्राप्तिको इच्छा गर्छ सुख पाउनेको विऊ कुशल कर्म गर्नु जान्दैन। यसरी ने हाम्रो गुणकारी आमाहरू सबैलाई नराम्रो क्लेशको साङलीले बाँधेको कारणले यो दुःखको भव सागरबाट मुक्ति हुन सक्दैनन्। क्लेशको वशमा परेको कारणले दुःखको भव सगरमा परेको छ। यो दुःखको सागरमा परेको गुणकारी मातासमान प्राणीहरू संसारको भेलबाट छुटकारा दिलाउन नसके लाज शरमको कुरो हो। यसकारण सर्व प्राणी हाम्रो आमा हुन भनी मुक्तिको लागि चेष्ट गर्नुपर्छ।

**मैत्री र प्रेमको भावना गर्ने विषय -**सर्व प्राणी हाम्रा पूर्वजन्मका माता पिता हुन्। पूर्वजन्ममा माता पिता भएको बेला हामीलाई कति गुण गरेका थिए त्यो त हामी सबैलाई थाहा हुनपर्ने कुरो हो। यी माता पितासमान प्राणीहरू सबैले सुख पाउने आशा गर्छन्, चेष्टा गर्छन्,

दुःख त्याग्ने कोशिश गर्छन्, इच्छा गर्छन। तर सुख त पाउँदैनन् दुःख मात्र पाउँछन्। यसरी दुःख पाएको कारण हामी दश अकुशल कर्म गरेर मनोरञ्जनमा भुलेकोले हो। यी मनोरञ्जन त क्षणिक हो। यो सुख जस्तो मात्र हो, यो सुखपछि दुःख लुकेको छ। ढुंगा पनि ओरालो लड़ेर जाँदा कुनै ठोष बलको जरूरत पर्दैन। जति पनि मनोरञ्जन गर्ने वा गराउने वस्तु छ ती सबै ओरालो लागेको ढुंगा झैं हो। मनोरञ्जन गर्दा आनन्द र सुखको अनुभव हुन्छ। मनोरञ्जन र मौजमजा गराउंने वा गर्ने सबै नराम्रो असमाजिक तत्व मात्र हुन्छ जस्तै मद मदिरा, जुवा तास, वेश्याबाजी गरेर मात्र मनोरञ्जनको आनन्द भोग गर्नेछ। यी सब कुकर्म हुन्। यो कुकर्म चाहिँ बिऊ हुनेछ फल चाहिँ दुःख। यस्तो प्रकारको मनोञ्जनमा चासो र आदत भएपछि त्यहाँबाट निस्कनु कठिन पर्नेछ। खाली बाल्टी कुवाँमा झार्दा त सजिलैसंग झर्छ तर त्यसलाई पानी भरेर होस् या खाली नै होस् फेरि माथि अघिको ठाउँमा ल्याउन निकै बल लगाएर ताने मात्र सक्छ, ढुंगा पनि त्यस्तै हो। ढुंगा लड़ेर जाँदा त सजिलोसंग तलतिर लड़ेर जान्छ तर माथि ल्याउन परे कतिको कठिन पर्छ त्यो त आफैले विचार गर्नु पर्छ। यसरी कुनै पनि मनोरञ्जनको आनन्द र सुखमा खुट्टा चिप्ले सजिलैसंग कुकर्मको शिकार बन्नु पर्दछ। त्यहाँबाट निस्कनु निकै कठिन पर्छ। दश प्रतिशत मात्र सफल हुन सक्ला। यस्तो अज्ञानतामा परेको कारणले दश अकुशल कर्म गर्छ अनि फल चाहिँ कहिले निस्कनु नसक्ने दुःखको सागरमा पर्छ। यसरी जन्म जन्मदेखि अज्ञानतामा परेर अहिलेसम्म दुःखको सागरमा डुबेर बस्नु परेको छ। यस्तो सर्व प्राणीहरूले सुख पाउन् भनी मैत्री र प्रेम गर्नुपर्छ। कस्तो प्रकारको मैत्री र प्रेम भने सानु नानीलाई आमाले माया र दया गरेको प्रेम जस्तो गर्नुपर्छ। सानु नानीहरू आफ्नो आमाले

भनेको बात र आज्ञा नसुनी बदमास गर्छन्, टेर्दैनन् असाध्य सताउँछन्, नगर भन्ने काम गर्छन् नजानु भन्ने जग्गामा जान्छन्, चिज नखानु भने अटेरि गरेर खाने, अराएको काम नगर्ने यस्तो प्रकारले नानीहरू आमा र बाबुलाई सताउँछन् तरै पनि आमा र बाबुले अझ ज्यादा माया गर्छन्। अझ त्यो छोरालाई खुशी बनाउने र सुख दिनुको निम्ति शरीर, वचन र मनले कोशिश गर्छन्। आफ्नो छोरो धेरै मध्ये कुनै एक बदमास भए, अरू सिधा साधरण स्वभावको भए, आफ्नो आमा र बाबुले त्यो बदमास छोरालाई माया ज्यादा गर्छ। कारण अरूहरू माथि केहि सुर्ता गर्नु पर्दैन। तर जुन छोरा नराम्रो विग्रेको बदमास छ त्यो छोरामाथि असाध्य दया, माया र मैत्री हुन्छ कारण यसरी बदमास गरे त्यस छोराले दुःख पाउँछ भन्ने विचारले अत्यन्त मैत्री र दया गर्छन्। अरू छोराहरू सोझा भएको कारणले उनीहरूले सुख पाउँछन् भन्ने आशा हुन्छ। यस्तै प्रकारले अरू प्राणीहरूले आफुलाई नराम्रो गरे तापनि, कुव्यवाहार गरे पनि आफूले नोक्सान खप्नु परे पनि, आफूले राम्रो गर्दा कुदृष्टिले हेरे पनि, जस्तै नराम्रो गरे पनि यी प्राणीहरू सबै हाम्रा पूर्वजन्मका आमा बाबु हुन्, पूर्वजन्ममा आमा बाबु भएर अत्यन्त गुण गरेका छन् भनी विचार गरेर, सम्झेर उनीहरूप्रति कुशल भावना राखी ती प्राणी सबैले सुख पाउन् भनी प्रार्थना गर्नुपर्छ अनि सुख दिने चेष्टा गर्नुपर्छ। आफूले सुख पाउँदा खुशी भए जस्तै सुख सर्व प्राणीहरूले पाउन् भनी प्रार्थना गर्नुपर्छ। दुःख र कष्ट इच्छा गर्ने त कोही पनि छैन सबैले सुख र आनन्द पाउने इच्छा गर्छ तर सुख पाउने विऊ कुशल कर्म र कुशल पूण्य गर्दैनन्। c

सुत्र पिटकमा पनि यस्तो उल्लेख छ – "शरीरले पनि मैत्री र प्रेम

गर्ने कर्म गर्नू । वचनले पनि मैत्री र प्रेम गर्ने कर्म गर्नू । मनले पनि मैत्री र प्रेम गर्ने कर्म गर्नू ।" बोधि चार्यावतारमा यस्तो लेखिएको छ - "सर्व प्राणीलाई हेर्दा पनि दया मैत्री र प्रेमको भावनाले हेर्नू । अलिकति पनि नराम्रो भावनाले हेर्नु हुँदैन । सानु केशसम्म पनि उखालिदिने दुःख दिनु हुँदैन । बोधिचित्त उत्पन्न नभएसम्म अरू प्राणीलाई आन्तरिक हृदयबाट फायदा गर्ने र सुख दिने इच्छा गर्नुपर्छ । जन्म जन्मसम्म प्राणीलाई सानु दुःख पनि दिनु नपरोस्, फायदा गर्नु पावस्, भनी प्रार्थना गर्नुपर्छ । विशेष गरी पशु अनि नोकर चाकर, घरको ढोकामा आउने कुकुरसम्मलाई पनि माया, मैत्री र दया गर्नुपर्छ । सधैँ नै यस्तो प्रकारको आचरण गर्नु पर्छ । यसरी ढोकाको कुकुर र नोकर-चाकर भएर जन्मेको पूर्वजन्ममा आफ्नो अधिकार हुँदा अरू प्राणीहरूलाई दुःख दिएको र खिसी गरेको कारणले अहिले कुकुर र नोकर भएर जन्मनु परेको हो । यसरी पूर्वजन्मको कर्मको फल भोग्नुपर्छ । पूर्वजन्मको ऋण तिर्नु पर्छ । ऋण नतिरी धरै छैन । यसकारण अहिले आफ्नोमा धन सम्पत्ति हुँदा, अधिकार हुँदा अरूलाई नराम्रो गरे, घृणा गरे, खिसी छिः छिः दूर दूर गरे, दुःख दिए यसको फल पछिल्लो जन्ममा आफूले ऋण तिर्न पर्छ । यसरी नै नोकर चाकर भएर, कुकुर भएर अरूले आफुलाई छिः छिः दूर दूर गरी भोग्नु पर्छ । यसकारण आफू भन्दा पनि ज्यादा मैत्री, प्रेम र दया गर्नु पर्छ । आफूलाई जन्म दिने माता पिता र धेरै दिनदेखि विमार भएको रोगीलाई शरीर, वचन र मनले राम्रो गरे, फायदा गरे, खुशी बनाए, सुख दिए त्यसको फल अचिन्तनीय पाउनेछ। "ज्यो जेल्हा" भन्ने महापुरूषले यसो भन्नु भएको छ - "टाढ़ोको पाहुना, धेरै दिनको विमारी, माता पिता र वृद्ध मानिसहरूलाई माया, मैत्री, दया र प्रेम गरे शून्य मैत्री ध्यान गरेको बराबर फल पाइन्छ ।" भगवान बुद्धले

पनि आफ्नो माता मायादेवीका गुणको ऋण तिर्न तेत्तीसकोठी देवलोकमा धर्म सुनाउनु जानु भयो। आफ्नो आमा र बाबुलाई काँधमा बोकेर यो पृथिवी तीन चक्कर लगाए पनि आमा र बाबुको ऋण तिर्न सक्दैन तर आफ्नो आमा र बाबुलाई यो भवसागरको दुःखबाट छुटकारा पाउन सक्ने धर्ममा लगाउन सके मात्र ऋण तिर्न सक्नेछ। गुरु रिम्पोछेले पनि भन्नु भएको छ - "बृद्ध मानिस, लाचार मानिसको सेवा गर्नू माया र दया गर्नू।" चराले आफ्नो बच्चालाई हुर्काउँदा प्रथम नरम गुँड़ बनाउँछ, त्यसपछि आफ्नो शरीरको प्वाँख र पखेटाले छोपेर राख्छ, तातो गरी राख्छ, अत्यन्त माया र प्रेम गरेर मुखको खाना पनि निकालेर दिन्छ, जबसम्म उडेर जानु सक्दैन तबसम्म माया र प्रेम गर्छ। त्यस्तै गरी सर्व प्राणीलाई प्रेम, मैत्री र दया गर्नुपर्छ। सर्व प्राणीले सुख पाउन् भनी प्रार्थना गर्नुपर्छ।

**करूणा र दयाको भावाना गर्ने विषय :-**

दुःखवाट चाँड़ै मुक्ति पाउने उपाय गर्नुपर्छ। आमासमानका सर्वप्राणीहरू अज्ञानतामा परेर आफ्नो इष्टमित्रलाई पानी उम्लेको जस्तो माया गर्छ, शत्रुलाई आगो बलेको जस्तो रिस गर्छ। शत्रुलाई बसमा गर्नका निम्ति कस्तो कस्तो कुकर्म गर्नुपर्छ। इष्टमित्रलाई राम्रो गर्नुको लागि पनि कति छल कपट झूट बोल्नु पर्छ, यो सब कुकर्म पापको विऊ हो। यही कुकर्मगरेको कारणले दुःख भोग्नु परेको हो। जन्म जन्मान्तरदेखि पछिल्ला जन्म जन्मसम्म दुःख भोग्नु पर्छ। विऊ चाहिँ कुकर्म, पाप हो। फल चाहिँ दुःख हो। यस्तो पाप कर्मको विऊ नाश भएर जावस् भन्ने प्रार्थना गर्नुपर्छ।।

**महाकरूणा ज्ञान गर्ने विषय :-**

यसरी दुःखमा परेको प्राणी आफू हो जस्तै भनेर भावना गर्नु पर्छ। कुनै एउटा कैदीलाई फाँसी दिन लाँदा त्यो कैदी जेलखानादेखि फाँसी दिने ठाउँसम्म जाँदा, एक एक पाईला हिँड्दा, क्षण क्षण गर्दै मृत्यु नगीच हुँदै जाँदा त्यस कैदीको मनमा कतिको डर र दुःख हुन्छ, यस्तो दुःख आफू कैदी भए कतिको भय र दुःख हुने थियो भन्ने भावना गर्नु पर्छ। कसाईले भेड़ाबाखा मार्नु लाँदा ती प्राणीहरूलाई कति भय र दुःख हुँदो होला यसरी मार्न लगेको पशु र आफ्नो आमा हो भनी सम्झनु पर्छ। यसरी आफ्नो आमालाई मार्नु लगेको भावना गर्नु पर्छ, जुनै पशु भए पनि पशुको जीवन होइन आफ्नो आमा हो भनेर सम्झनु पर्छ। यसरी कसाईले मेरी बूड़ी आमाको केही कसुर पनि नगरी, कुनै दोष पनि गरेको छैन तरै पनि विना कसुर यसरी मार्नु लाँदैछ अब के गर्ने ? यसरी मार्न लाँदा मेरी बूड़ी आमालाई कतिको भय र दुःख हुँदैछ भनी आन्तरिक हृदयबाट भावना गर्नुपर्छ। अब मेरी बूढ़ी आमालाई कसाईको हातबाट कसरी मुक्ति दिनु भनी करूणा र कृपा घड़ी घड़ी उत्पत्ति नभएसम्म ध्यान गर्नु पर्छ। यसरी मार्न लगेको पशु भेड़ा, बाख्रा, गाई, गोरू आदि मृत्युको दुःख भोग्ने प्राणीहरू अहिलेको माता नभए पनि पूर्वजन्मको माता हुन्। पूर्वजन्ममा माता पिता भएर ठूलो गुण गरेका छन् अनि अहिलेको जन्मको आमा र पूर्व जन्मको आमामा के फरक छ र ? यस्तो असह्य दुःख भएको प्राणीमाथि करूणा र कृपा राख्नु पर्छ। यस्तो महादुःखबाट यी प्राणीहरू मुक्त भए कति राम्रो हुने थियो। छिटो भन्दा छिटो मुक्ति पाए कति असल हुन्थ्यो भनि महाकरूणा र दया गर्नुपर्छ। यतिसम्म करूणाको भावना गर्नुपर्छ कि प्राणीको दुःख

र आफ्नो दुःख बराबर भएको जस्तो आँखाबाट महाकरूणाको आँसु ननिस्केसम्म ध्यान गर्नुपर्छ। यस्तो दुःखमा पेरका पशु प्राणी पूर्वजन्ममा कुकर्म गरेको फल हो। अहिले यस्तो कुकर्म गर्नेहरू पनि पछि यस्तै प्रकारको दुःख भोग्नु पर्छ, त्यसकारण यस्तो पाप कर्म गर्नेलाई पनि करूणा र दया गर्नुपर्छ। कसाईले मार्न लगेको पशुलाई जस्तै भेड़ा, बाख्रा, कुखु रा, गाई, गोरू आदि आफु हो भनी ध्यान गर्नु पर्छ। आफूलाई कसाईले मार्नु लाँदा कतिको भय र दुःख हुन्छ त्यो त जसलाई पर्छ उसलाई मात्र थाहा हुन्छ। यसरी मार्न लाँदा भाग्नु पनि सक्दैन, लुक्ने जग्गा पनि हुँदैन, बचाउने पनि कोही हुँदैन, भागेर जाने ठाउँ पनि छैन, उड़नु पनि सक्दैन, कुनै बलले पनि सक्दैन। अब केहीक्षणमा नै यो प्राण त्याग्नु पर्नेछ। आफूले माया गर्ने शरीर पनि त्यसै छोड़ेर जानुपर्छ। यस्तो प्रकारले अरूको दुःख आफूले लिएर आफैलाई पनि आएको सम्झी ध्यान गर्नुपर्छ। जति पनि दुःखमा परेका प्राणीहरू आफू हो भनी ध्यान गरेर ती प्राणीमाथि करूणा र दया राख्नुपर्छ। आकाशले जहाँसम्म ढाकेको छ त्यति नै दुःखमा परेका प्राणीहरू छन्। प्राणीहरू जति छन् ती सबै कुकर्ममा लाग्ने मात्र छन् अनि दुःखले व्याप्त छन्। यस्तो कुकर्म गर्ने र दुःख भोग्ने प्राणीहरूमाथि महाकरूणा, कृपा र दया गर्नुपर्छ। यी छ लोकका प्राणीहरू सबै दुःखबाट मुक्ति भएर बुद्धज्ञान छिट्टै प्राप्त होस भनी महाकरूणा र दयाको ध्यान गर्नुपर्छ। यसरी करूणा नगरेर अरू पशु प्राणीहरूको हत्या गर्ने, दुःख दिनेहरूले आफ्नो शरीर र प्राणलाई हेर्नू आफूलाई सानु काँड़ाले घोचेको दुःख त सहनु सक्दैन, एउटा केश उखाल्दा त आत्थात्था भनेर भन्छ, आफूले यस्तो सानु दुःख त भोग्नु सक्दैन भने अरू प्राणीको प्राणसम्म लिँदा करूणा, दया र माया उत्पत्ति हुँदैन ? बज्रायानामा त

प्रसाद चढ़ाउँदा पशु प्राणीको मासु चढाउनु पर्छ भनी लेखिएको छ भनेर प्राणीको हत्या गर्नु हुँदैन। मासु प्रसादमा चढाउनु पर्ने कुरा त हो तर प्राणी हत्या गरेको होइन। आफ्नो कालले मरेको पशु प्राणीको मासु शुद्ध प्रसाद हो अनि आफ्नो कालले मरेको मात्र चढाउनु पर्छ भनी लेखिएको छ। ८

आचार्य शान्तदेवले यसो भन्नु भएको छ – "कुनै मान्छेको शरीरमा आगो लागेर जल्दै मरेको समयमा मिठो मिठो आफ्नो इच्छाको खाना दिए उसको मन कहिले खुशी हुन्छ र ? हुँदैन त्यस्तै नै प्राणीहरूलाई दुःख दिई काटमार गरे महाकरूणा भएको भगवान् कहाँ खुशी हुन्छन् र ?" ८

धर्म सम्यक संग्रह सुत्रमा यस्तो बताएको छ – "बुद्धज्ञान प्राप्त गर्ने इच्छा गर्नेहरूले धेरै धर्म गर्नु पर्दैन, एउटै धर्म भए बुद्धज्ञान प्राप्त हुन्छ, त्यो के हो भने करूणा हो। दया र करूणा भएको व्यक्तिको निम्ति बुद्धको सर्वधर्म आफ्नो हत्केला भएको बराबर हो। पाप काटने सबै भन्दा ठूलो हतियार करूणा र दया मात्र हो। आर्य असङ्गले बाह्र वर्षसम्म तप गरेर बस्दा पनि ज्ञानबोध भएन। तर एउटा कुकुरमाथि महाकरूणा र दया उत्पति भएको कारणले सर्व पाप पखालिएर मैत्री बुद्धको दर्शन भयो। यसकारण सर्व धर्मको मूल करूणा हो। सर्व प्राणी यस संसारबाट मुक्ति भएर चाँढै बुद्धज्ञान बोध भएर महासुख पावस भनी ध्यान गर्नुपर्छ। आफ्नो आमालाई राजदण्ड लागेर जिउँदै जलाउने मृत्यु दण्ड भोग्न परे हामी छोराको मनमा असाध्य दुःख भोग्नु पर्छ, दिनको भोक र रातको निद्रा सबै एक नाश भएर अत्यन्त दुःख र कष्ट हुनेछ। यस्तो मृत्युदण्डबाट बचाउने उपाय गरे जस्तो,

सर्व प्राणी आमा हो यी प्राणीहरूको कुकर्मको कारणले अहिले यस्तो दुःख कष्ट सहनु पर्ने, आगोको चूलाभित्र जलेर अत्यन्त दुःख भोग्नुबाट बचाउने कोशिश र चेष्टा गर्ने करूणाको ध्यान गर्नुपर्छ। सर्व प्राणीहरूले दुर्गतिको दुःख भोगेको सम्झी यी प्राणीहरूले दुःख पाएको र आफ्नो आमाले दुःख पाएको बराबर सम्झी ध्यान गर्नुपर्छ जबसम्म महा करूणा उत्पति भएर आँखाबाट करूणा र दयाको आँसु झर्दैन तबसम्म ध्यान गर्नुपर्छ। आफूलाई नराम्रो गरे तापनि अरू प्राणीहरूले कुकर्म पाप गरेको देखे यसरी कुकर्म गरे अब नरकमा जन्म लिनेछ अनि महादुःखमा पर्नेछ भनी उनीहरूमाथि करूणाको भावना राखी दुःखमा नपरोस भनी कामना गर्नुपर्छ। बुद्ध धर्मको मूल सिद्धान्त महाकरूणा हो। करूणा नभए बाहिरी धर्म हुनेछ, बुद्धिष्ट हुने छैन। यसकारण दया, मैत्री र करूणाको नित्य धारा बग्ने र बगाउने अभ्यास गर्नुपर्छ॥

**उच्च विचारको करूणा विषय :-**

एउटा मात्र छोरा भएको पनि मृत्यु भए आमाको चित्त कति दुःखी हुन्छ ? आफ्नो प्राण भन्दा पनि प्यारो एउटै छोरा पनि यसरी मरेर जाँदा कतिको पीड़ा हुन्छ त्यो त अन्दाज पनि गर्नु सक्दैन। सर्व प्राणीको यस्तै प्रकारको दुःख कष्ट र पीड़ा हुन्छ। यी प्राणीहरूको दुःख आफूलाई आइलागोस्। अरू प्राणीहरूले सुख पाउन् भनी चित्ताउनु पर्छ। पाप काटने हतियार जस्तो करूणा भन्दा तिंखो र ठूलो धर्म अरू कुनै छैन॥

उहिले भारतवर्षमा तीनपल्ट बुद्ध धर्मलाई नष्ट गरिएको थियो। यसरी नष्ट भएर नजावस भन्ने विचार भएकी "सल्चे छुल ठिम"

नामक एउटी बौद्ध भिक्षुनी थिए। ती भिक्षुनीको मनमा यस्तो विचार उत्पन्न भएछ कि म स्त्री भएको कारणले बुद्ध धर्म फैलाउनु सक्दिनँ। अब म यो भिक्षुनीको शील छाड़ेर विवाह गर्छु अनि छोरालाई धर्ममा लगाएर बौद्ध धर्मको रक्षा गर्नु लाउँछु, फैलाउनु पनि लाउँछु। यस्तो उत्तम विचार गरेर तिनी प्रथम एक राजघरानाको पुरूषसंग विवाह गरे र आर्य असङ्ग जन्म्यो। फेरि अर्को ब्रह्मणसंग विवाह गरे, बसु बन्धु जन्म्यो। यी दुइ छोराहरू जवान भए अनि तिनीहरूले आमालाई सोध्यो कि हाम्रो बाबुको के काम हो अब हामी काम गर्छौं भनी भन्दा आमाले भन्यो "तिमीहरू दुईलाई बाबुको काम गर्नु भनेर जन्म दिएको होइन। बुद्ध धर्मको शासन रक्षा गर्नुको लागि जन्म दिएको हो। यस्तो प्रकारको आज्ञा भई बसु बान्धु अभिधर्म कोष अध्ययन गर्नु गुरुकहाँ गए। आर्य असङ्ग चाँहि "रि वो ज्या कङ" भन्ने पवित्र पर्वतमा गएर मैत्री बुद्धको ध्यान गर्नु जानु भयो। त्यहाँ तिनले छ वर्ष तप गरेर बस्दा सपनासम्म पनि राम्रो नदेखेर निराश भएर फर्के। यसरी निराश भएर फर्किँदा बाटोमा तिनले एउटा मान्छेले फलामको झ्यामपल (गैति) एउटा लुगाले पुछदै गरेको देखे। यसरी फलाम पुछेको देख्दा तिनले सोधे "के गरेको" भनी। त्यस मान्छेले यसो भनेर जवाब दियो "मेरोमा सियो छैन र यो फलाम लुगाले पुछदा पुछदा खिएर सियो हुन्छ त्यसकारणले मैले यो फलामको गैति पुछेको हो।" यस्तो अचम्भको कुरो सुनेर तिनी छक्कै परे। कहिले फलाम लुगाले पुछेर सियो हुन्छ ? त्यो मान्छे मरेर जान्छ तर त्यो फलाम सियो हुन सक्दैन। गृहस्थीहरू यस्तो अर्थहीन कार्यमा लागेर जीवन व्यत्तित गरेको देख्दा वहाँको मनमा यस्तो लागेछ म त धर्मको लागि पो यस्तो कष्ट गर्नु पर्छ मानिसहरू जीवनभर अर्थहीन कार्यमा लागेर बस्दा मैले त केही दुःख

गरेको पो छुइनँ रहेछु भनी फेरि त्यही पर्वतमा तप गर्नु गए। फेरि तीन वर्ष तप गर्दा पनि अघि झै सपनासम्म पनि राम्रो देखेन रहेछ र फेरि निराश भएर अब मैत्री बुद्धको दर्शन नपाउने रहेछ भनेर फर्किनु भएछ। यसरी फर्किँदा बाटामा एउटा मान्छेले ठूलो पर्वतको फेदमा बसेर एउटा प्वँग्खले पानी छयापदै गरेको देखेछ। यसरी प्वाँख पानीमा डुबाउँदै त्यस पर्वतको फेदमा छ्याप्दो रहेछ। यो दृश्य देखेर वहाँले सोधे – "यो के गरेको ?" त्यस मान्छेले जवाब दियो – "यो पर्वत अग्लो भएर मेरो घरमा कहिले पनि घाम लाग्दैन अनि यो प्वाँखले पानी छयापेर यो पर्वत चाहिँ समतल बनाएको हो। समतल भए मेरो घरमा घाम लाग्नेछ।" यसरी पानी छयापेर कहिले पर्वत समतल हुन्छ ? अचम्भको कुरो हो। अघि झै अर्थहीन कार्य गरेको देख्दा फेरि त्यही पर्वतमा फर्केअनि तपस्या गर्नु लागे। यसरी फेरि तीन वर्ष तप गर्दा पनि सपना घरी पनि राम्रो नदेख्दा अब मैत्री बुद्धको दर्शन नपाउने रहेछ भनेर निराश भएर फर्के। यसरी फर्किँदा बाटोमा एउटा कुकुरनी दुइखुट्टा लङ्ड़े भएको शरीरमा कीरा लागेर कुहेको देखे । त्यो कुकुरनी आफ्नो शरीर कीराले खाईसकेछ तरै पनि रिस अति गर्दै टोक्नलाई भुक्छ। यस्तो दृश्य देख्दा वहाँको मनमा अचिन्तानीय करूणा उत्पन्न भएर आयो। आफ्नो शरीरको मासु पनि काटेर त्यस कुकुरनीलाई दिए अनि ती कीराहरू निकालिदिनु पऱ्यो भनेर अघि बढे। हातले त्यो कीरा निकाली दिऊँ भने कीरा मर्छ भनी जानेर आफ्नो जीब्रोले ती कीरा निकाल्नको निम्ति जीब्रो त्यस कुकरनीको छेऊमा जाँदा त्यो कुहेको पीप, रगत र दुर्गन्ध आएको कारणले आँखा खोलेर जीब्रोले निकाल्न सकेन। फेरि आँखा बन्द गरेर त्यस कुकुरनीको शरीरबाट कीरा निकाल्न भनी लैजाँदा आफ्नो जीब्रो त जमीनमा छुए, यसरी

जमीनमा जीब्राले स्पर्श गर्दा आँखा खोलेर हेर्दा न अघिको कुकुरनी न छैन रहेछ अघिको कुकुरनी भएको ठाउँमा मैत्री बुद्ध पो दर्शन भयो। वहाँले मैत्री बुद्धलाई सोधनु भयो "मैले तपाईंको आराधाना गरेको आज बाह्र वर्ष भयो, अहिलेसम्म तपाईंले मलाई के कारण दर्शन दिनु नभएको हो" ? मैत्री बुद्धले भन्नु भयो "तिमीले जुन दिनदेखि मेरो ध्यान गर्‍यौ त्यही दिनदेखि म तिमीसँग छु, एक दिन पनि, एक क्षण पनि म र तिमी अलग छैनौं। तिमीले नदेखेको कारण तिम्रो पूर्वजन्मको पाप क्लेशहरू भएको कारणले हो, अझै पनि तिम्रो पाप र क्लेशहरू सकेको थिएन, बाह्र वर्ष तप गरेको कारणले धेरै पाप र क्लेशहरू त शुद्ध भईसकेको कारणले तिमीले मलाई यो कुकुरको रूपमा देखेको हो। आज तिमीलाई यो कुकुरमाथि अत्यन्त करूणा उत्पति भएको कारणले तिम्रो पापहरू सबै शुद्ध भएर गयो अनि मेरो दर्शन भएको हो। यो कुरो तिमीलाई विश्वास भएन भने मलाई बोकेर बजार लैजाऊ अनि अरू मानिसहरू सोध मलाई देख्छ कि देख्दैन भनेर। यस्तो कुरा सुनेर आर्य असङ्गले मैत्री बुद्धलाई काँधमा बोकेर लानु भयो। बजारमा भएका मानिसहरूलाई सोधे "मेरो कुममा (काँध) के छ ? भन्दा सबै मानिसले केही पनि छैन भनी जवाब दिए यसरी कसैले पनि मैत्री बुद्धलाई देख्न सकेन। एउटा बूढ़ी बोज्यू संधै ऊँ मणीपद्मेहुँ भन्ने मंत्र जप गर्दा गर्दा वहाँको पाप धेरै शुद्ध भईसकेको रहेछ। आर्य असङ्गले त्यस बूढ़ी बोज्यूलाई मेरो आँधमा के छ भन्दा बुड़ी बज्यूले भन्नु भयो - "हजुरको काँधमा एउटा कुहेको कुकुरको लाश छ"। यसरी त्यस बोज्यूको पाप शुद्ध हुँदै गरेको क़ारणले मैत्री बुद्धलाई कुकुरको लाशको रूपमा दर्शन भयो। अझै सबै पाप शुद्ध भएको भए स्वयं मैत्री बुद्धको दर्शन हुने थियो। यसरी वहाँले बुझ्नु भयो कि जबसम्म सर्व पाप शुद्ध

हुँदैन तबसम्म पवित्र महान आत्मा भगवान् बुद्धहरूको दर्शन नपाउने रहेछ। हामीले नदेखेको मात्र हो वहाँहरू त सर्वव्यापी सर्व प्राणीको उद्धारको निम्ति हामीसंग हुनुहुन्छ। पवित्र शुद्ध आत्मालाई पवित्र शुद्ध आत्मले मात्र देख्न सक्छ। जबसम्म हाम्रो सर्वपाप शुद्ध हुँदैन हामीले बोधिसत्व र बुद्धहरूको दर्शन पाउँदैनौं। वहाँहरू नभएका त होइनन् दर्शन नदिएका पनि होइनन्, वहाँहरू सधैं प्राणीको उपकार गर्न हाम्रा साथमा हुन्छन् हाम्रो अज्ञानता र क्लेशको कारणले नदेखिएको हो। जस्तै एउटा अँध्यारो कोठाभित्र केही देख्न सक्दैन, यसरी हामीले केही नदेख्दा त्यस कोठाभित्र केही छैन भनेर भन्नु पनि सक्दैनौं विवेक र विचार नभएको व्यक्तिले यसो भन्न सक्छ। तर कोठाभित्र केही नभएको त होइन अँध्यारो भएको कारणले नदेखिएको मात्र हो। यदि त्यहाँ बत्ती बालेर हेरे त्यस कोठाभित्र भएको सबै बस्तुहरू देख्न सकिन्छ। त्यो कोठा चाँहि संसार जस्तो हो, कोठाभित्र भएका वस्तु समानहरू भगवान् बुद्धहरू बोधिसत्वहरू प्रकृतिकको स्वभाव हो, अन्धकार क्लेश र अज्ञानता हो। जब क्लेश र अज्ञानता हटेर जान्छ आफैआफ सर्व ज्ञानको दर्शन हुन्छ। जब अन्धकार नै रहेन भने बत्तीको आवश्यकता पनि पर्दैन। यसरी नै क्लेश र अज्ञानता छैन भने ज्ञान प्राप्त गर्नु पर्ने पनि आवश्यकता पर्दैन। भगवान् बुद्ध र बोधिसत्वहरू हाम्रा साथमा नै छन् भन्ने उदाहरण यसरी बुझ्न पर्छ - रेडियोको आवाज र दूरदर्शनको छाया हाम्रा वरिपरि नै हुन्छ तर हामीले देख्न सक्दैनौं। रेडियो स्टेशनबाट समाचार, गाना, भजन अनेक प्रकारका कार्यक्रम प्रसारित गरिरहेका हुन्छ तर हाम्रो कानले सुन्न सक्दैन तर रेडियोको सहायताले हामी सुन्न सक्छौं - हावामा आवाज त आई नै रहेको हुन्छ तरै पनि हामीले सुन्न सक्दैनौ, यसरी नसुन्दा

• हामी सजिलैसंग भन्छौ कि हावामा केही छैन कुनै माध्यम छैन तर विवेक र विचार गर्दा रेडियो बजाउँदा हावामा आवाज त आई नै रहेको छ हामीले पो नसुनेको रहेछौं भनी बुझ्न सक्छौ। त्यसरी नै दूरदर्शन स्टेशनबाट अनेक प्रकारका चलचित्र, खबर, समाचार, खेलकुद आदि प्रकाशित गरी रहेको नै हुन्छ तर हाम्रा साधरण आँखाले जता ततै कहाँ देख्न सक्छ ? फरि हावामा, आकाशमा हाम्रा वरिपरि चलचित्रको छाया नभएको पनि होइन। तर टेलिभिजन को मदतले हामी देख्न सक्छौं। यसरी देख्दा हामी सबैले विचार गर्न सक्छौं कि हाम्रा वरिपरि पनि कुनै नक्सा कुनै चलचित्रको छाया आईरहेको छ, हाम्रा साधरण आँखा भएको कारणले मात्र नदेखेको रहेछ भनि बुझ्छौ। नदेख्दा, नसुन्दा केही छैन भन्नु पनि मूर्खता हो। यसरी नै भगवान् बुद्ध बोधिसत्वहरू हाम्रा सामने हुनुहुन्छ जहिले प्रार्थना गरे, आराधाना गरे वहाँहरू हाम्रा अघि आउनु हुन्छ तर हाम्रा साधरण आँखाले देख्न सक्दैन। हामीले नदेख्दा वहाँहरू छैन भन्नु पनि मूर्खता हो। कमिलाको बात कमिलाले मात्र बुझ्न सक्छ, चराको बोली चराले मात्र बुझ्न सक्छ, त्यसरी ने शुद्ध आत्माको दर्शन पनि शुद्ध आत्माले मात्र हुन्छ। आर्य असङ्ग मैत्री बुद्धको स्थान (गधेन) तुषित देवलोकमा जानु भएर त्यहाँ आर्य असङ्गलाई पञ्च धर्मग्रन्थ दिनु भयो अनि वहाँ संसारमा आउनु भएर महायाना धर्मको प्रचार विख्यात रूपले गर्नु भयो। यसरी पाप काटनु सब भन्दा उत्तम धर्म प्राणीमाथि महाकरूणा र कृपा हो। यसरी बोधिसत्वको असाधरण र धर्म मनमा उत्पन्न हुनको निम्ति करूणाको ध्यान गर्नुपर्छ। प्राणीहरूलाई यस्तो प्रकारको करूणा र माया गर्नुपर्छ कि डुँडे (हात नभएको) आमाको एउटै छोरा पानीले बगाउँदा आमाको मन कस्तो हुन्छ त्यस्तै प्रकारको करूणा गर्नुपर्छ।

एउटै नदी पार गरेर जाँदा एउटै भएको छोरा पनि पानीले बगाएर लाँदा आमा आफैले आफ्नो प्राण भन्दा पनि प्यारो छोरा बचाउनु सक्दैन हात नभएकोले गर्दा। यस्तो अवस्थामा आमाको मन कस्तो हुन्छ होला ? असाध्य दुःख लाग्नेछ महाकरूणा उत्पन्न हुनेछ, यी संसारको सर्व प्राणीहरू एउटै छोरा भए जस्तो आमा आफू भएर, यी प्राणीहरू भवसागरको महादुःखमा परेको छ यी सर्व प्राणीहरूलाई म आफैले त दुःखबाट मुक्ति र पार गर्न सक्दिन कारण आमाको हात नभए जस्तो हाम्रो शक्ति छैन। छोरा बगाएर लैजाँदा जोर जोरले "बचाऊ बचाऊ" भनेर कराउनु ते सक्छ आफैले बचाऊँ भने हात छैन कसरी बचाउन सक्छ ? यसरी कराउँदा कसैले सुने ती मानिसहरू आएर त्यस छोरालाई बचाउन सक्छ। यसरी नै हामीले महा करूणाको चित्त लिएर सर्व प्राणी यो दुःखको सगरबाट मुक्ति होस् भनि बुद्ध र बोधिसत्वहरूलाई प्रार्थना गरे वहाँहरूले दुःखबाट मुक्ति गरी दिनु हुन्छ।

सर्व प्राणीहरूले देवलोकको मुख पाउन् भन्ने भावना गर्नुपर्छ। आफ्नो इष्टमित्र, आमा बाबु, शाखा सन्तान आफुलाई नराम्रो गर्ने शत्रु सबैले देव लोकको सुख पाउन् भनेर ध्यान गर्नुपर्छ। सबै सुख पावस् भनि प्रार्थना गर्नुपर्छ। अरू मानिसहरूले सुख पाएकोमा खुशी हुनुपर्छ। उनीहरू सबै हाम्रा पूर्वजन्मका माता पिता हुन्, वहाँहरूलाई हामी सुख दिनु पर्छ र यसरी आफै आफ सुख पाएकोमा खुशी हुनु पर्छ। एक अर्कामा आरिस डाह गर्नु हुँदैन। अरू प्राणीहरूको रूप राम्रो भएको, ज्ञान भएको, धन सम्पत्ति भएको यस्तो सर्व गुण सर्व प्राणीले पाउन् भनी प्रार्थना गर्नुपर्छ अनि सर्व प्राणीले जे जस्तो इच्छा गर्छ त्यो सबै चित्ताएको पुग्यो भनी खुशी हुनु पर्छ।

आरिस गर्नु हुँदैन, आरिस र डाह गरे अरूको गुण देख्दैन, अभ्फ पाप बढेर जानेछ। यसरी अरूलाई आरिस गरे अर्काको पीठपछि निन्दा गरेर आफुलाई केही फायदा पनि हुँदैन अरूको हानि पनि गर्नु सक्दैन। अभ्फ जुन मान्छेको निन्दा गऱ्यो, जुन मानिससंग आरिस गऱ्यो उसको फायदा हुन्छ कारण उसको पूर्वजन्मको पाप काटदै जान्छ, यता जसले निन्दा गर्छ उसले दुःख पाउँछ। यसकारणले निन्दा गर्ने, आरिस गर्ने नराम्रो कर्म त्यागेर सधैं अरूको भलाई र उपकार गर्नुपर्छ। अरू प्राणीहरूले सुख पाएकोमा खुशी हुनु पर्छ, रूप राम्रो, विद्या राम्रो, शरीर राम्रो भएकोमा खुशी मान्नुपर्छ। यी प्राणीहरूलाई यो भन्दा पनि धेरै सुख पाउन् सुख र आनन्द भए कति उत्तम हुने थियो भन्ने ध्यान गर्नुपर्छ। अरू प्राणीहरूले सुख र आनन्द पाएकोमा आफु कस्तो खुशी र प्रसन्न हुनुपर्छ भने ऊँठको बच्चा हराएर पाउँदा ऊँठ जस्तो खुशी र हर्ष मान्छ त्यस्तै हर्षित हुनुपर्छ। ऊँठले आफ्नो बच्चालाई अरू पशुहरूले भन्दा ज्यादा माया गर्छ। यदि उसको बच्चा हराए, जतिको खुशी र हर्षित हुन्छ बच्चा हुँदा, त्यो भन्दा सौगुणा ज्यादा दुःखी हुन्छ। यस्तो दुःखी भएर बच्चा हराएको शोक र सुर्ता गरी बस्दा हराएको बच्चा पाउँदा अत्यन्त प्रसन्न र हर्ष मनाउँछ, त्यस्तै प्रकारको प्रसन्नता र हर्ष **मनाउनु** पर्छ सर्व प्राणीहरूले सुख र आनन्द पाउँदा र पायो भनेर ध्यान गर्नु पर्छ।

यी चतुर ब्रह्म विहारको शिक्षा संक्षेपमा गरे त्यो हो कुशल मन सर्व धर्मको संक्षेप राम्रो कुशल चित्त वा मन गर्नु हो त्यसकारण सधैं जुनै कर्म गरे तापनि राम्रो मन चित्ताएर गर्नु। श्री दिपङ्कर ज्ञान धर्म चक्र परिवर्तन गर्दै गर्दा वहाँको हात दुखेछ अनि वहाँले एक जना

शिष्य डोम त्वेन्या लाई भन्नु भयो "यो मेरो हात दुख्दै छ र तिमीले हातलाई फुकेर आशिष देऊ।" यसो भन्दा डोम त्वेन्याले यसो भन्नु भयो "तपाई सर्वज्ञ हुनु हुन्छ म यस्तो नीच मानिसले कसरी तपाईको हातमा आशिष दिनु।" श्री दिपङ्कर ज्ञानाले भन्नुभयो - "अरू त होइन तिम्रो चित्त सफा र राम्रो छ र पो भनेको। तिमीले राम्रो कुशल चित्तले जाति (निको) होस भनि प्रार्थना गऱ्यो भने पनि मेरो हात जाति हुन्छ" भनी भन्नु भयो। राम्रो र सफा मनले जे जस्तो काम गरे पनि कुशल धर्म भएर जानेछ। राम्रो कर्म र नराम्रो कर्म जुनै गरे तापनि मन राम्रो र मन नराम्रो भएको बलले सबै कर्मको फल ठूलो सानु हुन जान्छ। मन सफा र राम्रो चित्ताएर गरेको कर्म नराम्रो पनि राम्रै भएर जानेछ जस्तो कि "सच्छा" (छजा) मा जुत्ता ओड़ाएर पनि कुशल धर्म भएको कथा छ। मन नराम्रो गरेर धर्म गरे अकुशल धर्म भएर पापको विऊ हुनेछ। मन राम्रो र कुशल भए मार्ग पनि राम्रो र कुशल नै हुन्छ। मन नराम्रो भए मार्ग पनि नराम्रो नै हुनेछ।

उहिले एक समयमा दुइ आमा र छोरी थिए। एकदिन उनीहरू एउटा ठूलो नदी तर्दै थिए। तर पानीको गहिराई र वेगको कारणले दुईजनालाई पानीले बगायो। यसरी पानीले बगाउँदा आमाको मनले चित्तायो कि मलाई पानीले बगाएर लगे पनि लैजावस तर छोरीलाई नबगावस्। फेरि छोरीको मनमा पनि त्यस्तै विचार आयो कि मलाई बगाए पनि बगावस् तर आमालाई नबगावस्। यस्तो प्रकारले एक अर्कामा राम्रो चित्ताए। कसै गर्दा पनि दुईजनालाई नै पानीले बगाएर लग्यो। मृत्युपछि दुइजना नै ब्रह्मलोकमा जन्म लिए। यसरी अखिरी अवस्थामा या मर्नु भन्दा अघि एकले अर्कोलाई फायदा गर्ने चित्ताउनु

पर्छ नत्र भने मन सफा र राम्रो हुन पर्दछ।

उहिले भगवान बुद्ध र वहाँको चेलाहरूलाई एउटा गृहस्थी दाताले भोजन दिनका निम्ति निम्ताएर वहाँको घरमा भगवान् बुद्ध र वहाँका चेलाहरू पाल्नु भएको समयमा एक जना वाहुन भिक्षा माग्नु त्यस दाताको घरमा आएछ। त्यस समय भगवान बुद्ध र वहाँका चेलाहरूलाई भोजन चढ़ाएका थिएन। त्यसकारण त्यस घरमा मालिकले त्यस बहुनलाई खान दिनु नसक्ने रहेछ कारण पहिला भगवान् बुद्ध र वहाँको चेलाहरूलाई नचड़ाइ वाहिरी पाहुना या घरमा परिवार कसैले खाना नखाँदो रहेछ। भगवान् बुद्धहरूलाई खाना र भोजन चड़ाइसकेर एकजना माग्ने छेत्रीय पुरूष त्यहाँ पुगेछ। वहाँहरू भोजन गरेर उब्रेको सबै खाने कुरा त्यस छेत्रीयले खाना पाएछ। ती दुइ माङ्नेहरू एक वाहुन र अर्को छेत्रीय बाटोमा भेट भएर कुरा गर्दै गएछ। छेत्रीयले भनेछ "यदि मेरामा धन सम्पत्ति भए त भगवान् बुद्ध र वहाँका चेलाहरूलाई म नमरिञ्जलसम्म भोजन बस्त्र र जति जे चाहिन्छ ती सामाग्रीहरूले वहाँहरूका सेवा गर्थे।" बाहुनले भनेछ "मेरो अधिकार भए, यदि म राजा भए त यो टुप्पी नभएको भिक्षुहरू सबैलाई मारिदिने थिएँ, टाउको काटी दिने थिएँ।" यस्तो बातविबात भएर ती दुइ छुट्टिएर आफ्नो बाटोमा लागे। छेत्रीय थाकेर एउटा ठूलो रूखको छायामा बसेर त्यही सुतेछ। घाम ढल्किँदै गयो, त्यो रूखको छाया पनि सर्नु पर्ने हो तर छाया नसरेर त्यही छेत्रीयलाई शीतल गरी ढाकी बसेछ। त्यस समय त्यो देशको राजा मृत्यु भएर छोरा पनि नभएको कारणले कुनै भाग्यशाली र पूण्य ठूलो भएको पुरूष खोज्दै एक सिपाहीको दल र मंत्रीहरू त्यही रूखको फेदमा आइपुगे। तिनीहरूले

पनि यो रूखको छायाले त्यो छेत्रीयलाई ढाकेको देखेर अचम्भ मान्दै उनीहरूले चाहिएको पूण्य ठूलो र भाग्यशाली भएको यही नै भनी ठाने, कारण सबै रूखको छाया उत्तर पूर्वपट्टि लागिसक्दा पनि त्यो छेत्रीय सुतेको रूखको छाया पश्चिम उत्तरपट्टि नै बसेर त्यस छेत्रीयलाई शीतल दिईरहेको देख्दा यो कुनै भाग्यशाली र ठूलो पूण्य भएको पुरूष रहेछ भनी राजा बनाए। यसरी राजा भएपछि उसले अघि चित्ताएको कुरो सबै पुरा गरे। त्यो वाहुन चाँहि थाकेर बाटोको छेऊ सुतेछ। यसरी सुत्दा एउटा घोड़ा गाड़ी बेगले आएर त्यो वाहुनको टाउको काटेर मृत्यु भए। यसकारण मन राम्रो चित्ताएर जुनै काम गरे पनि त्यसको फल सुख हुन्छ। मन नराम्रो अर्काको अरूको कुभलो चित्ताएर धर्म नै गरे तापनि फल दुःख हुनेछ। मन राम्रो र स्वच्छ मन गरेर जुनै काम गरे पनि जस्तो चित्ताए पनि त्यस्तै पुग्नेछ। देवी देवताहरूले पनि रक्षा गर्नेछ। बुद्ध र बोधिसत्वहरूले पनि शुआशिष बर्षाउने छ। पछि पनि देव लोकमा जन्म लिनेछ। विस्तार विस्तार गरेर बुद्धज्ञान पनि प्राप्त गर्ने छ। यसकारण सधैं नै अरूको भलो चित्ताउने स्वच्छ मन बनाएर राख्ने कोशिश गर्नु पर्छ। मन स्वच्छ गर्नु कठिन हो तरै पनि विस्तार विस्तार कोशिश गर्नु पर्छ असम्भव त होइन। भगवान बुद्धहरू पनि आफ्नो स्वार्थ त्यागेर प्राणीहित चित्ताएको कुशल कर्मको फल पाउनु भएको हो। "ड्ुकपा कुइने लेग" भन्ने सिद्ध पुरूषले लासाको शाक्यमुनि बुद्धको सामु यसो भन्नु भएको छ। "तिमी र म पहिला एउटै प्राणी थियो।

तिमीले प्राणीहित चित्ताएकोले गर्दा बुद्ध भयौ,

म चाँहि स्वार्थी भएकोले गर्दा संसारमा नै जन्मनु पर्‍यो।

तिमी कोशिश गरेर बुद्धज्ञान प्राप्त गऱ्यौ

म अल्छि गरेर संसारमा अलमलिनु पऱ्यो"।

यी माथिका वार्ता अति गहिरो छ वहाँले हाम्रो लागि यसो भन्नु भएको हो।

**बोधिज्ञानको फल पाउनुको लागि चित्तोत्पाद विषय-**

संसारमा जहाँ जन्मे पनि दुःख छ, दुःखमा परेको प्राणीहरू आफ्नो पूर्वजन्मको कुकर्मको फल भोग्न परेको हो। यस्तो भयभित दुःखको महासागरमा अत्यन्त दुःख भोग्न पर्छ। यसरी महादुःखमा परेका प्राणीहरू दुःख सही नसक्नु हुन्छ। यस्तो दुःखै दुःखले सताईरहेका प्राणीहरू सबै यो महादुःखको सागरबाट मुक्ति भएर बोधिज्ञान प्राप्त होस भनि प्रार्थना गर्नु पर्छ।

**अरूको दुःख र आफ्नो सुख साटेर चित्तोत्पाद गर्ने विषय -**

हामी सर्व प्राणी अहिलेसम्म यहीँ भवसागरमा जन्म लिएर दुःख भोग्नु पर्ने कारण एउटै मात्र हो - स्वार्थपना। यो दुःखको संसारमा जहाँ जन्मेता पनि सुख कही छैन। यो संसारमा जन्मदै, मर्दै यो दुःखको चक्र बाट मुक्ति नभएको कारण आफूले मात्र सुख पाउने इच्छा गर्ने, जुनै कुरोमा पनि प्रथम आफ्नो सुख र फायदा छ छैन विचार गर्ने, अरूको वास्ता नगर्ने। आफूलाई लाभ भए खुशी हुने अरूको नोक्सान भएको वास्ता नगर्ने। यस्तो स्वार्थपनको काणले हामी यत्रो दुःखको भवसागरबाट निस्कनु नसकेको हो। आफ्नो इच्छा जस्तो छ अरू प्राणीको पनि त्यस्तै इच्छा हुन्छ। सबै प्राणीको चित्त एउटै हो सबैले

सुख पाउने इच्छा गर्छ, दुःख नहोस भन्ने इच्छा हुन्छ। दुःख त्याग्ने इच्छा गर्छ त्यसको विऊ पाप र कुकर्म त्याग्न जान्दैन सुख पाउने इच्छा गर्छ त्यसको विऊ कुशल कर्म र धर्म रोप्नु जान्दैन। सर्व प्राणी आफू जस्तै हो। आफूले सुख पाउने जुन इच्छा गर्छ त्यो इच्छा अरू प्राणीहरूले पनि गर्छ। सानु कीरा किटाणुदेखि लिएर ठूलो हो भने हात्तीसम्म प्राणी सबै सुखको इच्छा गर्छ दुःख त्याग्न खुशी हुन्छ। यसकारण सर्व प्राणी आफु जस्तै हुन् भनेर सबैलाई माया, प्रेम र दया गरेर उनीहरू सबैलाई सुख होस्, फायदा होस्, राम्रो होस्, कल्याण होस्, भन्ने इच्छा गरे, **मनले** चित्ताए अहिले पनि सर्व सुख पाउने छ पछि बुद्धज्ञान प्राप्त **गर्नेछ।** भगवान् बुद्धले पनि अरू प्राणीहरूलाई भलो गरेको, फायदा गरेको, ती प्राणीहरूले सुख पाउन् भनी चित्ताएको आफ्नो सुख अरू प्राणीहरूलाई दिएर ती प्राणीहरूको दुःख आफुले भोगेकोले गर्दा यी सब निःस्वार्थ भावनाले प्राणीको हित गरेको कारणले बुद्धज्ञान प्राप्त गरेका हुन्। अरू प्राणीको भलाई, प्राणीहित र कुशल मन गरेको कारणले गर्दा बुद्धत्व प्राप्त गर्न सकिन्छ। त्यसैकारण अरूको पाप, दुःख, कष्ट, नोक्सान सबै प्रकारको दुःख आफुले लिएर, भोगेर, आफ्नो सुख, नाफा, पूण्य कर्म, सबै प्रकारको सुख अरू प्राणीहरूलाई दिन पर्छ। अरूको दुःख आफूले भोग्नु चित्ताउँदा कस्तो फल पाउँछ यसको कथा यहाँ यस प्रकार छ –

यो कथा भगवान् बुद्धको एक जीवनको कथा हो। भगवान् बुद्ध पूर्वजन्ममा एउटा घोड़ागाड़ी तान्ने नरकमा जन्मिनु भएका थिए। भगवान बुद्धका साथी कामारूपा थिए। वहाँ र वहाँको साथी दुइजनाको काँधमा काठको गाड़ीमा थुप्रै समान हालेर तान्नु लगाउँदा रहेछ।

दुइजना भएर तान्नु नसक्दा यमदुतले आगो बलेको चाबुकले हिर्काउँदो रहेछ, यसरी हिर्काउँदा अलिकति पनि तान्नु सक्दैन रहेछ तर यमदूतले चाबुक हिर्काएको हिर्काएकै गर्दो रहेछ। भगवान्‌को मनमा यस्तो उत्पन्न भएछ कि हामी दुइ भएर पनि तान्नु सक्दैनौ दुःख अति असह्य छ अलिकति कम्ति पनि छैन। वहाँले यमदूतलाई यस्तो बिन्ती गर्नु भएछ "हजुर यो मेरो साथी कामारूपाको काँधको डोरी पनि मलाई नै लगाइदिनु हवस मेरो साथीलाई छोड़िदिनु होस् भन्दा यमदूत रिसाएर यसो भनेछ प्राणीहरूको आफ्नो आफ्नो कर्म अनुसार यस्तो फल भोग्नु पर्छ मैले काम लगाएको होइन भनेर भगवान्‌को टाउकोमा फलामको मुंग्राले कसेर हिर्काएछ। यसरी टाउकोमा हिर्काउँदा मरेर देवलोकमा जन्म लिनु भएछ। नरकको प्राणीलाई जति हिर्काए पनि मर्नु सक्दैन तर मन राम्रो चित्ताएको कारणले मृत्यु भएर देवलोकमा जन्म भए। यो जन्म भगवान बुद्धको प्राणीहित गरेको एक जीवन हो। अर्को गृहस्थी छोरी (बुमोर) को नाम भएर जन्म लिएर नरकमा आफ्नो कर्मको फल भोगी रहेको समयमा अरूको दुःख पनि मैले नै भोग्नु परोस् भनी भनेको कारणले गर्दा नरकबाट मुक्ति भएको कथा यस प्रकार छ -

उहिले एक समयमा भगवान बुद्धको एक पूर्वजन्मको कथा हो। एक जना "जवो" नामक्रगृहस्थी थिए । तिनको छोरा जन्मेर केही दिन पछि मरिहाल्यो। यसरी छोरा जन्मिँदै मर्दै हुन्थ्यो। वहाँको मनमा यस्तो लागेछ मलाई छोरा नफापेको रहेछ। अब पनि छोरा जन्मे छोरी भनेर भन्छु भन्ने विचार गरेछ। फेरि पनि छोरा जन्मेछ अनि "छोरी" बुमोर भनेर राखे। यसरी छोरीको नाम राख्दा मरेन रहेछ। बस्दा रहँदा

छोरा ठूलो भएछ। उहिलेको कस्तो चलन थिएछ भने बाबुको जे काम छ त्यो काम छोराले गर्थ्यो रहेछ। वहाँको बाबु समुद्रबाट मणि ल्याउने थिएछ। बाबु मणि लिनु जाँदा समुद्रको तुफानले जहाज पानीभित्र पसेर मृत्यु भएको थिएछ। वहाँले पनि जवान भएर आफ्नो आमालाई मेरो बाबुको के काम हो भनेर सोध्नु भएछ। आमाले साँचो भनुँ भने छोरा पनि समुद्रमा मणि लिनु जान्छ र बाबु जस्तै मर्छ भन्ने डरले झुट बोल्नु भएछ - "तिम्रो बाबुले अन्नको व्यपार गर्थे।" छोराले पनि अन्नको व्यापार गरेर दिनै पछि चार चार कौडी जम्मा गरेर आमाको सेवा गर्दो रहेछ। त्यससमयमा पैसाको चलन थिएन, पैसाको बदली कौड़ी थिए, यसको प्रमाण अहिले पनि पाउछौं कि सबैमान्छेले यसो भन्छ सगोमा फुटेको कौड़ी पनि छैन भनी उखान गर्छ। अरू अन्नको व्यापारिहरूले तिम्रो जात त यो होइन अर्को हो भनेर भन्दा फेरि आमालाई आएर सोध्नु भएछ। आमाले फेरि झुट बोलेर धुप व्यपार गर्ने हो भनेछ। आमाको सेवा गर्दो रहेछ। फेरि धुपको व्यापारिहरूले पनि त्यसै भनेर लुगाको व्यापार गरेर सोलहवटा कौडी नाफा गरेर आमाको सेवा गर्नु भएछ। फेरि लुगाको व्यापारिहरूले पनि त्यसै गरी भनेर मणिको व्यपार गरेर बत्तीस कौड़ी नाफा गरेर आमाको सेवा गर्नु भएछ। फेरि मणिको व्यपारिहरूले यसो भने छ तिमी त समुद्र पारीबाट मणि ल्याउने जात पो हो यस्तो मणि बेच्ने तिमी होइनौ भनेछ। यसरी आफ्नो खास काम थाहा पाएर आमालाई भन्नु भएछ मेरो काम त मणि ल्याउने पो रहेछ र अब म मणि ल्याउन समुद्रमा जान्छु भनी भन्नु हुन्छ। आमाले भन्नु भएछ - "हो तिम्रो काम मणी ल्याउने नै भए पनि तिमी नजाऊ, मणि ल्याउन जाँदा तिम्रो बाबु, बाजे सबै नै मरे तिमी पनि यसरी गयौ भने मर्नेछौ र यही व्यापार गरेर बसे

राम्रो हुन्छ। आमाको कुरा नमुनेर वहाँ मणि ल्याउन जानुको निम्ति सबै समाग्रीहरूको बन्दोवस्त गरेर तयार भएछ। यसरी तयार हुँदा आमाले छोराको लुगाको छेऊमा समातेर यस्तो भन्दै रोए - "छोरा तिमी नजाऊ।" छोराले यसो भने - "म यस्तो टाढो व्यापार जाँदा यसरी रोएर किन अलच्छिन जनाएको" भन्दै आमाको टाउकोमा लात्ताले दिएर निस्केर जानु भयो। समुद्रमा जाँदा जहाज सबै पल्टेर प्रायः त्यहाँ भएको सबै मरे, भ्रोवो पोमो एउटा सानु काठको टुक्रामा चढेर किनारमा पुगे। त्यस किनारमा एउटा आनन्द नामक बस्ती रहेछ। त्यस बस्तीमा अति सुन्दर सुन्दर महलहरू रहेछ। त्यस महलभित्र जाँदा चारजना देवी रहेछन्। उनीहरूले वहाँलाई खानापिना लुगा अनि रेशमको आशनमा राखेर खुब राम्रोसंग सेवा गरेछन। यसरी बस्दा रहँदा एकदिन तिनले विदा मागे, चारजना देवीहरूले नजानु होस, यस्तो राम्रो महल छाड़ेर कहाँ जानु हुन्छ ? नजानु हवस। वहाँ "भ्रोपा वुमोले" म अब यहाँ बस्दिनँ भनेर निस्कनु भएछ। यसरी निस्कनु हुँदा देवीहरूले भनेछन् यदि जानु नै भए दक्षिण दिशापट्टि नजानु हवस, तपाई दूर्दशामा पर्नु हुन्छ भन्दा वहाँको मनमा दक्षिण दिशापट्टि नै जाने इच्छा भएर त्यतैपट्टि गए। दक्षिण दिशा जानु हुँदा एउटा अघिको भन्दा पनि सुन्दर "आनन्दमय" नामक बस्तीमा पुगे। त्यहाँ पनि अघि भ्रै आठजना देवीहरूले रेशमको आसनमा राखेर दूध दही घिऊ इत्यादि खाद्य कुरो दिएर सेवा गरेछन्। त्यहाँ पनि बस्दा बस्दा अल्छी लागेर फेरि जानु भन्दा देवीहरूले भनेछन् "नजानु होस्, कतै गइहाले दक्षिण दिशापट्टि नजानु हवस, ठूलो दूर्दशा आई लाग्छ। त्यहाँबाट पनि फेरि दक्षिण दिशापट्टि नै जानु मन लागेर त्यतैपट्टि गए। त्यहाँ पनि (रारो) "आनन्दित" नामक बस्तीमा अघि भन्दा ज्यादा सोलह (१६) जना देवीहरूले सेवा

गर्ने जग्गामा पुगेर आनन्द भएर बस्दा बस्दा फेरि त्यहाँ पनि बस्नु मन नलागेर फेरि त्यो जग्गा छाड़ेर जाँदा अघि भैं देवीहरूले भनेछन् तरै पनि वहाँको मनलाई दक्षिण दिशापट्टि नै जान मन लागेर त्यतैपट्टि गए। यसरी जाँदा एउटा "ब्रह्मको महल" भन्ने महलमा पुगे। त्यहाँ वत्तिसजना देवीहरूले वहाँलाई स्वगत गरेर रेशमको आसनमा राखेर अघि भैं खानापिना दिएर सेवा गरे। त्यहाँबाट पनि तिनी जान्छुभन्दा अघि भैं दक्षिण दिशामा नजानु, गए ठूलो दूर्दशा र आपती लाग्ने छ भने। तरै पनि तिनी दक्षिण दिशापट्टि नै गए। त्यहाँ एउटा फलामले बनाएको घरमा पुगेछ। त्यस घरको ढोकामा एउटा काले मान्छे आँखा पनि गतो गतो भएको हातमा एउटा लामो मार्तोल (हलौड़ी) लिएर बसको रहेछ। तिनले त्यस ढोकेलाई सोधे यो भित्र के छ भन्दा त्यो ढोके नबोलि बसेछ। त्यो घरको छेऊमा जाँदा त्यो डरलाग्दो मानिस जम्मा त थुप्रै रहेछ। यस्तो दृश्य देख्दा आङ पनि भिरिङ्ङ भएर शरीरको रौहरू सबै ठाडो भएर आयो। यस्तो अवस्था हुँदा अघि दक्षिण दिशापट्टि नजानु ठूलो दूर्दशा र आपात्ति लाग्छ भनेको चाहिँ यही रहेछ भनी मनमा लागेछ। त्यो घरभित्र पसेर हेर्दा त एउटा मान्छेको टाउकोमा फलामको चक्का लगाएको रहेछ त्यो चक्का घुम्दा त्यो मान्छेको गिद्धि निस्केर बाहिर उछिटिँदो रहेछ। यस्तो असह्य दुःख देखेर सोधेछ तिमीले कुन कर्म गरेको थियौ र आज यस्तो दुर्दशा भएको हो । त्यो मान्छले - "मैले मेरो आमालाई टाउकामा लात हिर्काएको फल आज भोग्नु परेको हो, तिमी ब्रह्मको महलमा आनन्द गरेर नबसेर यहाँ के गर्नु आएको ?" भनी भने। भोवो बोमोले भने "मलाई पनि यहाँ मेरो नराम्रो कर्म आमालाई टाउकोमा लात हिर्काएको कर्मले तानेर यहाँ ल्याइपुराएको रहेछ। यसो भनी सक्दा नसक्दा

आकाशबाट एउटा वाणी भयो "अघिको कर्मफल भोग्नेको टाउकोबाट त्यो चक्का निकालेर मुक्ति होस, अब यो झोवो बोमो नयाँ कर्मफल भोग्नेको टाउकोमा यो चक्का लागोस।" यस्तो प्रकारको वाणी हुँदा त्यो अघिको मान्छे मुक्ति भएर झोवो बोमोको टाउकोमा त्यो चक्का आफै लागेर चक्का घुम्दा तिनको गिद्दि छिःरिःरिः भएर बाहिर निस्कँदा असह्य दुःख कष्ट भएर आयो। यस्तो सहनु नसक्ने दुःख हुँदा वहाँको मनमा यस्तो दया करूणा उत्पन्न भए कि म जस्तो आमालाई टाउकोमा लात हिर्काउने थुप्रै प्राणी छन् यी सबैले यस्तो सहनु नसक्ने दुःख भोग्नु पर्छ भनी ती प्राणीहरू माथि करूणा र दया उत्पन्न भयो। यस्तो नराम्रो कर्म गर्ने आमाको टाउकोमा लात हिर्काउने सर्वप्राणीको कर्मको फल सबै मेरै टाउकोमा आइलागोस, अरूले यस्तो दुःख भोग्न नपरोस्, सबैको दुःख मैले नै भोग्नु परोस्। यस्तो नराम्रो कर्म आमाको टाउकामा लात हिर्काउने सर्ब प्राणीहरूको यस्तो डरलाग्दो असह्य दुःख जन्म जन्मान्तर कल्प कल्पसम्म पनि भोग्न नपरोस भनी प्रार्थना गर्नु भए। यस्तो विचार र अरू प्राणीहरूमाथि करूणा उत्पन्न भएको कारणले त्यति नै बेला त्यो चक्का टाउकोबाट निक्लेर गयो अनि यस्तो महादुःखबाट मुक्ति भएर डाकीनी (परी) को लोकमा जानु भयो। यस्तो प्रकारको चित्तोत्पाद अरू प्राणीको दुःख आफैले भोग्नु परोस भनी चित्ताउनेको फल यस्तो प्रकारले सर्व दुःखबाट मुक्ति हुन्छ। भगवान् बुद्धले पनि यसरी एक जन्ममा झोवो बोमोको जन्म लिएर प्राणीहित चित्ताउनु भएर बोधिचित्त उत्पत्ति गर्नु भएको फल आज स्वयं सम्याक समबुद्ध प्राप्त गर्नु भएको हो। प्राणीहित र प्राणीको भलाई गरे सर्व पाप काटिएर जानेछ। आफ्नो सुख दिएर मात्र होइन तर अझै त्यो भन्दा बढ़ता सुख प्राप्त होस् भनी प्रार्थना गर्नु पर्छ अनि चित्ताउनु

पर्छ। ठूलो र सानु सर्व प्राणीहरूलाई सधैं राम्रो मनले फायदा नाफा र सुख जे जसो हुन्छ गरी दिएर सर्व प्राणीहित र कल्याण गर्नु पर्छ। सर्व प्राणीहरूय्लाई सुख दिने फायदा गराईदिने, पर कल्याण गरे भगवान बुद्ध र बोधिसत्व सबैजना प्रसन्न र हर्षित हुन्छन्। पर कल्याण गरे मात्र भगवान् बुद्धहरू खुशी हुन्छन। भगवान बुद्धहरूलाई खुशी बनाउनु हो भने यी परकल्याण प्राणीको भलाई गर्नु बाहेक अरू कुनै कुशल कर्मले हुँदैनन्। अरू प्राणीहरूलाई फायदा गर्नु सके, प्राणीको भलाई र कल्याण गर्न सके, आफुले सधैं गर्ने धर्म, ध्यान, टुटिए पनि केही फरक पर्दैन। नराम्रो मन, कप्टी मन, दुषित मनले माणी गरेको या कुनै मंत्र जप गरेको भन्दा राम्रो स्वच्छ मनले गीत गाए त्यो राम्रो हुनेछ भनी अघिका सिद्ध पुरूषले भनेका छन्। मनमा पाप बोकेर र कुविचार गरेर जुनै धर्म गरे, या म्हाणी जप गरे या जुनै मंत्र पाठ गरे पनि कुशल कर्म वा धर्म हुन सक्दैन। त्यो भन्दा असल त राम्रो मनले गीत गाए उत्तम हो। यसरी गीत गाउँदा कमसे कम मन त राम्रो हुन्छ, स्वच्छ हुन्छ आफू पनि खुशी हुने र सुन्ने प्राणी पनि खुशी हुने। अरू प्राणीमाथि नराम्रै विचार र कुदृष्टि त आउँदैन। यसकारणले राम्रो मनले गीत गाए उत्तम हो भनी भनिएको हो। भगवान बुद्धले यसो भन्नु भएको छ "प्राणीहरू खुशी भए म खुशी हुन्छु, प्राणीहरूले सुख पाए म सुखी हुन्छु, प्राणीहरू हाँसे म पनि हाँस्छु, प्राणीले दुःख पाए म दुःखी हुन्छु। मलाई खुशी र प्रसन्न बनाउनु हो भने प्राणीलाई खुशी र प्रसन्न बनाउनु पर्छ। प्राणीहरू खुशी भए म पनि खुशी हुन्छु। यसकारण प्राणीहरूले सुख पाए मैले सुख पाएको भनी सम्भनू, प्राणीहरू रोए म (बुद्ध) रोएको हो भनी सम्भनू, प्राणीहरू खुशी र प्रसन्न भए म (बुद्ध) प्रसन्न र खुशी भयो भनि सम्भनू। प्राणीहरूले दुःख र कष्ट पाए मैले

(बुद्ध) दुःख र कष्ट पाएको हो भनि सम्झनू।"

बुद्ध र बोधिसत्वहरूलाई खुशी बनाउनु हो भने प्राणीको भलाई उपकार, उनीहरूलाई सुख दिने कोशिश गर्नुपर्छ। आफु कतै जाँदा पनि प्राणीहरूलाई फायदा गराउनु पर्छ, फायदा र सुखको कामना गर्नु पर्छ। यसरी कतै जानु पर्दा अर्काको भारी पनि आफूले बोक्ने या बोकी दिनुपर्छ, आफ्नो साथीहरूलाई दुःख नहोस् भनी चित्ताउनु पर्छ। थाकेर बस्दा पनि आफ्नो साथीहरूको सेवा गर्नुपर्छ जति सक्दो आफ्नो सुख पनि अरूलाई दिने गर्नुपर्छ। आफ्नोमा जे जसो छ ती सबै नै अरूको निम्ति खर्च गर्नु पर्छ अरूले सुख पाउने काम गर्नुपर्छ। आफ्नो खानासम्म पनि अरूलाई दिएर आफु भोकै बस्नु परे पनि खुशीसाथ अरूको भलाई गर्नुपर्छ। आफ्नो नाफा र सुख अरू प्राणीहरूलाई दिनुपर्छ, अरूको नोक्सान र दुःख आफूले लिनुपर्छ। आमाले आफ्नो छोरालाई सधैं माया गरेको जस्तो अरू प्राणीको भलाई र परोपकार गर्नुको निम्ति सधै तत्पर भएर अघि सर्नुपर्छ। प्राणीहरूको भलाई र परोपकारको निम्ति म सक्दिनँ थाकेको छु, फुर्सत छैन, बिमारी छु भनेर कहिले नभन्नू। आफू थाकेको भए पनि, फुर्सत नभए पनि, विमारी भए पनि आफु गएर कुनै प्राणीको उपकार हुँदैछ भने त्यो काम गरिदिनुपर्छ। भगवान बुद्धले पनि प्राणीहरूको परोपकार र भलाईको निम्ति नै धर्म प्रचार गर्नु भएको हो। यस भवसागरमा जन्मेका सर्व प्राणीहरू दुःख भोगिरहेका छन्। दुःख पाएको कारण नराम्रो र कुविचारको विऊ पूर्वजन्ममा रोपेको फल हो। यस्तो नराम्रो र कुविचार विऊ भएर फल दुःख पाउँछ। विऊ र फल विषय के हो भने विऊ रोप्न साथ फल दिँदैन, एउटा मकैको दाना रोप्दा त चार पाँच महीना जति लाग्नेछ

फल लाग्नको लागि । हामीले अहिले रोपे एकैक्षणमा फल कहाँ पाउँछौं ? पाउँदैन । यस जन्ममा सुख भएको पूर्वजन्मको फल हो विऊ कुशल मन, पूण्य कर्म र धर्म हो फल सुख र आनन्द हो । विऊ पाप, कुविचार र नराम्रो मन भएको ले गर्दा फल यस जन्ममा दुःख र कष्ट भएको हो । यस विषयमा भगवान बुद्धले यस्तो भन्नु भएको छ "पूर्वजन्ममा कस्तो कर्म गरेको थिए यो जीवनमा हेर्नु पछि कहाँ जन्म लिने हो अहिले आफ्नो कर्ममा हेर्नु ।" यस्तो नराम्रो र कुविचारको कारणले गर्दा हामी यही संसारमा जन्मी बस्नु पर्छ । यस्तो नराम्रो मन र कुविचार जरासगै काटनुको निम्ति, मनमा राम्रो विचार उत्पन्न गरउनका निम्ति निस्वार्थ भावना जगाउनका निम्ति नै भगवान बुद्धले उपाय र प्रज्ञाको धर्म सुनाउनु भएको हो । सर्वप्राणीहरूले बोधिज्ञान प्राप्त गरोस् भनी धर्म प्रचार गर्नु भएको हो । हाम्रो नराम्रो मन र कुविचारको मूल जरा नै काटनु पर्छ, यमरी नराम्रोको जरा काट्न सके सबै राम्रो भइहाल्छ जस्तो कि अँध्यारो नभए त्यहाँ उज्यालो हुनेछ । आफ्ना आमा जस्ता प्राणीहरू सबै दुःखमा परेका छन् यसरी दुःखबाट मुक्ति दिने शक्ति हामीमा छैन स्वयं भगवान बुद्धका मात्र पार गर्ने शक्ति छन् । यस्तो शक्ति प्रथम आफूले पाएर बोधि चित्त उत्पत्ति भएर सर्व प्राणीको कल्याण गर्नु, गराउनु सक्नु पर्छ ।

**चित्तोत्पादको शिक्षा विषय -**

चित्तोत्पाद उत्पन्न हुन वा गराउन षष्ट पारामिता हो । नदीको एक किनारदेखि अर्कोकिनारसम्म पुग्न जसरी एउटा नौकाको आवश्यकता पर्छ त्यस्तै नै यो भवसागर पार गर्न षष्ट परामिताको आवश्यकता पर्छ । षष्ट पारामिताको प्रथम दानको शिक्षा हो । चित्तोत्पाद

तीन प्रकारको हुन्छ १) राजा जस्तो २) माझी जस्तो ३) गोठाला जस्तो

*१) राजा जस्तो चित्तोत्पाद* - प्रथम आफू राजा भएर, धन सम्पत्ति प्रशस्त कमाएर आफ्ना प्रजाहरूलाई जसरी सुख दिन्छ त्यस्तै नै प्रथम आफूले बुद्धज्ञान प्राप्त गरेर मात्र अरू प्राणीहरूको उद्धार र कल्याण गर्छु भन्ने विचार र भावना भए त्यसलाई राजा जस्तो चित्तोत्पाद भन्दछ।

*२) माझी जस्तो चित्तोत्पाद* - माझीले एक किनारदेखि अर्को किनारमा पुऱ्याउँछ। नौकामा आफू पनि चढेर अरू प्राणीहरू पनि हालेर माझीले आफुसगै प्राणीहरूलाई पार तारिदिन्छ त्यसै गरी आफू पनि बुद्धज्ञान प्राप्त गरेर अरू प्राणी पनि आफुसगै बुद्धज्ञान प्राप्त गराएर मुक्ति गराउने इच्छा र विचार भए माझा जस्तो चित्तोत्पाद भन्दछ।

*३) गोठाला जस्तो चित्तोत्पाद* - भेड़ा, बाख्रा, गाई, गोरूको गोठालाहरूले पशु प्राणी चराउनु लाँदा भेड़ा, बाख्रा वा गाई, गोरू सबै पशु आफ्नो अघि लगाएर पशुहरू सबैलाई धपाउँदै एउटै पशु पनि आफु भन्दा पछि नराखेर कुनै जानवरले खान्छ कि कतै हराउँछ कि भनेर पशुमाथि दया राखेर आफू सब भन्दा पछि बस्छ। त्यसरी नै सर्व प्राणीले बुद्धज्ञान पाएर जबसम्म सर्वप्राणी मुक्त हुँदैन त्यति बेलासम्म म पनि मुक्त हुँदिनँ र बोधिसत्वको रूपमा बसेर लोककल्याण गर्छु भन्ने भावना गोठाला जस्तो चित्तोत्पाद हो। यस्तो प्रकारको चित्तोत्पाद सबभन्दा श्रेष्ठ र उत्तम हो। यस्तो प्रकारको चित्तोत्पाद मञ्जुश्रीले

गर्नु भएकोछ।

माझी जस्तो मध्यम वा ठीकैको हो। राजा जस्तो चित्तोत्पाद तल्लो दर्जाको हो। चित्तोत्पाद स्वभाव दुइ प्रकारको छ - संवृतिसत्य र परमार्थ चित्तोत्पाद। संवृतिसत्य पनि दुइभागमा विभाग भएको छ।
*१) प्रणिहित चित्तोत्पाद र*

*२) प्रस्थान चित्तोत्पाद*

**प्रणिहित चित्तोत्पाद** - प्रथम कहीँ जाने इच्छा गर्ने, जस्तै म बुद्ध गया जानु पऱ्यो भनेर चित्ताए जस्तो म प्रथम सव प्राणी सम्याक सम बुद्धको क्षेत्र पुऱ्याउन पऱ्यो भनी चित्ताएकोलाई प्रणिहित चित्तोत्पाद भन्दछ।

**२) प्रस्थान चित्तोत्पाद** - बुद्धगया जानुको निम्ति तयार भएर आफ्नो विस्तारा पैसा रूपियाँ बोकेर गाड़ीको टिकट काटेर गाड़ीमा चढेर बुद्धगया प्रस्थान गरे जस्तै सर्वप्राणी सम्याक सम बुद्धको क्षेत्रमा पुऱ्याउनका निम्ति प्रथम दान गर्ने शील पालन गर्ने, क्षान्ति ध्यान गर्ने, वीर्य (कोशिश) गर्ने, ध्यान गर्ने र प्रज्ञा गर्ने प्रस्थान चित्तोत्पादस भन्दछ।

यसरी षष्ट परामिताको धर्म गरेर **पूण्य गरेको** बाटोमा स्वयं गएको हो। यो प्रणिहित र प्रस्थान चित्तोत्पाद दुवै ने संवृतिसत्य चित्तोत्पाद। बोधिसत्वको मन वा चित्त हुन। ज्ञान र शून्यता अर्थ र स्वभाव बुझे त्यसलाइ परमार्थ चित्तोत्पाद भन्दछ।

सर्वप्राणी हाम्रा माता पिता हुन् भन्ने कुरो त अघिबाट नै

बताइसकेको छ। यी प्राणीहरू सबै दुःखमा परेका छन्, यस्तो महादुःखबाट पार गराउनका निम्ति प्रथम आफू बुद्धज्ञान प्राप्त गर्नु पर्‍यो। बुद्धज्ञान प्राप्त गर्नका लागि पूण्य गर्नु अति आवश्यक छ। विऊ विना फल कहाँ हुन्छ ? यसकारण पूण्य विऊ भएर फल बुद्धज्ञान प्राप्त गर्नेछ। पूण्य गर्ने उपाय दान, शील, क्षान्ति (सहनु) वीर्य (कोशिश) ध्यान यी पाँचवटा उपायपारामिता हुन् अनि प्रज्ञा पारामिता ज्ञानवर्ग हुन्।

**प्रथम दान पारामितामा तीन प्रकारका छन् -**

(क) सानुदेखि ठूलो वस्तुसम्म, पानीदेखि सुन, हीरा मोती, लुगा आदिको दान।

(ख) धर्मको दान

(ग) शंकारहित वा डररहित बचाउनेको दान। डरबाट बचाएर शरण दिने दान।

**वस्तु दान तीन प्रकारले गरिन्छ -**

१) सानु एकदाना अन्नदेखि एक गिलास पानीसम्म दान दिए पनि मन शुद्ध र स्वच्छसंगले दिनु पर्छ। दान दिँदा तीन कुरोको याद राख्नु पर्छ। प्रथम दान दिने वस्तु, दोस्रो जुनै दान दिए पनि हर्षित वा खुशी भएर दिने गर्नु पर्छ, तेस्रो दानको फलको आशा नराखी वा नगरी दान दिनुपर्छ।

दान भनेको पशुलाई एक मूट्ठी घाँस दिएको पनि दानै हो। त्यो घाँस खाएर त्यो पशु एकक्षण त खुशी हुन्छ। दान गर्ने उपाय भगवान्

बुद्धले धेरै बताउनु भएको छ। एक थोपा पानी पनि दान गर्न सकिन्छ। यो एक थोपा पानीले प्रेतहरूलाई फायदा गर्छ। प्रेतहरू यति ज्यादा छन् कि गंगाको किनारमा बालुवा जति छ प्रेतहरू त्यो भन्दा ज्यादा छन्। एकदाना अन्न पनि दान हो, यो एकदाना अन्नले प्रेतहरूको भोक टार्नु सक्छ। बिहान बेलुकी सुर दिए प्रेतहरूलाई धेरै फायदा हुन्छ। ती प्रेतहरूका शक्ति पनि हुन्छ, अरू प्राणीको प्राण पनि लान सक्छ। ती प्रेतहरूको आत्मामात्र भएर हावामा घुमी हिँड्छ। उनीहरूका मनमा अरूलाई बिगार गर्ने भावना मात्र हुन्छ। यस्तो प्रकारको भावना भएको कारणले गर्दा अरू प्राणीहरूको प्राण लाने, विमार गरिदिने हुन्छ। ती प्रेतहरूले सबै प्राणीमाथि कुभलो मात्र गर्छ तर सबै प्राणीहरूलाई बिगार्नु सक्दैन। जुन प्राणीको दीन, ग्रहदशा कमजोर छ त्यस प्राणीलाई मात्र ती प्रेतहरूले बिगार्न सक्छन् अनि प्राणसम्म पनि लान्छन्। ओह्रालो लागेको मृगलाई बाछाले पनि खेदछ भन्ने उखान जस्तो दीनदशा लागेको समयमा हामीलाई पनि यस्तै प्रेतहरूले पनि फायदा उठाउँछन्। यस्ता प्रेतहरूलाई हामीले सुर दिनुपर्छ, सुर दिँदा चम्बा, मह, घिऊ, मिसिरी चिनी, गुँड़ दही र दुध मिसएर दिनपर्छ। यसो गर्दा ती प्रेतहरूको पेट तृप्त भएर अरू प्राणीको प्राण लाने छैन। ती प्रेतहरू केही खाना पाउँछ कि भन्ने विचारले आएका हुन्छन् यसरी आउँदा दिन कमजोर भए त्यसको छाया लागेर मानिसहरू बिमार हुन्छन्। यसैकारण बिहान बेलुकी सुरको दान गरे अति ठूलो दान हो। सुर दिँदा लामाहरूले उनीहरूलाई धर्मको दान पनि दिन्छ, यसरी धर्म सुनाउँदा उनीहरूको मन शान्ति हुन्छ र अरू प्राणीको हत्या गर्दैन, प्राण लिँदैन। सुर दिनु सजिलो पनि छ, धेरै खर्च पनि छैन। सुर दिनु कुनै लामाकोबाट सिक्नुपर्छ। यसरी सुर दान गरे तीनैवटा दान एकैचोटि पूर्ण हुन्छ।

चिज, खानेकुरोको दान, धर्मको दान अनि अरू प्राणीहरूको डरबाट बचाउने र शरण दिने। यसकारण मुर सधैं दिने गरे अति ठूलो धर्म हुनेछ, अरू प्राणीको प्राण पनि बचाउन सकिन्छ। यस्तै प्रकारले एक थोपा पानी, एक दाना अन्न जे जसो हुन्छ दान दिनुपर्छ। भएर पनि छैन भन्ने पछि प्रेतको विऊ रोपेको हो। भगवान्‌लाई पानी चढाउने, बत्ती बाल्ने पूजा गर्ने पनि दान नै हो। गरीब दुःखीलाई आफ्नो फाटेको लुगा दिए पनि दान नै हो। जेचुन मिला रेपाले भन्नु भएकोछ "भात खाँदैछ भने पनि मुखबाट निकालेर दिए दान नै हो। एक मूठ्ठी खाना आफ्नो भागबाट निकालेर दिए पनि दानै हो। यस संसारभरको धन सम्पत्ति एकजनाको भए पनि सन्तुष्ट हुँदैन। त्यसैकारण आफ्नोमा जे जसो छ पूण्यको निम्ति दान गरे उत्तम हो। जो एकदम कञ्जुस छ त्यस्तो मान्छेले यस्तो प्रकारले दान गर्नु सिक्नु पर्छ - प्रथम आफ्नो जे जसो पैसा रूपियाँ, अन्न दाहिने हातमा लिनु त्यो कम से कम अरूलाई दिन नसके पनि दाहिने हातले देब्रे हातलाई दान गर्न त सकिन्छ। यसो गर्दा गर्दा एक दिन कुनै अर्को मान्छेलाई दिनुसक्ने हुन्छ। आफुलाई नचाहिने काम, कुहेको अन्न फाटेको लुगा यस्तो प्रकारको वस्तुहरू दान गर्दै दान गर्ने अभ्यास गर्नुपर्छ। यसरी काम नलाग्ने दिँदा दिँदा कुनै दिन अलिक राम्रो राम्रो दिनुसक्ने हुन्छ। यस्तो प्रकारले दान गरेर दानको बलले मुक्ति पाउने उपाय गृहस्थीको निम्ति मिला रेपाले बताउनु भएको हो। भिक्षु र प्रबज्रकहरू आफ्नोमा जे जस्तो छ त्यसैमा सन्तोष गर्नुपर्छ।

दान दिनु नसक्ने, दान गर्नु नसक्ने अवस्था भए पनि एक दाना अन्न नै चरा चुरङ्गीहरूलाई दिए त्यो पनि दान नै हुन्छ। आफैले खाँदै

गरेको भाग, खाएर उब्रेको जुठो तर दान गर्दा स्वच्छ हृदयले गरेको हुनु पर्छ। दान दिइसके पछि आफुले दान गरेको विषयमा अरूलाई भन्नु हुँदैन - मैले यस्तो दान गरे उस्तो दान गरे भनेर अरू मानिसलाई सुनाए त्यो राम्रो हुँदैन कसैले एक सय रूपिया दान गरेको भए एक हजार रूपियाँ दान गरे भनि भन्ने पनि हुन्छ, यस्तो गरे दान गरेको फल केही पनि पाउन सक्दैन उल्टो झुट बोलेको पाप लाग्नेछ। दान दिइसके पछि पश्चात्ताप गर्नु हुँदैन। कति मानिसले दान गरिसकेपछि नदिएको भए पनि हुने थियो व्यर्थै दिएँ भन्ने विचार उत्पन्न भए अघि दान दिएको पनि व्यर्थै जानेछ। दान गरिसकेपछि पश्चात्ताप रत्तिभर पनि गर्नु हुँदैन। दान गरेको फलले पछिल्लो जन्ममा गरीब कूलमा जन्म हुँदैन।

भिक्षु र लामाहरू आफ्नोमा जे जति छ त्यसमा नै सन्तोष गरेर आफ्नो नित्य धर्म शील आज पूजा गर्ने ध्यान गर्ने गर्नुपर्छ। त्यसो नगरेर व्यापार गर्ने, खेती किशानको काम गर्ने, छलकपट गर्ने, यस्तो कुकर्म गरेर धन सम्पत्ति जम्मा गर्ने गरे धर्ममा बताए अनुसार पालन गरेन भने धर्मले नै नरक लाने काम गर्छ। यस्तो कुकर्म गरे यसमा के सार छ र ? यसकारण लामा र भिक्षुहरू आफ्नो सोझो धर्ममा लीन हुनु आवश्यक छ।

**तोङ्वा छेन्पो - ठूलो प्रकारको दान** - गाई, घोड़ा, हात्ती, घर, जग्गा जमिन, गाड़ी, सुन, चाँदी, हीरा मोती, छोरा, छोरी, स्वास्नी, नोकर-चाकर जो जति पनि आफुलाई चाहिने वस्तुहरू छ ती सबै दान गर्ने ठूलो दान भन्दछन्। हरिशचन्द्र राजाले गर्नु भएको यस्तै दान हो।

**शीन्तु तोङ्वा दान - सर्वश्रेष्ट दान** - आफ्नो शरीरको अंग जस्तै हात खुट्टा, आँखा, मुटु, रगत, मासु, मिर्गौलो यस्तो प्रकारको दान चाहिँ सर्वश्रेष्ठ हो। गौतम बुद्ध पहिलाको जन्ममा राजकुमार बोधिसत्वको रूपमा जन्मेर आफ्नो शरीर बघिनीलाई दान दिएको जग्गा अहिले पनि नेपालमा तामुलइ चिन भनेर प्रसिद्ध छ। नागार्जुनले पनि गौतमीपुत्र राजाको छोरालाई आफ्नो शिर दान दिएको इतिहासमा पाइन्छ। यस्तो प्रकारको दान बोधिसत्वहरूले मात्र गर्न सक्छन्। हामी साधरण मान्छेले गर्नु सक्दैनौं। तगतुङ् भन्ने बोधिसत्वले आफ्नो हड्डीभित्रको मासी पनि दान गरेको इतिहास पाउँछौ। यसकारण अहिले हामी सबैले आफ्नो शरीर, प्राण, घर, धन, सम्पत्ति मनले त्यगेर अरूको निम्ति संकल्प गर्नु पर्छ। पछि यस्तो प्रकारको दान दिन सकोस् भनी प्रार्थना गर्नु पर्छ।

**धर्मको दान** - अरू प्राणीहरूलाई धर्मको प्रवचन गर्ने, अभिशेष गर्ने, उपदेश नीति वाक्य, शिक्षाप्रद गर्ने चाहिँ धर्मको दान हो। यो पनि निस्वार्थ भावनाले दिनुपर्छ। साधु विरालो जस्तो होइन, बाहिरी धर्म गरेको जस्तो भित्री लोभ र स्वार्थ लुकेको। आर्य अतिसालाई चेलाहरूले सोधे - "जनसाधरणलाई जम्मा गरेर धर्म सुनाउने समय कहिले हो ? प्राणीहित अरूको भलाई गर्ने बेला कहिले हो ? अनि प्राणीहित कहिले गर्नु ? लासलाई "फो वा" गर्ने बेला कहिले हो ?" आर्य अतिसाले भन्नु भयो - "जब शून्यताको ज्ञानबोध हुन्छ अनि अभिज्ञान प्राप्त हुन्छ त्यसबेला जनसाधरणलाई भेला गरेर धर्म सुनाउने बेला हो। जब स्वार्थपन हुँदैन त्यसबेला प्राणीहित उपकार गर्ने समय हो। मृत्य लासमा "फो वा " त्यति बेला गर्नु पर्छ जब आफुलाई दर्शनमार्गको ज्ञान प्राप्त हुन्छ। कलियुगमा घमण्डी, अभिमानी आफुलाई खुब इज्जत गरियोस्

भन्ने समय होइन निरन्तर परिश्रम , ध्यान गर्ने समय हो। ठूलो हुने, उच्च आसनमा बस्ने समय होइन, सानु भएर नीच, सबभन्दा तल्लो दर्जामा बस्ने समय हो। नोकर चाकर धेरै चेला राख्ने समय होइन आफु नीर्जन एकान्त स्थानमा बस्ने समय हो। चेलाहरू राखेर पालन पोषन समर्थन गर्ने समय होइन आफ्नो रक्षा र आफ्नै जीविका चलाउने समय हो। वाक्य र शब्द बटुल्ने र रक्षा गर्ने समय होइन अर्थमा विवेक र विचार गर्ने समय हो। यात्री जस्तो घुमिहिँड़ने समय होइन एक स्थानमा बस्ने समय हो।" यस्तो प्रकारको उपदेश दिनु भएको छ। "गेसे त्वेन्पा" भन्ने लामाले पनि यस्तो उपदेश दिनु भएको छ - "प्राणीहरूलाई स्वयं फायदा गर्ने समय होइन आफ्नो क्लेश दोष विचार गरेर रक्षा गर्ने समय हो।" उदाहरण - दवाईको रूख काटने समय होइन तर त्यस रूखलाई रक्षा गरे सबै प्राणीहरूलाई फायदा गर्छ। त्यसरी नै आफ्नो क्लेश र दोषको रक्षा गर्नुपर्छ। यसैले गर्दा धर्म उपदेश अरूलाई दिनु अलिक गाह्रो छ - अरूलाई वेन्दान्त आफूलाई चाहिँ प्राणान्त जस्तो हुन्छ। भगवान् बुद्धले धर्म उपदेश त आफ्नो मन बसमा गराउनुको निम्ति आफूले पालन गर्नु र ध्यान गर्नुको लागि पो प्रचार गर्नु भएको हो। धर्म आफूले नबुझ्नी ज्ञानबोधलाई, धर्मको मूल अर्थमा ध्यान नगरेर अरूलाई धर्म सुनाउने वेद सुनाउने गरे कहाँ काम लाग्छ र ? केही फायदा गर्नु सक्दैनं अरूलाई धर्म सुनाएर उपदेश दिएर धन सम्पत्ति जम्मा गर्ने विषयमा भारतवर्षका सिद्ध महापुरूष "फा दम्बा साङ्गे" ले यसो भन्नु भएको छ "धर्मलाई चिज बिज जस्तो मानेर धर्म बेचेर धन सम्पत्ति कमाउन भनेको यही हो।" जबसम्म स्वार्थ सकिँदैन, निस्वार्थ नभएसम्म धर्म प्रचार गर्नु हुँदैन निस्वार्थ उत्पन्न नभएसम्म मंत्रजप्ने, ध्यान गर्ने, भगवान्‌को वाणी पढ़ेर त्यसलाई

विचार गर्ने, बुद्धका वाणी पढ़े सबै देवहरू भूत प्रेतहरू नाग नगीनी सबैले सुनेर उनीहरूको मन शान्ति भएर जावस् भन्ने प्रार्थना गर्नुपर्छ।

**डरबाट बचाउने दान** – मृत्यु जस्तो ठूलो कुनै डर छैन यस संसारमा। सर्वप्राणीहरूको शरण पर्नेलाई शरण दिने, अनाथको नाथ हुने, अन्यायलाई आफू न्याय भइदिने, लाचार भएकालाई सहायता गर्ने, गुहार माग्नेलाई गुहार दिने यी सब शरण दिने दान हो। यीमध्ये भगवान बुद्धले संस्कारको धर्महरू भन्दा प्राणीको ज्यान बपाइदिएको सर्वश्रेष्ठ धर्म हो भन्नु भएको छ। मार्नु लगेको भेड़ा, बाख्रा, कुखरा, गाई, गोरू, सुङ्गुर, भैंसी, माछा इत्यादि प्राणीहरूको प्राण बचाई दिए अतिठूलो सर्वश्रेष्ठ धर्म हुनेछ। किरा, फटेङग्रा, भूसूना, मच्छर, कमिला, गन्यौला, चरा चुरूङ्गी, जुम्रा, उपियाँ, उडुस, जुगा इत्यादि सबै प्राणीहरू नमारेर बरू मार्नु आँटिकोबाट कसैले मार्दै छ भने पनि ती कीराहरूलाई बचाइदिए ठूलो धर्म हुनेछ। यसरी मार्न लागेको कुखरा, पाठा आदि आफुले किनेर प्राण बचाइदिए सबभन्दा श्रेष्ठ धर्म हुनेछ, प्राणीहरूको प्राण बचाई दिनसके आफ्नो पनि आयु बढ़नेछ, आफ्नो चित्ता उपकारको निम्ति पनि प्राणीहरूको प्राण बचाई दिए यो जस्तो ठूलो चित्त उपकार अरू हुने छैन। मृत आत्माहरू दुर्गति नरक, प्रेत र पशुलोकमा जन्म भएको भए, यदि उनीहरूको नाममा प्राणीहरूको प्राण बचाइदिए, प्राण दान दिए मृत आत्मा दुर्गतिबाट मुक्ति भएर स्वर्गलोकमा जन्म लिनेछ। गुह्य तांत्रिक धर्मको मूल धर्म नै प्राणीको उपकार तथा प्राणीको प्राण दान भएको हुनाले अहिले हाम्रा पूज्यनीय गुरु ज्याठल साङ्गे दोर्जे रिन्पोछेले (सालबारी र जोर बंगला निवासी) पनि माछाको प्राणदान मूलधर्म गर्नु भएको छ। पोहर साल छ दिसेम्बर (6 December) 1993 सालमा कलकत्ताको हुगली नदीमा रिन्पोछे साङ्गे

दोर्जे ज्यूले तीन लाख पचपन्न हजार रूपियाँको तेह्र ट्रक माछाको प्राणदान गर्नुभयो। त्यस दिन घाममा पनि इन्द्रेनी लागेको थियो। यस्तो अचम्भ प्रकारको दिन भएको थियो। वहाँले अरू पनि सिलगढ़ी बजारबाट माछा किनेर टिस्टा नदीमा माछाको प्राणदान दिइसक्नु भएको छ। यसकारण हामी सबैले अरू प्राणीको जीवनदान दिने अभ्यास गर्नुपर्छ। सानु कीरा खुट्टाले नकुल्चेर त्यस कीरालाई बचाईदिए पनि प्राणदान हुनेछ। भूइँमा जाँदै गरेको कीरा छ भने त्यसलाई नमर्ने गरी उठाएर कतै राखी दिए त्यो पनि प्राणदान हुन्छ। पानी या नदी तारेर कसैलाई पार गर्ने, भीर पहाड़मा पार गरी दिए पनि प्राणदान हो यसरी अरू प्राणीहरूको डरबाट बचाउने सहायता गरे उत्तम हो। चोर डाकुको डरबाट बचाइदिए त्यो पनि प्राणदान नै हो। दान गरेको फल यो लोक र परलोक दुइ लोकमा नै फायदा हुन्छ। अहिले दान गरे यसको फल जबसम्म बुद्धज्ञान प्राप्त हुँदैन त्यति जन्मसम्म नै पाइरहन्छ। यस लोकमा पूण्य बढ़ेर आफ्नो धन सम्पत्तिको बृद्धि हुन्छ, जे जस्तो इच्छा गर्छ ती सबै जुटिएर परिपूर्ण हुन्छ। परलोकमा यो भन्दा ज्यादा फल पाउँछ। अहिले हामी धनी भएको पूर्वजन्ममा दान गरेको फल हो। अहिले हामीले दान गरेनौ भने परलोकमा कहाँबाट धन सम्पत्ति पाउछौं र ? पाउन सक्दैनौं। पूर्वजन्मको दानको पूण्यले अहिले धनी भयौं, अहिले धनी हुँदा दान गर्नु सकेनौं भने पछि परलोकमा कहाँ धनी हुन्छौं र ? खेतमा विऊ नरोपे फल कहाँबाट हुन्छ र ? विऊ रोपे जस्तो दान गर्नुपर्छ परलोकको निम्ति। बोधिसत्वहरू जस्तै हामीले पनि शरीर दान दिने घरिघरि सम्फनु पर्छ। गरीब भएको कारण पनि पूर्वजन्म दान नगरेको फल हो। दान नगरेर चोरी गरेको फल गरीब भएर जन्म लिनुपर्छ। यसकारण गरीब भन्दा गरीबले पनि एक थोपा

पानी भए पनि, एउटा फूल भएपनि दान गरेर पूण्यको विऊ रोप्नु असल हो। स्वच्छ र सफा निस्वार्थ भावनाले दान गरे चाँढै बुद्धज्ञान प्राप्त गर्न सकिन्छ। आफ्नो धन सम्पत्ति हराए, चोरी भए, कसैले ऋण लगेर नदिए दुःख मान्नु हुँदैन। यी लानेहरू सबै आफ्नो पूर्वजन्मको माता पिता हुन् भनी सन्तोष गर्नुपर्छ। यसरी आफ्नो धन चोरी भए, हराए, ऋण नपाए अघि पूर्वजन्मका ऋण तिरेको हो भनी प्रसन्न र खुशी हुनपर्छ। मेरो धन चोरी भयो, हरायो, ऋण उठेन भनी मनमा पश्चताप गरेर दुःखी भए हामीले प्राणीहित कसरी गर्नु सक्छौं र ? अघिका बुद्धहरूले प्राणीहितको निम्ति आफ्नो शरीर समेत दान गर्नु भएको छ हामी यति धन सम्पत्ति हराउँदा नै अफसोस माने दुःखी माने कसरी हुन्छ ? दान दिँदा अनुहार कालो पारेर दिनु हुँदैन। आफुखुशी भएर स्वच्छ मनले दिनु पर्छ। अरूले दान दिँदा पनि आफूले बाधा दिनु हुँदैन। दान दिँदा ज्याँदा भयो भनि भन्नु पनि हुँदैन, टेड़ो आँखाले पनि हेर्नु हुँदैन। दान दिँदा नराम्रो वचन र गाली गर्नु हुँदैन। आफूखुशी भएर दुइ हातले श्रद्धासाथ दान गर्नुपर्छ। स्वार्थ त्यागेर प्राणीहितको निम्ति कुशल धर्म र अकूशल धर्मको विषय बताइदिए, अविशेष दीक्षा दिई धर्मग्रन्थको अर्थ सुनाइदिए प्राणीहरूको मन पाकेर ज्ञानबोध भए त्यसलाई धर्मको दान भन्दछ। शत्रु, दुश्मन, डाकु, बाघ, भालु, हिसक जन्तुहरूको पञ्जाबाट बचाएर प्राणीहरूलाई प्राणदान दिएर मृत्युबाट मुक्ति गराइदिए, पानी, खोला या नदीबाट पार तारिदिए, शरण नभएकोलाई शरण दिई, सहारा नभएकोलाई सहारा दिई, अनाथहरूको नाथ भइदिए यी सबै डरबाट बचाइदिएको दान हो।

**शीलपारामिताको विषय -**

दोस्रो शील पालन गर्नु पर्ने अंगमा मुख्य तीन प्रकारको छ। यसैको साथ साथमा प्रतिमोक्षको शीलको विषय छोटकरीमा यस प्रकार छ –

**प्रथम दुष्टाचरण** – सबै कुवाणी त्यागेर सुवाणी, राम्रो चरित्र पालन गर्नेलाई शील भन्दछ। मुख्य दश अकुशल कर्म त्यागेर दश कुशल कर्म गर्नु साधरण प्रकारले धर्म हो। शील पालन गर्दा पनि बोधिचित छ छैन त्यसको विवेक र विचार गर्नुपर्छ। प्रथम दुष्टाचरण दश अकुशल कर्म विष छोड़ेको जस्तो छोड़नु पर्छ।

**दोस्रो कुशल कर्म गर्ने विषय** – ज्ञान सुनेर, विचार गरेर यसरी ज्ञानको शिक्षा पाएर त्यसलाई साधन गर्नु नीर्जन जग्गामा जानुपर्छ। आफ्नो गुरुको नोकरी चाकरी गर्ने गर्नुपर्छ। गुरुलाई सेवा गर्ने, जे जति हुन्छ गुरुलाई सेवाको सामाग्रीहरू चढ़ाउनुपर्छ। एक जग्गामा बसेर ध्यान गर्नुपर्छ यसरी ध्यान गर्दा धर्म बढ़ेर जानेछ। आफ्नो दोष कम्ति भएर जानेछ। गुण बढ़ेर जानेछ। विमारीहरूलाई स्याहर सुसार गर्नुपर्छ, उसको सेवा गरे पूण्य हुनेछ। विमारीहरूको उपचार गरे उत्तम हुनेछ। कञ्जुसपन त्यागेर दान गर्नु पर्नेछ। अरू मानिसको गुण गाउन पर्नेछ। अरूले धर्म गरेको इर्ष्या नगरेर धर्म गरेकोमा प्रसन्न हुनुपर्छ। जुनै कुशल कर्म गरे पनि बोधिचित्तको भावना हुन पर्दछ। नराम्रो आईलागे सहनु पर्नेछ। कुशल कर्म गरेर सर्व प्राणीहरूको निम्ति प्रार्थना गर्नुपर्छ। त्रिरत्नको पूजा आदि गर्ने कोशिश गर्नुपर्छ। यसरी कुशल कर्म गर्दा आफ्नो स्मृति र ज्ञात वा ज्ञानले आफ्नो इन्द्रियहरूको कर्म रक्षा गर्नुपर्छ। कुशल कर्म सानु भए पनि गर्नु पर्छ। गृहस्थीहरूको उखानमा पनि भनिन्छ "ख्याल ख्यालमा धर्म गर्नु पाप

चाँहि खाँदा बस्दा विष छाड़ेको जस्तो त्याग्नु" भनेर। सधैं **नै स्मृति र** ज्ञातको ध्यान राखेर त्याग्नुपर्ने कुकर्म अनि लिनु पर्ने कुशलकर्म। खेलठट्टासम्मको सानु पाप तथा कुकर्म गर्नु हुँदैन। यही सानु पाप बड़ेर ठूलो रूप लिनेछ कस्तो भने आगोको सानु फिल्कोले पनि परालको पर्वत सबै खरानी बनाइदिनेछ। बाटोमा जाँदा पनि चैत्य वा कुनै धर्मस्थान या म्हाणी मंत्र लेखिएकोसम्म भए पनि श्रदा गरि परिक्रमा गर्नु उत्तम हो। सानु भनेर कुशल कर्म वा धर्मलाई लत्याउनु हुँदैन, यो सानु कुशल कर्मले के हुन्छ भनेर त्याग्नु हुँदैन, जसरी एकएक **थोपा** पानी जम्मा गरे ठूलो भाँड़ा भरिन्छ त्यसरी नै सानु सानु **धर्म जम्मा** भएर धेरै कुशल कर्म हुनेछ। उहिले एउटा सुङ्गुरले अन्जानमा **चैत्य** घुम्दा त त्यसको फलले बुद्धज्ञान प्राप्त गर्ने विऊ भयो। यसरी शील पालन गरेर प्राणीहरूको उद्धार र हितको निम्ति सधैं प्रार्थना गर्नु पर्छ। सबै धर्मको निचोड़ षष्टापारामिता नै मुख्य हुन भनी भगवान् बुद्धका पुत्रहरूले गरी अचरणको सार बताउनु भएको छ।

**तेस्रो प्राणी उद्धारको विषय** – अघि बताए झैं आफ्नो तृष्णा र इच्छा जरैबाट उखेलेर अरू प्राणीको हित र भलाई प्रत्यक्षरूपमा गर्नुपर्छ। प्राणीहरूलाई धर्ममा ल्याउनका निम्ति चारप्रकारको उपाय चाहिन्छ। प्रथम – जसलाई जस्तो इच्छा छ, विचार छ त्यस्तै प्रकारको दान दिएर खुशी बनाउनु पर्छ। दोस्रो – **मानिसहरू** भेटदा मिठो वचन गर्नुपर्छ। तेस्रो – **प्राणीहरू वा मानिसहरूलाई धर्म गर्नु सिकाएर धर्म** गरे सुख हुन्छ, पाप **अकुशल** कर्म गरे दुःख हुन्छ **भनी ग्रन्थमा बताए** अनुसार दश अकुशल कर्म त्याग्नु सिकाएर दश कुशल धर्म अपनाउनु लगाएर जसरी हुन्छ राम्रो राम्रो वचन भनेर मिठो मिठो खाना दिएर खुशी बनाएर धर्म सिकाउनु पर्छ। प्रथम धर्मको मार्गमा लाग्नेहरूलाई

सजिलोसंग धर्म गर्नु सक्ने सिकाउनु पर्छ, उनीहरूको मन फर्काउनु पर्छ। कर्मफलको विषय सुनाएर अलि अलि पूण्य जम्मा गर्नु लगाउनु पर्छ। विस्तारैसित कस्तो उपायले हुन्छ धर्मको मार्गमा ल्याउनु पर्छ।

**चौथो** - आफूले पनि पाप छोड्नुपर्छ राम्रो अचरण गर्ने। दुष्टाचरण त्याग्नु पर्छ। सधैं धर्ममा लीन भएर बस्नु पर्छ। प्राणीहरूको उद्धारको निम्ति, उनीहरूका मन फर्काउनुका निम्ति आफ्नो आफ्नो इच्छा अनुसारको धर्म दिनुपर्छ। प्राणीहरूको आफ्नो आफ्नो बुद्धि र प्रज्ञानुसार धर्म दिनपर्छ। अरू प्राणीको निम्ति "म थाकेको छु, म सक्दिनँ" भन्नु हुँदैन। मानिसको चरित्र आँपको नमूनामा यस प्रकारले बताइएको छ - आँप बाहिरी पनि काँचो भित्र पनि काँचो, बाहिरी पाकेको भित्र काँचो, बाहिरी काँचो भित्र पाकेको, बाहिरी पनि पाकेको भित्र पनि पाकेको। यी चार प्रकारमा अन्तिम उत्तम हो, तेस्रो चाहिँ मध्यम, दोस्रो र प्रथम चाहिँ दुष्टाचरण मानिन्छ। आँप हेर्दा पनि काँचो भए कसैले रूचि गर्दैन भित्र पनि काँचो भए खाना पनि सक्दैन, त्यस्तै नै मानिस बाहिरी चरित्र पनि नराम्रो भित्री विचार र मन पनि दुष्ट भए कसैले मन पराउँदैन। आप बाहिरी पाकेको भए हामी सबैले मन पराउँछौ। जब ल्याएर भित्र काँचो भए त्यसलाई फ्याँकिदिन्छौ, त्यस्तै नै मानसिको रूप पनि वाहिरी चालन चलन अति राम्रो, शील पालन गरेको, वस्त्र पनि भिक्षुको लगाएको बाहिरी पाकेको आँप जस्तो उसको मन, विचार दुष्ट नराम्रो लोभी, अभिमानी भए यस्तो प्रकारको दोष देखापरे मानिसहरूले छिः छिः दूर दूर गर्छन्। साधु विरालो झैं भन्छन्। बाहिरी धर्मवस्त्र लगाएर भित्र विषालु सर्प झैं भए यो त अति नराम्रो हो मुखमा राम राम बगलीमा छुरा भने झैं हो। यस्तो प्रकारको धर्म गर्नेहरूले धर्मको प्रवचन गरे अरूलाई वेदान्त

आफूलाई चाहिँ प्राणान्त भने झैं हुन्छ। यस्तोको संगत पनि गर्नु हुँदैन, धर्म सुनाए पनि प्राणीको भलाई हुनेछैन कारण उसको मनमा बोधिचित्ताको गन्ध पनि नभएको हुनाले स्वार्थीपन लुकेको हुनाले प्राणीहरूको उद्धार गर्नु सक्दैन। वाहिरी काँचो भित्र पाकेको जस्तो कस्तो भने वाहिरी नराम्रो, गृहस्थी भएको भित्र मन अति राम्रो पाकेको अरूको भलाई गर्ने हुन। हेर्दा गृहस्थी जस्तो भित्र मन वोधिचित्त भएको हो। यस्तो प्रकारको चरित्र भए राम्रो हो। बाहिरी पनि भिक्षु लामा ब्रह्मण आदिको शील ग्रहण भएको भित्र मन र विचार पनि निस्वार्थ भावना र बोधिचित्त भएको हुनु पर्छ। यस्तो प्रकारको चरित्र भए अरू प्राणीहरूको भलाई उपकार गर्नु सकिन्छ। यसकारण आफू पनि यस्तै प्रकारको सर्वश्रेष्ठ चरित्रवान भएर प्राणीहरूको भलाई गर्नुपर्छ। अन्जान लाटो, मूर्ख, प्राणीहरूलाई धर्मको मार्ग देखाउँदा जति दुःख पाए पनि दुःख नमानी प्राणी कल्याणको काम गर्नु पर्नेछ। प्रबज्रक भिक्षु र भिक्षुनी जो भए तापनि शील ठीक रूपले पालन गर्नु पर्छ। मनमा राग र द्वेष बड़ाउने, नराम्रो बातचित गर्ने, वाहिरी चाल चलन नराम्रो गर्ने, खेलठट्टासम्म पनि यी सब त्याग्नुपर्छ। प्रथम शुद्ध शील पालन गर्नु पर्छ। भगवान् बुद्धले वाणी गर्नु भएको अनुसार शील नष्ट गराउने विघ्न बाधा धेरै आइलाग्नेछ। मुख्य निशापान र स्त्रीको वाधा अति डरलाग्दो हो। उहिले एक समयमा एउटा शीलवान भिक्षु थिए। तिनलाई एकजना स्त्रीले खुब मन पराउँथे। यसरी मन पराउँदा एक दिन त्यस भिक्षुकहाँ गएर यसो भनिछ – "भिक्षु जी तिमीलाई म तीन कुरो चड़ाउँछु कुनै एक न एक तिमीले ग्रहण गर्नु

पर्छ नत्र भने म तिम्रो अघि झुण्डिएर मर्नेछु। १) तिमीले मलाई विह गर्नुपर्छ, २) यो निशा पिउनु पर्छ ३) यो खमी काटनु पर्छ।" यी तीनवटा भिक्षुको शीलदेखि भङ्ग हुने कर्म हुन्, अब त्यस भिक्षुले कुनै एक ग्रहण नगरे त्यो स्त्री मर्ने डरले भिक्षुले यस्तो विचार गरे - म भिक्षु भएर यो आइमाईलाई विहा गरे मेरो शील नष्ट हुनेछ, प्राणी हत्या त झन गर्नु नै भएन, यो निशा पिए एक क्षण त हो केही हुँदैन भनी निशा पिए, निशा पिएपछि निशाको मदले गर्दा खमी पनि काटे, स्त्रीलाई विहा पनि गरे। यसकारण स्त्री र निशा अति डरलाग्दो हो अनि भिक्षुले शीतसम्मको एक थोपा पनि निशा गर्नु हुँदैन। यसरी आफु खुशी हुने, मनोरञ्जनका वस्तु सबै त्याग्नुपर्छ। भिक्षुनी भए पुरूषदेखि अलग बस्नु पर्छ। स्त्री वा पुरूषको गन्धसम्मले तृष्ण बड़ेर आउने हुनाले दुवै त्याग्नुपर्छ। यसरी शील भङ्ग कहिले हुन्छ त्यो भन्नु सकिन्दैन। शील भङ्ग भए शील भएको भिक्षु र भङ्ग गराउने स्त्री या पुरूष दुई नरकमा जन्म लिनेछ। सुत्र पिटकमा यस्तो बताइएको छ "कुनै भिक्षु वा भिक्षुणीसंग कुनै एक्लो स्त्री या पुरूष बस्नु हुँदैन" शील भएको भिक्षुणीले झन अति ज्यादा शीलको रक्षा गर्नु पर्नेछ, कारण कोढ़ लागेको मान्छे आगोको छेऊमा गए कोढ़को कीराहरू चल्छ यसरी कीरा चल्दा आफुलाई चिलाउँछ, अनि कनाउँदा झन मिठो भएर कनाएको कनाएकै गर्नु मन लाग्छ। त्यस्तै नै भिक्षुणीहरू पनि एक पल्ट पुरूषको स्पर्श भए सुखको अनुभव भएर सधैं सुख पाउने इच्छा हुन्छ, त्यसकारण पहिलाबाटै सतर्क रहनु पर्दछ। आफ्नो शील आफ्नो आँखाको नानी जस्तो रक्षा गर्नुपर्छ। शील भङ्ग नहुने सधैं कोशिश

गर्नुपर्छ। कुनै पर्वत चढ्नु परे दुइ हातको जसरी जरूरत पर्छ, हात नभए पवर्त चढ्न सक्दैन त्यसरी नै बुद्धज्ञान प्राप्त गर्नुको निम्ति शील विना हुँदैन। शील चाहिँ हात जस्तो हो।

**वीर्यपारामिताको विषय -**

तेस्रो वीर्यपारामिता तीन प्रकारको हुन्छ १) अरूले जे जसो भने पनि सहने। २) धर्मको विषयमा दुःख सहने। ३) शून्यताको ज्ञानको विषयमा नडराउने। यी तीनमध्ये मेलैसंग यसप्रकारले वर्णन गरिन्छ - १) आफूलाई कुटे पनि, कुटन आए पनि, नराम्रो नराम्रो शब्द भने पनि, आफ्नो निन्दा गरे पनि, आफूलाई जे जसो गरे पनि आफू रिसाउनु हुँदैन, द्वेष गर्नु हुँदैन। रिस र द्वेष नगरेर उल्टो दया, माया र करूणाको दृष्टिले हेरेर अझैं उनीहरूलाई फायदा गरी दिनुपर्छ। यसरी सहनु नसकेर रिसको वशमा परि झगड़ा गऱ्यो भने, रिस गऱ्यो भने अघि पर्वत बराबर पूण्य र धर्म गरेको छ भने पनि सबै नष्ट गरिदिन्छ। परालको पर्वत भए पनि सानु आगोको झिल्कोले सबै नाश गरि खरानी बनाइदिए जस्तो सबै पूण्य नष्ट गरेर पछि रिस गरेको फलले नरकमा जन्म लिनुपर्छ। सहनु जस्तो ठूलो धर्म कुनै छैन। रिस जस्तो पाप ठूलो पनि कुनै छैन। सहनु जस्तो अरू कुनै तपस्या छैन। रिस गरे राम्रो होइन यसको कारणले नरकमा जन्म लिनुपर्नेछ भन्ने स्मृति गरेर सधैँ सहने कोशिश गर्नुपर्छ। एकहजार कल्प गरेको पूण्य पनि एउटै रिसको कारणले सबै नष्ट गरिदिन्छ। जसरी हजार लिटर दुध पनि एक थोपा विष या कुनै अमिलो चिज परे सबै नष्ट भएर जान्छ त्यसरी नै सानु रिसको कारणले सबै धर्म र पूण्य नष्ट गरिदिन्छ। यसरी रिस

गरे आफ्नो पनि धर्म नष्ट हुन्छ अर्काको पनि धर्म नष्ट गराइदिन्छ। रिस गरेर झगड़ा गर्नेहरू कहिले विजय हुँदैनन्। रिस गर्ने, झगड़ा गर्नेहरूका घरमा पनि शान्ति हुँदैन, अशुभ कुलक्षण भएर जान्छ। फेरि गाउँ घरमा पनि अशुभ नराम्रो चिनो अलक्षिण हुन्छ। सधैँ रिस गरे, झगड़ा गरे कहिले राम्रो हुने छैन। यस जीवनमा आफु नाश भएर जानेछ पछि परलोकमा पनि नरकमा जन्म लिनुपर्नेछ। आफूले शत्रु सबै नाश गर्छु भनेर झगड़ा र लड़ाई गरे कहिले पनि विजय पाउन सक्दैन। एक शत्रुमाथि विजय भए अर्को फेरि त्यही शत्रुको छोरा, शाखा सन्तान, इष्टमित्रहरू आफ्नो शुत्र हुनेछ। एक शत्रु वशमा गरे सय शत्रु बड़ेर जानेछ। यसकारण सबभन्दा उत्तम उपाय सहनशीलता हो। यो पृथिवी वराबर छालाले यो संसारभरि बिछ्याउँछु भनेर नचित्ताए पनि हुन्छ कारण यस पृथिवीभरको छाला कहाँबाट ल्याउन सकिन्छ ? तर उपाय गरे यो सारा संसार सानु टुक्रा छालाले ढाक्नु सकिन्छ कसरी भने आफूले लगाएको जुत्ताको छालाले। आफु दिनभर कति हिँड़छ आफूले टेकेको पाइला बराबर जम्मा गरे, यसरी आफ्नो पाइला टेकेको वर्ष दिनमा कति हुन्छ ? ती सबै जम्मा गरेर फिँजाए यो सारा संसार ढाकिन्छ। यस्तै प्रकारले सबै शत्रुलाई नाश गर्छु भनेर कहाँ सकिन्छ र ? एउटा विशाल छालाले एकैचोटि पृथिवी ढाक्न त असम्भव हो तर विस्तार विस्तार गरेर एकै टुक्रा जुत्ताको छालाले जसरी सारा संसार ढाक्न सक्छ त्यसरी नै एक सानु सहनशीलता पालन गर्नसके सबै शत्रु वशमा पार्नु सकिन्छ। शत्रु आएर आफूलाई अनेक प्रकारको वचन भने पनि आफुले सहेर केही रिस नगरी चुपचाप बसे उसले के गर्न सक्छ र ? एक समय भगवान बुद्धकहाँ एउटा मान्छे आएर वहाँलाई

नराम्रो वचन भने, "तँ ढोङ्गी, मानिसको मनमा मोहनी लगाउने तेरो के शक्ति छ" इत्यादि भन्दै कठोर शब्द गर्दै नीच वचन गरी गाली गरे। यसरी भगवान् बुद्धलाई कटु वचन गर्दा वहाँका चेलाहरूले वहाँलाई विन्ति गरे "हजुर हामीलाई आज्ञा दिनु हवस् हामी यस मानिसलाई खेदिदिन्छौ। तब भगवान् बुद्धले भन्नु भयो - "केही नगर्नू, चुप लागेर मात्र बस्नू।" यसरी त्यो मानिस कराउँदा कराउँदा थाकेर त्यहीं बसे। यसरी थाकेर बसेको देख्दा भगवान् बुद्धले तिनीलाई एउटा प्रश्न गर्नु भयो "कुनै मानिसले कसैलाई कुनै एक उपहार दिँदा त्यस मानिसले लिन अस्वीकार गरे त्यो उपहार कसको हुन्छ ?" यस्तो प्रश्न सुन्दा त्यस मानिसले सजिलैसंग उत्तर दिए - "त्यही उपहार दिने मानिसकै हुन्छ।" भगवान् बुद्धले भन्नु भयो - "त्यस्तै गरी मैले पनि तिमीले दिएको उपहार अस्वीकार गरी दिएँ। तिमी प्रति कुनै रिस नगरी र जवाब नदिई त्यो तिमीले कुवचन भनेको पनि तिम्रै भयो।" यस्तो प्रकारले सहनु अभ्यास गर्नुपर्छ। रिस र द्वेष जस्तो पाप अरू के छ र ? तृष्णाको कारणले गरेको पाप एकसय भए पनि त्यो भन्दा ठूलो एउटै रिसको कारणले भएको पाप ठूलो हुन्छ। यसकारण आफूले धेरै परिश्रम गरेर सञ्चय गरेको पूण्य र धर्म एउटै रिसले नष्ट हुनेछ भनी स्मृति राखेर आफूमा उत्पत्ति हुने रिस त्याग्नुपर्छ। आकाशमा ढुंगा फ्याँके ढुङ्गा आकाशमा अल्झनु सक्दैन। धरतीमा नै झरेर आफ्नै टाउकोमा लाग्नेछ। यसरी नै आफूलाई नराम्रो गर्ने, इर्ष्या गर्नेको कारण आफैले आकाशमा ढुङ्गा फ्याँके झैं आफ्नै पूर्वजन्मको कर्मको फल हो भनी जान्नुपर्छ अनि उनीहरूलाई नराम्रो गर्नु हुँदै न, अझै दया, माया र

करूणा गर्नुपर्छ। यी सब पूर्वजन्मको नराम्रो कर्मफलको ऋण तिरेको हो। यसरी ऋण तिरे आफूलाई बाँकी लाग्ने छैन। आफूलाई जति नराम्रो गरे, निन्दा गरे वा इर्ष्या जे गरे तापनि पूर्वजन्मको कर्मफल सकिएर जानेछ। यसरी हाम्रो पूर्वजन्मको नराम्रो कर्मको फल सकिदिएको हुनाले ती शत्रुहरूलाई ठूलो गुणकारी सम्झनु पर्छ। यी शत्रुहरूले हामीलाई नराम्रो नगरे, इर्ष्या नगरे, हाम्रो कर्मको फल अझै ठूलो ठूलो भएर जाने थियो। जति छिटो कर्मको फल भोग्न सकिन्छ त्यति कम्ति भएर जानेछ।

*उदाहरण* - कुनै सानु घाउ भए त्यसलाइ उपचार नगरे त्यो फैलिएर ठूलो ठूलो भएर प्राणसम्म पनि जान सकिन्छ तर त्यो सानु छँदै ठीक रूपले उपचार गरे त्यो निको भएर जानेछ। त्यस्तै हो कर्मको फल पनि, जति पुरानो हुँदै जान्छ त्यति नै छिप्पिँदै जान्छ। ऋण जस्तो हो, ऋण जति ढिलो तिर्‍यो त्यति ज्यादा सुद तिर्नपर्छ। आफूले जति ऋण लिएको छ त्यो भन्दा दश गुण ज्यादा सुद तिर्नपर्छ विलम्ब भएमा। कुनै सरूवा रोग फैँजिए भने त्यस रोगले धेरै मानिस, पशु प्राणीहरूको प्राण जानसक्छ। त्यस रोगलाई जति छिटो रोकथाम गर्न सक्यो उति नै प्राणीको उपकार हुनेछ। नराम्रो कर्मको फल पनि सरूवा रोग जस्तै नै हो। आफूलाई शत्रु लागे, नराम्रो वचन, डाह, इर्ष्या इत्यादि सबै नै अघि जन्ममा आफैले रोपेको कर्मफल हो र अहिले त्यसको दुःख भोग्न परेको हो। यसरी हामीलाई शत्रु लागे, कुनै नराम्रो आपत विपत आई लागे, रोगी विमारी भए खुशी भएर सहनु पर्छ कारण अहिले यस्तो दुःख भए आफ्नो नराम्रो कर्म सकिएर जानेछ, फेरि फेरि भोग्न

पर्ने छैन भनी शत्रुहरूलाई प्रेम र दया गर्नुपर्छ। यदि आफूलाई विगार्ने, नराम्रो गर्ने शत्रु नभए हामीले सहनुको लागि कुनै बस्तु नै रहँदैन। शत्रु नलागे हामीलाई नराम्रो गर्ने नभए हाम्रो पूर्वजन्मको नराम्रो कर्मको फल कसरी काटने ? त्यसकारण शत्रुलाई आफ्नो गुरु जस्तो मान्नुपर्छ। शत्रु कै कारणले गर्दा आफ्नो कुकर्मको फल नाश भएर जानेछ भनी शत्रुलाई प्रेम, दया र करूणा गर्नुपर्छ। "फा दम्पे साङ्गेले" यसो भन्नु भएको छ- "रिस र शत्रु पूर्वजन्मको फल हो।" अहिले सुख भए पनि पूर्वजन्मको सुकर्मको फल हो यो पनि सकिएर जानेछ। दुःख पनि पूर्वजन्मको कुकर्मको फल हो, सकिएर जानेछ। सुख भयो, सुख पायो भनेर त्यति कै मौज मज्जा गरेर जीवन बिताए अर्कोजन्म या परलोकको निम्ति सुखको सुकर्म नगरे विऊ विना फूल कहाँ हुन्छ ? पोहर साल रोपेको अन्न अर्को सालको निम्ति विऊ नराखी सबै खाए अर्को पालि अन्न कहाँ हुन्छ ? त्यस्तै नै सुख भए पनि सकिन्छ दुःख भए पनि सकिन्छ। दुःखपछि सुख आउँछ, सुखपछि दुःख। यी सब आफ्नो आफ्नो कर्मको फल हो। कसैले दिएको होइन। हिज आज मानिसहरूले भन्छन्- "त्यो लामा, त्यो गुरुजी, त्यो पण्डित, त्यो भिक्षु आदि खुबै राम्रो छ तर रिस डरलाग्दो छ है" - यस्तो रिसौलो लामा, पण्डित, भिक्षु या गुरुजी जुनै भए तापनि कसरी राम्रो भन्नु ? तृष्णाबाट एकसय पाप भए पनि रिसबाट एक पाप भए त्यो ठूलो हो। रिसको कारणले मानिसले हत्यासम्म पनि गरिदिन्छ। त्यसकारण धर्म गर्नेहरू रूवामा बसे जस्तो हुनुपर्छ, शरीर, वचन र मनले रिस नगरेर रूवामा बसे झैं चाल नपाएको जस्तो गर्नुपर्छ। दाल वा चामलको खोले उम्लिएर माथि आउँदा सानु घिऊ हाले त्यो नपोखिएर फरि घटेर तल जान्छ हामी पनि त्यस्तै हुनपर्छ रिस उठे त्यसलाई घिऊ हाले झैं सहनु पर्छ अनि मन शान्ती बनाउनु

पर्छ। म यस्तो धर्म गर्छु, उस्तो धर्म गर्छु, मैले यति जानेको छु भनी घमण्ड गर्नु हुँदैन। अरूको एउटा सानु सियो पनि मलाई पाए त हुन्थ्यो, मलाई स्तुति र राम्रो गरे हुन्थ्यो, मलाई इज्जत र मान गरियोस् भन्ने धर्म र आफ्नो विचार अलग भएको हुनाले गर्दा आफूले धर्म गरेकोले आफुलाई फायदा नभएको चिनो हो। आफ्नो ताकत कमजोर भएर जाँदा कमजोर, हुँदा अर्काले आफुलाई हिर्काए पनि, रिस गरे पनि, आफ्नो टाउको काटिदिए पनि, हात, खुट्टा काटिदिए पनि, संसारभर कै मानिस धुरिएर आईलागे पनि आफूले सहनु पर्छ। यसरी आफूलाई नराम्रो गर्ने शत्रुहरूलाई रिस नगरेर उनीहरूलाई दया, मैत्री र करूणाको दृष्टिले सधैं फायदा हुने काम गर्नु पर्छ। यसकारण हामीहरू सधैं सानु भएर बस्नु पर्छ, फाटेको लुगा लगाएर, खाना जस्तो पाए पनि मिठो नमिठो त्यसैमा संतोष गर्नु पर्छ। खाना मिठो मिठो मात्र रूचि गर्रे परलोकमा यसको फल माछा भएर बल्सीमा परेर मर्नु पर्नेछ, आँखा रूपमा भुलेको कारणले पुतली भएर बत्तीमा मर्नु पर्नेछ, शरीरमा लुगा राम्रो लगाउनमा भुले हात्ती भएर दलदल मर्नु पर्नेछ, कानको इन्द्रिय राम्रो राम्रो बाजा, गीत आदिमा भुले मृग भएर शिकारीको अवाजमा भुलिएर मर्नु पर्नेछ, नाक गन्धमा भुले मौरी, कीरा, फूल भित्र मर्नु पर्ने हुन्छ। त्यो कीरा फूलमाथि बस्नसाथ फूलको पत्रदल बन्द भएर आउँछ र त्यो कीरा फूलभित्र नै मर्नु पर्नेछ। ठीक रूपले ध्यान, समाधि र शील पालन गर्नु उचित छ। यसरी रिसलाई नत्यागेर कुरा मात्र ज्यादा गर्ने मनमा फायदा गराउने शील र समाधि हो, उच्च उच्चको सिद्धान्त लिएर भावना गर्छु भन्ने, रिसको स्वभाव नजानी ध्यान गर्छु भन्ने अनि ध्यान गर्नेहरू भन्दा पनि उच्च सर्वश्रेष्ठ चाहिँ रिस त्यागेर सहनुको ध्यान गर्ने हो। सहेर मात्र पनि बुद्धज्ञान प्राप्त गर्न सकिन्छ।

**दोस्रो धर्मको निम्ति सहनु पर्ने विषय -**

सत् धर्म गर्दा आफ्नो सुख सबै त्याग्नु पर्छ र भए भरको दुःख आफूले सहनु पर्छ। आफ्नो शरीरभरि दुःखको निशान बनाउनु पर्छ। सबैको दुःख आफुले लिने गर्नुपर्छ। धर्मको निम्ति भोक, तिर्खा, राम्रो, मिठो, आराम सबै त्यागी, दिनको खाना, रातको निद्रा कुनै कुरोको वास्ता नगरी धर्मको मार्गमा लाग्नु पर्छ। आफ्नो शरीरमा सधैं दुःख कष्टको धारा अटुट भए पनि आफूले यस्तो ध्यान गर्नुपर्छ कि आफूलाई अहिले जुन दुःख कष्ट छ त्यस्तो दुःख कष्ट संसारमा सर्व प्राणीहरूले भोग्दै छन्, यस्तो सहनु नसक्ने दुःख कष्ट आफुलाई पर्दा कस्तो हुँदा रहेछ त्यस्तै दुःख कष्ट सर्व प्राणीहरूलाई आईलागेको छ भनी प्राणीहरूमाथि कृपा र करूणा उत्पन्न भएर आँखाबाट आँसुको धारा अटुट बर्साउनु पर्छ, प्राणीको दुःख सम्फेर मनमा सन्ताप र शोक अटुट हुन पर्छ। यस्तो दुःख र कष्ट सम्फेर यस जीवनको सुख र आरामको इच्छा रतिभर नगरी धर्मको निम्ति सहनु पर्छ। आफ्नो मुटुमा काँड़ा घोंचेको जस्तो दुःख र पीर सम्फेर यो संसारको सुख त्यागेर प्राणीहितको निम्ति धर्म गर्नुपर्छ। उहिलेका "महात्मा ज्योबो का दम्पा" भन्नु हुन्थे - "आन्तरिक हृदयले धर्म ग्रहण गर्नु पर्छ, धर्म ग्रहण गर्दा गरीबी हुनपर्छ, गरीबी अवस्था मृत्युमा ध्यान गर्नुपर्छ, मृत्यु यस्तो जग्गामा हुनपर्छ जहाँ मानिस हुँदैन, जंगल र खाली ओड़ार मात्र हुन्छ।"

अहिलेका मानिसहरू धर्म गर्नुमा दुःखसहने कोशिश नगरेर यही जीवनको सुख र आनन्दको लागि, नाम कृति बढ़ाउनुको निम्ति, इज्ज़त पाउनुको निम्ति मात्र धर्म गर्छन्। कतिले यसो पनि भन्छ त्यो

लामा वा पंडित वा भिक्षु कति राम्रो छ - यी लामा धर्म र गृहस्थी दुइमा नै निपुण छ भनी भन्छ धर्म र गृहस्थी दुई एकै चोटि कसरी हुन सक्छ र ? गृहस्थी राम्रो हुन सक्ला तर धर्ममा राम्रो र निपुण हुन सक्दैन। धर्म र गृहस्थी साथमा गर्ने दुइपट्टि टुप्पा भएको सियो जस्तो हो, लुगा सिउने सियो एकपट्टि टुप्पा चुच्चो भएको, अर्कोपट्टि धागो हाल्ने नात्री हुन पर्छ तब मात्र लुगा सिलाउन सकिन्छ। दुइपट्टि नै चुच्चो भए कसरी सिलाउने र ? त्यस्तै नै धर्म र गृहस्थी साथमा गरे दुइपट्टि चुच्चो भए जस्तो हो। एकै भाँड़ामा आगो र पानी हाले जस्तो हो। मुख भरि चम्बा (सतुवा) हालेर बासुरी फुके भैं हो। यस संसारमा गौतम बुद्धले पनि आफ्नो राजदरवार र आफ्नो राज्यसमेत त्यागेर बुद्धज्ञान प्राप्त गर्नु भयो। यदि गृहस्थी र धर्म सँगै हुने भए वहाँले राज्य त्याग्ने र राजसिँहासन त्याग्ने कुरै थिएन। यदि गृहस्थी र धर्म साथमा गर्दा हुने भए वहाँले चक्रवर्त्ती राजा हुने मौका पनि खरानीमा थुक फ्याँकै जस्तो गृहस्थी त्यागेर नैरञ्जना नदीको किनारमा छ वर्षसम्म काठोर तपस्या गर्नु भएर, दिनमा एक एक थोपा मात्र पानी पिएर, एक एक दाना मात्र अन्न सेवन गर्नु भएर यस्तो कठिन दुःख र कष्ठ सहनु भएर, गरम र ठण्डा केहीको वास्ता नगरी ध्यान गर्नु भएर, बुद्धज्ञान प्राप्त गर्नु भयो। जेचुन मिला रेपाले पनि बाह्र वर्षसम्म सिस्नु मात्र सेवन गर्नु भएर, शरीर हड्डी र छालासम्म भएर, अरूले देख्दा पनि भूत हो कि मान्छेको भनी चिन्नु पनि नसक्ने भएका थिए। यस्तो प्रकारले दुःख र कष्ट गर्नु भएको हुना वहाँले एकै जीवनमा बुद्धज्ञान प्राप्त गर्नु भयो। यस्तै प्रकारको धर्ममा दुःख र कष्ट अघिका महात्माहरूले गर्नु भएको छ। सिद्ध प्राप्त "रिग्जीन जिग्मे लिङवा"ले भन्नु भएको छ - "धर्म गर्नुका लागि भनेर राम्रो र मिठो खाना चाहिने,

राम्रो राम्रो लुगा चाहिने, बस्ने ठाउँ पनि राम्रो चाहिने, यजमान (जिन्दा) वा दाता पनि धनी राम्रो खोज्ने, राम्रो विवेक र विचार गर्दा सिद्ध भएको होइन तर नराम्रो भूत मार, शैतान आदिको पो सिद्ध भएको हो भनी बुझ्नू।" " गेसे श्यबोले" पनि यस्तो भन्नु भएको छ - भित्री मनले धर्म गर्ने इच्छा भए प्रथम आफू गरीबको आचरण गर्नु पर्छ। गरीब भएर फेरि अब म मर्नु पर्छ भन्ने ध्यान गर्नु पर्छ।" मनमा यस्तो प्रकारको विचार भए देव मार र मानिस कुनैले पनि आफुलाई विजय हुनु सक्दैन। मिला रेपाले यसो भन्नु भएका छन - "म विमारी भए सोध्ने मान्छे पनि नहोस्।

मृत्यु हुँदा रूने मान्छे पनि नहोस्,

यस्तो एकान्तमा मर्नु पाए,

योगीको फल सिद्ध भएको हो।

ढोकामा मान्छेको पाइला पनि नहोस्

शरीरभित्र रगतको नामसम्म नभए पनि नहोस्,

यस्तो एकान्तमा मर्नु पाए

योगीको फल सिद्ध भएको हो।

कता गएको भनी सोध्ने मान्छे पनि नहोस्,

यता जानु भनी बाटो देखाउने पनि नहोस्,

यस्तो एकान्तमा मर्नु पाए

योगीको फल सिद्ध भएको हो।

मेरो लास कुहेर कीराले खाए पनि

रगतको नसो झिंगाले चुसे पनि,

यस्तो एकान्तमा मर्नु पाए

यीगीको फल सिद्ध भएको हो।"

यस्तो प्रकारको दुःख र कष्ट गररे अनि सहेर

ध्यान गरे धर्ममा सहनशीलता पालन गरेको हो।

धर्म गर्दा दुःख नगरी राम्रो खानु, राम्रो लगाउनु,

मिठो खानु र सुख आनन्दको मात्र इच्छा गरेर

धर्म गरेको अनि यस्तो सुखसाथ धर्म गरेर बुद्धज्ञान प्राप्त गर्छु भन्ने तर केटा केटो

खेलेको जस्तो मात्र हो। केही महत्व हुँदैन।

**तेस्रो गम्भीर अर्थ सहने विषय -**

अनात्मक ज्ञान, धर्म्मता, प्राकृतिक स्वभाव, यस्तो प्रकारको गम्भीर धर्मको अर्थ नडराइ लिन संक्नुपर्छ।आत्माज्ञान नपाएकाहरूलाई अनात्मक धर्म्मता ज्ञान दिए सहनु सक्दैनन्। यस अनात्मकको ज्ञान अति गम्भीर ज्ञान हो। त्यो आफैले प्राप्त गरे मात्र बुझ्न सक्छ। प्रथम

सवृंतिसत्यको पूर्णज्ञानबोध भए मात्र परमअर्थ सत्य बुझ्न सकिन्छ। परमअर्थ सत्यले शून्यता अनात्मक ज्ञानको विषयमा बताउँछ। जब यो ज्ञान दिएर ध्यान गर्छ तब "म" को हो ? कहाँबाट आएको ? कहाँ जाने हो ? यी सब विवेक र विचार गर्दा जब "म" भन्ने शब्द आफूबाट बिलाएर गएको थाहा पाउँदा उसलाई भीरबाट खसेको जस्तो हुन्छ अनि अति सहनु नसक्ने डर लागेर आउनेछ। कसै कसैलाई यस्तो गम्भीर धर्म्मताको ज्ञान दिँदा सुन्नु नसकेर मृत्यु भएको पनि धेरै छन्। महायोगा, अणुयोगा र अतियोगा महासम्पन्नको ज्ञान मोटा मोटी सर्वकार्य, उध्योगबाट रहित हुनु हो। धर्म, पाप, विऊ फल सबैबाटरहित बाह्रवटा ज्ञान प्राप्त भइसकेको हुन्छ। यी बाह्रवटा र आठवटा अचम्भको ज्ञान दिँदा ती ज्ञान मनमा अटाउनु नसकेर त्यसलाई मिथ्या दृष्टिले हेर्नु हुँदैन। यसरी आफूले नबुझेर यस्तो गम्भीर अनात्मक ज्ञानलाई मिथ्या दृष्टिले हेरे, त्यस ज्ञानको निन्दा गरे, धर्म त्यागेको पाप लाग्नेछ। कल्प कल्पसम्म यसको फल नरकमा जन्मेर बस्नु पर्नेछ। पञ्च महापाप भन्दा पनि ठूलो धर्मत्याग गरेको पाप लाग्नेछ। अतिसा दिपङ्कर श्री ज्ञानाले तिनका दुइ चेलालाई बाह्रवटा गुह्य ज्ञान पाइसकेपछि वहाँले अनात्मक र शून्यताको ज्ञान यसप्रकारले दिनु भए – "आत्मा छैन भनी बताउनु हुँदा उनीहरू दुइ खुशी भए। तर धर्म्माता शून्याताको ज्ञान बताउनु हुँदा उनीहरू डराएर भयभीत भएर नभन्नु हवस् भनी त्रिनीहरूले कान थुने। यसकारण यस्तो धर्म्मताको अर्थ खोलिदिँदा आफू डर नगरी अर्थ र ज्ञान सहने कोशिश गर्नुपर्छ। भगवान बुद्ध स्वयं हुनु हुने समयमा वहाँले शून्यताको ज्ञान दिनु हुँदा अभिमानी भिक्षुहरू अर्थ मनमा सहनु नसकेर मुखबाट रगत छादेर मृत्यु भएको अनि तिनीहरू नरकमा जन्म लिएको धेरै छन्। यसकारण

यस्तो गम्भीर अर्थको शून्यताको ज्ञानलाई विश्वास र श्रद्धा गर्नुपर्छ। यदि आफ्नो बुद्धिले यस्तो ज्ञान बुझ्न नसके पनि श्रद्धा र विश्वास गर्नू, त्यसलाई मिथ्या दृष्टिले नहेर्नू साथै निन्दा पनि नगर्नू। यस्तो प्रकारको शून्यताको ज्ञान लिने अभ्यास गर्नु पर्छ।

**४) वीर्य पारमिताको विषय -**

चौथो वीर्य पारमिताको तीन अंग छन्।

**प्रथम** - *कवच जस्तो कोशिश वा चेष्टा*

**दोस्रो** - *निवन्ध वा योग जस्तो कोशिश*

**तेस्रो** - *कोशिश निरन्तर गरिरहने, सन्तोष नहुने*

**प्रथम कवच जस्तो कोशिश** - अघि अघिका सिद्धपुरूष, महात्माहरू, बोधिसत्वहरू, बुद्धहरूका जीवन चरित्र र लीला पढ़ेर बुझ्नुपर्छ। वहाँहरूले धर्म गर्दा कस्तो कस्तो दुःख कष्ट गर्नु भएको थियो, कस्तो प्रकारले कोशिश गर्नु भएको थियो। यस्तो प्रकारको दुःख कष्ट गर्नु भएर दिन र रात कोशिश गरेर बुद्धज्ञान अनि बोधिचित्त प्राप्त गर्नु भएको रहेछ भन्ने बुझी आफु पनि वहाँहरूकै चेला हुन् र म पनि वहाँहरूले भन्दा ज्यादा दुःख कष्ट गर्छु भन्ने प्रतिज्ञा गर्नुपर्छ। समय छ, भोलि गर्छु, पर्सि गर्छु भनेर हुँदैन। आफ्नो प्राण गए पनि जावस् तर कोशिश छोड़दिनँ, हामी यस संसारमा नै जन्मदै मर्दै गरिरहेको कारण धर्ममा कोशिश नगरेको कारणले हो। अहिले धनसम्पत्तिले युक्त भएको, गुरु पनि भएको समयमा गुह्य गम्भीरको धर्म ज्ञान पाएको समयमा सभ्याक सम बुद्ध प्राप्त गर्नुको निम्ति धर्ममा कोशिश

गर्नु पर्छ, गह्रौं भारी बोकेर आफु एकान्त स्थानमा बसेर बुद्धज्ञान प्राप्त नभएसम्म यो कोशिश गर्छु भनी प्रतिज्ञा गर्नु पर्छ। प्रतिज्ञा पनि यस्तो गर्नुपर्छ कि यो एउटा दुइटा प्राणी र आफ्ना इष्टमित्रका निम्ति मात्र होइन तर सारा प्राणीहरूको उद्धार र बुद्धज्ञान प्राप्त हुनका लागि धर्ममा कोशिश गर्छु भन्नु पर्छ।

**दोस्रो योग जस्तो कोशिश -**

धर्म गर्नु त गर्छु अहिले समय छ भनेर भोलि पर्सि गर्छु भनेर बाँकी राख्नु हुँदैन। झट्ट गरी हाल्नु पर्छ कारण मान्छेको आयुको केही भरोसा हुँदैन, समयले कसैलाई पर्खिदैन, समय एक क्षण पनि रोकिदैन, समयको मुल्य जान्नु सकेन भने पछि आफुले धर्म गर्नु भ्याउने छैन त्यस समयमा पश्चात्ताप गर्नुपर्छ। पश्चात्ताप गरेर के फायदा ? अति ढिलो भइसकेको हुन्छ। डुग पेमा करपोले यसो भन्नु भएको छ - "मानिसको आयु कसाईले मार्न लगेको पशु झैं हो, पाइला पाइला सार्दा आयु छोटो छोटो हुँदै जान्छ, कसाई-घरमा पुग्दा त्यस पशुलाई मारेर आयु सकिन्छ।" त्यस्तै नै हो मान्छेको आयु क्षण क्षण गरेर सकिँदै जान्छ। यसकारण हामीले धर्म गर्नु हत्तारिनु पर्छ कसरी भने कुनै एउटा साँप आफ्नो काखमा पसे भयले गर्दा त्यो साँप फ्याँक्नु बाहेक अरू केही विचार गर्दैन त्यस्तै गरी गृहस्थीको काम सबै त्यागेर धर्म गर्ने कोशिश गर्नुपर्छ। फेरि कुनै एक सुन्दरी स्त्रीको सुन्दर र लामो केशमा आगो लागे त्यस स्त्री आफ्नो केशको मायाले आगो निभाउनु बाहेक अरू केहि सोच्दैनं त्यस्तै गरी धर्म गर्नुपर्छ अरू सबै त्यागेर। गृहस्थीको काम झट्टै त्याग्ने गर्नुपर्छ अनि धर्ममा लाग्नुपर्छ। सांसारिक काम गरीसकेपछि मात्र धर्म गर्छु भनेर नचित्ताए पनि हुन्छ कारण सांसारिक

काम एक सकिए पछि अर्को आउँछ पानीको तरङ्ग जस्तो एक तरङ्ग पछि अर्को तरङ्ग आउँछ कहिले पनि सकिँदैन। जुन दिन आफ्नो प्राण जानेछ त्यो दिन मात्र संसारको काम सकिन्छ। त्यसकारण जति सक्दो छिटो भन्दा छिटो यस सांसारिक कामको केही सार छैन भनी त्यागेर धर्म गर्नुपर्छ। यो सांसारिक काम जुन दिन त्यागेर धर्ममा लीन हुन्छ त्यो धर्म्मताको ज्ञानबोध भएको हो। सांसारिक काम बालकहरूको खेल जस्तो हो, जबसम्म खेली बस्छ त्यति बेलासम्म सक्दैन, जब राख्छ तब मात्र खेल सकिन्छ। सांसारिक काम झट्ट त्यागेर धर्म गर्नुपर्छ। धर्मको मार्गमा लाग्दा कुबानी गर्नु हुँदैन, जताभावी बोल्नु हुँदैन, अल्छी गर्नु हुँदैन, सांसारिक मनोरञ्जनमा भुलेर बस्नु हुँदैन। यस्तो प्रकारले भुलेर बसे, समय नष्ट गरे यो मानव जीवन अर्थहीन हुनेछ। आखिरमा एकदिन मर्नुपर्छ भन्ने विचार मनमा स्मृति राखेर अल्छी नगरी शरीर, वचन र मन एकैक्षण पनि समय नष्ट नगरेर दिन रात एक गरी झट्टै धर्म गर्ने कोशिश योग हो।

**तेस्रो सन्तोष नहुने कोशिश –**

"निरन्तर" – तृष्णा कहिले नमेटिने कस्तो भने तीन सुत्र ग्रन्थ र चारवटा गुह्य तांत्रीक सबै ज्ञान पाएर पनि सुनेर पनि अझै सुन्न मन लाग्ने संतोष नहुने हुनुपर्छ। प्रथम आफू धर्ममा लागेर गुफा बसेर पूर्वजन्मको पाप पश्चात्ताप गर्ने, पूण्य सञ्चय गर्ने कर्म, यस्तै प्रकारका धर्महरू सधैं गर्नुपर्छ जति धर्म गरे पनि संतोष मान्नु हुँदैन। जति ज्यादा ध्यान गर्‍यो धर्म बड़ेर जानेछ। कोशिश कम्ति भए, धर्म गर्नु अल्छी मान्दै गए अघिको धर्म पनि विलिन भएर हराउदै जानेछ, धर्म घटेर पाप बड़दै जानेछ। अघिका सिद्धपुरूषहरूले यसो भन्नु हुन्थे – "धर्म

गर्दा चौरी गाईले घाँस खाएको जस्तो हुनु पर्छ। भोकाएको चौरी गाईले घाँस खाँदा यसो गर्छ – पहिलो मुखमा हालेको घाँस खाईसकेको छैन अर्को घाँसमा हेरेर अब त्यो खान्छु भनेर सोचे जस्तै एउटा धर्म नसकि नै अब म यो सकेर त्यो धर्म गर्छु भनि चित्ताउनु पर्छ।" बूढो भएर धर्म निरन्तर गरेको धर्म खेरो नगएको चिनो हो। हिजआज गृहस्थीहरूले यस्तो भन्ने पनि छ – "तपाई त ठूलो लामा हो पुरोहित हो, तपाईंले त धेरै धर्म गरिसक्नु भयो, पुण्य पनि धेरै सञ्चय गरिसक्नु भयो, अब त धर्म नगरे पनि हुन्छ भन्दा लामा या पुरोहित पनि हो न हो म त ठूलो ज्ञान भएको हो, धर्म पनि धेरै गरिसके, पूण्य पनि धेरै कमाएको छु अब धर्ममा दुःख नगरे पनि हुन्छ भनी सोच्छन्। ग्याम मे दाग्पो रिन्पोछे ले यसो भन्नु भएको छ – "अब मलाई धर्म गर्नु पर्दैन, चाहिँदैन भन्ने त अझै धर्म गर्नुपर्ने र धर्म चाहिने चिनो हो।"

मगज र बुद्धि तीब्र भए पनि कोशिश छैन भने ज्ञानबोध हुनु साह्रो पर्छ। बुद्धि कम्ति भए पनि कोशिश अति ज्यादा छ भने ज्ञानबोध सजिलै हुन्छ। *उदाहरण* – नदी पार गर्नुका निम्ति एउटा नाउ, नाउ ख्याउने पतवर र माझी हुन पर्छ। तब मात्र नदी पार गर्नु सकिन्छ। नाउ र माझी त छ तर नाउ ख्याउने पतवर छैन भने पार तार्नु सक्दैन। नाउ ख्याउने तपवर नभए झैं कोशिश छैन भने ज्ञान पाउन सक्दैन। ज्ञान नपाए यो भवसागर पार गर्न सक्ने छैन। कोशिश छैन भने यस दुःखको भवसागर पार भएर बुद्धज्ञान कहाँ पाउँछ र ? भूमिज्ञान र सबै कुशल गुणको पखेटा जस्तो कोशिश हो। पक्षीहरू पखेटाको सहायताले जसरी उडन सक्छ त्यसरी नै कोशिशको बलले बुद्धज्ञान प्राप्त गर्नु सकिन्छ। यसकारण धर्ममा कोशिश पानीको धारा जस्तो

सधैं एक क्षण पनि विश्राम नगरी गर्ने चेष्टा गर्नु पर्छ।

**ध्यान पारमिताको विषय -**

सांसारिक काम र मनको चञ्चलता सबै त्यागेर एकान्त स्थानमा बसेन भने मनमा अटल ध्यान उत्पत्ति हुन गाह्रो पर्छ। आफूलाई बिगार हुने स्थान र हल्ला ज्यादा हुनेछ भने पनि ध्यान गर्नु राम्रो हुँदैन। संस्कारले बनिएको र जम्मा भएको सबै एक दिन छुट्टिनु त प्रकृति को नियम नै हो। यसकारण आफ्नो माता-पिता, दाजू-भाई, जहान, ईष्टयमित्र, यी मन र शरीरसगै जम्म भएको त एक दिन अलग भएर छिट्टिनु पर्छ भने यस्तो नित्य नभएको शाखासन्तान र ईष्टमित्रसंग माया मोह गरेर के फायदा ? यस्तो मनमा विवेक र विचार गरेर यी सब त्यागेर एक्लै ध्यान गरेर बस्नुपर्छ। महात्मा रेपा शिवा हे भन्नु हुन्थे - "आफु एक्लै बस्नु बुद्धको चरित्र हो। एकजना धर्मसाथी भए कुशलै हो। दुई भन्दा ज्यदा वा धेरै मित्र भए रिस, माया, इर्ष्या, द्वेष, झगड़ा हुने वा यस्तो प्रकारको क्लेश बढ़ेर जानेछ त्यसकारण धेरै मित्रसंग बस्नु हुँदैन।" इच्छा र तृष्णा सबै दोष र अगुणको मूल स्रोत हो। जति भए पनि सन्तुष्ट हुँदैन। धन सम्पत्ति जति भए पनि कञ्जुसी बड़ने र बड़ाउने हो। जसकोमा धन छ त्यहाँ कञ्जुसी पनि छ। धन सम्पत्ति नभए शत्रु पनि हुँदैन। आफ्नोमा जति ज्यादा धन सम्पत्ति छ शत्रु र चोर पनि त्यति ज्यादै लाग्नेछ। प्रथम धन कमाउनु पनि साह्रो छ। धन कमाउँदा अरूलाई छल कपट झुट बोल्नु नराम्रो कर्म मात्र गर्नुपर्छ अनि मात्र धन कमाउनु सकिन्छ। धन कमाउँदा पनि दुःख नगरी हुँदैन, कति साह्रो छ , त्यो भन्दा पनि साह्रो र दुःख त्यो धनलाई रक्षा गर्नुमा छ। त्यसै धनको कारणले गर्दा चोर र शत्रुले आफ्नो प्राण सम्म

पनि लिने डर हुन्छ। फेरि यो कमाएको धन घटेर पो जान्छ भनेर दिनको भोक र रातको निद्रासम्म पनि हराएर जानेछ। यसैकारण आर्य नागार्जुन भन्नु हुन्थे - "धन कमाउनु, रक्षा गर्नु र बढाउनु, यी तीन आफुलाई नाश गर्ने र पराजित गर्ने हो भनी जान्नू।" धन कमाउँदा, रक्षा गर्दा र बढाउँदा नै हाम्रो मृत्यु हुन्छ, यसमा के सार छ र ? संसारभरको धन सम्पत्ति एकजना मान्छेको भए पनि सतुंष्ट हुँदैन। यी सब धन कमाउनुको कारण आफू एक पेट र एक छाक खानुसम्म त हो तर यही धनको कारणले एक पेट पनि खाना खानु सक्दैन त्यसो भए धन कमाएको के फाइदा ? अलिकति धन कमाउनुको लागि मानिसहरू के के गर्नु पर्छ भने - झुट बोल्नु पर्छ, लाजसम्म त्यागि झगड़ा गर्नुपर्छ। यस्तो कुकर्म मात्र गर्नुपर्छ। यस्तो कुकर्म गर्दा गर्दा पापको पर्वत हुन्छ। अन्तमा यस धनमा मौज मजा, मनोरञ्जन भने कि त शत्रुले गर्छ कि त आफ्नो छोरा छोरीले गर्छ। पापको फल भने आफूले भोग्नु पर्छ। यसकारण यस्तो फल पाउने हुनाले अहिले आफ्नोमा जे जति छ अरूलाई दान गर्ने र पूण्य कर्म गर्ने कोशिश गर्नुपर्छ। परलोकमा यही पूण्य मात्र साथमा जानेछ र सुख पाउने छ। जति छ त्यसैमा सन्तोष हुनु अति उत्तम हो। यस लोकको विचार र धन्धा गर्ने मात्र बालक नानीहरूको साथी जस्तो हो; जति गुण गरे पनि आफूलाई नोक्सान मात्र गर्ने, जति गुण गरे पनि गुण गरेको नदेख्ने यस्तो प्रकारको संसारीक अचरणमा के सार गर्भ छ र ? इष्टमित्र जति भए पनि अन्त छैन, शत्रुको पनि अन्त छैन, कुनै काम गरेर सकिने छैन यस्तो कहिले अन्त नहुने काम र मन चञ्चल गराउन काम खरानीमा थुक फ्याँके झैं फ्याँक्नु पर्छ। ध्यान गर्ने स्थान यस्तो प्रकारको हुनपर्छ जुन स्थानमा मान्छे छैन वा बस्दैन, व्यपार र खेती पनि नभएको, इष्टमित्र पनि

नभएको, चरा चुरङ्गी र मृगहरू भएको स्थानमा बस्नुपर्छ। अघि बुद्धहरूले ध्यान गरेको स्थान र वहाँले आशिष गरिराखेको एकान्त स्थानमा ध्यान गरे असल हुन्छ। यदि साथी भए पाप कर्म नगर्ने धार्मिक स्वभावको हुनपर्छ। आफूलाई चाहिने खाने कुरो, पानी, आगो सबै सजिलैसित पाउने हुनपर्छ। यसरी एकान्त स्थानमा बसे चालचलन जे गरे तापनि धर्म र पूण्य मात्र हुनेछ। एकान्त स्थानमा बस्दा मात्र पनि लोभ, रिस, तृष्णा, द्वेष सबै क्लेश कम्ती भएर जानेछ। यस्तो शान्त स्थानमा ध्यान गर्नु उत्तम हो। जप गर्दा, ध्यान गर्दा जुनै साधन गर्दा त्यस समयमा आफ्नो मन बाहिर भुलियो भने, धेरै कल्पना आए या मन चञ्चल भए कल्प कल्पसम्म ध्यान गरे पनि सबै बेकार हुनेछ। त्यसकारण मन पागल हात्ती जस्तो हो, जसरी पागल हात्तीलाई वशमा गराउँदा एउटा बलियो खाँबामा फलामको साङलोले बाँधिदिन्छ, त्यसरी नै यो मनलाई पनि स्मृतिको खाम्बामा बाँध्नुपर्छ। पागल हात्तीलाई बाँधेर मात्र हुँदैन। त्यसलाई रक्षा पनि गर्नुपर्छ त्यस्तै गरी मनलाई पनि कहाँ जान्छ के गर्छ भनी विचारले रक्षा गर्नुपर्छ।

ध्यान गर्नेमा तीन वटा अंग छ (क) बालक नानीको उपचार जस्तो ध्यान (ख) प्रमुदितार्थ जस्तो ध्यान **(ग) तथागत जस्तो ध्यान**

(क) जुन भगवानको ध्यान गर्छ उसैको मूर्ति भए पनि नक्सा भए पनि आफ्नो अघि राखेर ध्यान गर्नु पर्छ। ध्यान गर्दा आँखा बन्द गरेर होइन आँखाले ठीक नाकको टुप्पा हेरेर ध्यान गर्नु पर्छ। यसरी ध्यान गर्दा दुइ प्रकारको बाधा आउँछ निद्रा लाग्ने र मन बाहिर घुम्ने, निद्राबाट र मन भुल्नेबाट सतर्क बसेर नित्य ध्यानमा मग्न भए आफै आफ खुशी उत्पन्न हुन्छ। कस्तो खुशी भन्दा बालक नानीहरूलाई

मिठाई दिँदा घरि घरि मिठाई माग्छ कारण जिब्रोको इन्द्रियले मिठास रसको भोग गरेकोले मिठो लागेर त्यसमा नै भुलेर बस्छ। यस्तै गरी एक प्रकारको खुशी अत्पन्न भएर त्यहीँ खुशीमा भुलेर एकोहोरो भई खुशीको आनन्द भोग गरेर बस्दा एक प्रकारको ज्योति जस्तो उत्पन्न हुन्छ, कस्तो भने कुनै पनि बाधाले बाधा दिन नसक्ने दृष्टि ज्ञानबोध हुन्छ। आफ्नो दृष्टिले सबै देख्न सकिन्छ, एक कोठादेखि अर्को कोठा पनि देख्न सक्छ कुनै देवल वा भित्ताले दृष्टिलाई छेक्न सक्दैन, एक ठाउँदेखि अर्को ठाउँ पनि देख्नसक्छ, सबै कुरो बुझ्ने हुन्छ र आनन्द पाउँछ। यही आनन्दमा भूलेर यसै आनन्दलाई लोभ गरेर, यही आनन्दमा भुलेर बस्न हुँदैन। यही नै सत्यज्ञान हो भनेर ग्रहण गरी बसे आफु भ्रममा पर्नेछ र साँचो ज्ञानबोध हुन सक्दैन।

(ख) अघिको आनन्दमा नभुलेर अझै अर्को प्रकारले ध्यान गरे शून्यताको ज्ञानबोध हुन्छ। यसरी शून्यताको ज्ञानको आनन्दमा तृष्णा गरेर भुल्नु हुँदैन। यदि यसैमा भुलेर बसे संसारिक देवस्थान मात्र प्राप्त गर्छ। संसारिक भन्नाले चार अरूप धातुको देवलोक र निरोध वा उपनिधि सम्पत्तिको जम्मा नौवटा देवस्थान प्राप्त गर्नु सक्छ।

यसकारण यस्तो ज्ञानमा भुलेर बस्नु हुँदैन, तल वर्णन गरे अनुसार मेलैसित ध्यान गरेर ज्ञानबोध गर्दै जानेछ।

(ग) शून्यताको ज्ञानको इच्छा गरेर जुन शून्यताको ज्ञानबोध भएको हुन्छ त्यो पनि छोड्नु पर्छ अनि त्यसपछि धर्म्मता अविनिवर्त्तनीय समाधि ज्ञानबोध गरे सम्यक समाधिबाट मनको स्वभावबोध हुनेछ। "म" भन्ने अविद्याको जरा हो, यसैले गर्दा मार्ग अल्मलिन्छ। ध्यान

गर्दा याद राख्नु पर्ने मन शान्तिसंग स्थिर हुनपर्छ। पानी स्थिर रहँदा कस्तो शान्त स्वभावको ऐना जस्तो सफा हुन्छ त्यस्तै गरी मन स्थिर राख्नु पर्छ। यदि पानीमा तरंग र छाल आए सफा देख्न सक्दैन मन पनि त्यस्तै हो। ध्यान गर्दा शरीर सिधा काठ जस्तो राख्नु पर्छ, बज्र आसनमा पलैटी कसेर, घिच्रो पनि सिधा, दुइ हात काखमा कुईना पखेटा जस्तो हुनुपर्छ आँखाले ठीक नाकको टुप्पा हेरेको हुनु पर्छ, जिब्रो मुखभित्रको माथिल्लो तालुमा छोएको हुनुपर्छ। यस्तो प्रकारको बसाई गरे ध्यान राम्रो हुनेछ। तर सुतेर बस्ने, शरीर बाङ्गो, आँखा पनि चिम्म गर्ने गरेर ध्यान गरे हुन सक्दैन। शरीर सिधा भए नसो सिधा हुनेछ, नसो सिधा भए रगत र वायुको सञ्चालन ठीक रूपले हुनेछ, वायु ठीक रूपले सञ्चालन भए मन पनि सिधा स्थिर हुन सक्नेछ। अब शरीर ठीक रूपले बसेर आफ्नो सामुने कुनै प्रतिमा राखेर ध्यान गर्नुपर्छ। यहाँ भगवान् बुद्धको मुर्ति राखेर ध्यान गर्नुपर्छ, प्रथम शरीर सुनौलो वर्णको, शिरमा उष्णीष वा शिरोवेष्ट भएको एक मुहार, दुइ हात, दाहिने हातले भूमि स्पर्श गरेको, देब्रे हात काखमा समाहित भएको त्यस हातमा अमृतले भरिएको पिण्ड पात्र समातेको, चीवर(वस्त्र) लगाएको यस्तो प्रकारको स्पष्ट रूप ज्योतिको किरणको भित्र बज्र आसनमा विराजमान हुनु भएको सम्झनु पर्छ। ठूलो वा सानु भावना गर्नु पर्छ। एक सानु मटरको दाना जत्रो सम्झनु पर्छ। त्यो मटरको दाना जत्रोमा परिपूर्ण भगवान्को लक्षण युक्त भएको स्वरूप ध्यान गर्नुपर्छ। यस्तो प्रकारको ध्यान आउन सकेन भने, भगवान्को स्वरूप सिंहासनमाथि बस्नु भएको ध्यान गर्नुपर्छ। यस्तो प्रकारले पनि नसके आफुलाई कस्तो प्रकारले सजिलो ध्यान आउँछ त्यस्तै प्रकारले गर्नु पर्छ। कुनै भगवान्को प्रतिमा राखेर हुन्छ कि नक्सा राखेर हुन्छ कि

४) विस्तारपूर्वक मन ध्यानको उन्नति मार्गतिर लगाएर, घरि घरि ध्यान केन्द्रित गर्दै अल्प उन्नति भए तापनि आफ्नो मनलाई भित्रीपट्टि उपस्थान गर्नुपर्छ।

५) समाधि र ध्यान गुणको रूप सम्झी यो चित्तलाई कोशिश र उद्यम गरी मनलाई वशमा गर्नुपर्छ।

६) मन चञ्चल हुने दोषलाई सम्झेर, ध्यानमा राखेर यो खुशी नहुने मनलाई शान्ति र स्थिर गर्नुपर्छ।

७) यो मनमा तृष्णा आउने, नराम्रो कल्पना आउने, मन ठीक नबसेर निंद्रा आउने आदि सबै दोषहरूलाई समाधिको बलले जे जस्तो दोष आए पनि मन शान्त र स्थिर गर्नुपर्छ।

८) बाक्लो निद्रा र तमस, यी दुइको दोषरहित निरन्तर राग र तृष्णा उत्पन्न भए समाधिको बलले निरन्तर ध्यान गरी रहनुपर्छ।

९) अन्तमा अष्टम अवस्था अचल भई मन एकाग्र भए ध्यान अटल भए, संस्कार नभई प्राकृतिक आफ्नै स्वंभाव सिद्धि भएर आउँछ।

यसरी चित्त स्थिर भए, एकाग्र भई अटल समाधि भए शरीर र मन एक भई अति आनन्द र सुखको भोग गर्छ। यसरी अटल ध्यान भई मन प्रसन्न र आनन्दमयको फल पाउने छ।

**प्रज्ञापरमिताको ध्यान गर्ने विषय -**

प्रज्ञा तीन प्रकारको हुन्छ *१) श्रुतिमयी प्रज्ञा* - आफ्नो गुरुबाट धर्मको अर्थ सुनेर गुरुले जस्तो बताएको अनुसार बुझेर प्रज्ञाको ज्ञान

पाउने हो।

*२) एकान्त ठाउँमा बसेर ध्यान गर्ने चिन्तामयी प्रज्ञा* - आफ्नो गुरुले बताए अनुसार कुनै गल्ती नगरी आफ्नो मनमा प्रज्ञा उत्पन्न हुने, यदि कुनै अर्थमा शंका लागे अरू गुरुहरूलाई सोध्नुपर्छ। सम्पूर्ण धर्मको अर्थ बुझेर एकान्त ठाउँमा ध्यान बुझी ध्यान गरेर प्रज्ञा प्राप्त गर्ने हो।

३) सम्पूर्ण अर्थ बुझी जस्तो प्रकारले बताएको छ त्यस्तै प्रकारको गल्ती नगरी साधना वा ध्यान गरेर ठीक रूपले प्रज्ञाको ज्ञान पाउने, ध्यानबाट प्राप्त गर्ने **भावनामयी प्रज्ञा** भन्दछन्। धार्मिक सवृंतिको ज्ञान प्राप्त गर्ने ज्ञानलाई सर्व सम्पूर्ण प्रज्ञा भन्दछन्। अनि परमार्थ ज्ञानप्राप्त गर्नेलाई धर्म्मता प्रज्ञा भन्दछन्।

*प्रथम सर्व सम्पूर्ण प्रज्ञा* - यस भवसागरमा कर्मफलको विषय मेलैसंगले बताउने अनि यस संसारको लक्षण जान्नुपर्छ। अहिले यस संसारमा हामीले के कारणले दुःखको फल भोग्नु परेको हो भनी त्यसको कारण र दुःखको हेतु के हो त्यो जान्ने र बुझ्ने ज्ञान, संसारका स्वभाव अनित्य हो भनी बुझ्ने, कुन कर्म गरे पूण्य सञ्चय गर्नुसक्छ अनि मुक्ति प्राप्त हुन्छ। कर्मफल ठीक ठीक रूपले गोटा गन्ती मेलैसंग पञ्च संविद विद्यामा सिपालु निपुण भएर यी पञ्च संविद बुझ्न सक्ने राम्रो हुन्छ। यी पञ्च संविद (रीग्पा ने ङा) मा निपूण भएको सर्व सम्पूर्ण संवृति प्रज्ञा भन्दछन्।

**दोस्रो धर्म्मता प्रज्ञा**

दुइ भागमा विभाग भएको छ *(१) अतिरिक्त दृष्टि पुद्गल अनात्मक प्रज्ञा (२) धर्म्मताको अनात्मक प्रज्ञा*

*(१) अतिरिक्त दृष्टि पुद्गल अनात्मक प्रज्ञा* – प्रथम संवृतिको ज्ञानबाट हेर्दा यो "म" भन्ने आत्मा ग्रहले सबैलाई समातेको हुन्छ। सबैले "म" भनेर भन्छ। के त्यो "म" सबैको एकै हो ? जब "म" भन्ने आत्मा ग्रहको जन्म हुन्छ तब "मेरो" भन्ने पनि जन्म हुन्छ। सबै जनाले "म" "म" भनी सम्बोधन गर्छन्, सबै 'म' एकै हो कारण सबै 'म' ले सुखका आशा गर्छ, दुःख त्याग्ने चेष्टा गर्छ। यसरी म बाट मेरो हात, मेरो खुट्टा, मेरो आँखा, मेरो शरीर, मेरो सन्तान, मेरो पुत्र आदिको जन्म हुन्छ। "मेरो" बाट इष्टमित्र सन्तान आदिको जन्म हुन्छ। जब आफ्नो कुनै शरीरको अंगमा चोट लागे या आफ्नो सन्तान र ईष्टमित्र प्रति नराम्रो गर्नेहरू झगड़ा गर्नेहरू देख्दा क्रोधको जन्म हुन्छ। जब आफ्नो कुनै शरीरको अंगमा चोट गर्नेहरू झगड़ा गर्नेहरू देख्दा क्रोधको जन्म हुन्छ। कारण आफ्नो छोरा छोरी या सन्तानलाई नराम्रो गरे ती मान्छेहरूप्रति क्रोधको भावना आउनेछ। यसरी इष्टमित्र भएपछि इष्टबाट दुष्टको जन्म हुनेछ। हामीले उनीहरूलाई राम्रो गरे इष्टमित्र हुनेछ नराम्रो गरे शत्रु हुनेछ। इष्टमित्रप्रति तृष्णा र मायामोहको जन्म हुन्छ। शत्रुप्रति रिसराग र द्वेषको जन्म हुन्छ। यस्तो प्रकारले संस्कार बनिएर आउँछ। यसरी माया र रिस गर्ने क्लेशमा परेर आफ्नो कर्मले पाप गर्नु लगाउँछ। यसरी कर्म गर्दा प्राणीहरू यस भावसागरको अनन्त दुःखमा बाधिनु पर्छ। जबसम्म यो "म" को स्वभाव र प्रकृतिक बुझ्न र जान्न सक्दैनौ तब सम्म यी षष्ट गतिमा जन्म लिनपर्छ। तसर्थ "म" भन्ने चिन्नुपर्छ, जबसम्म "म" भन्ने चिन्दैन तबसम्म मेरो भन्ने हट्दैन वा

हराउँदैन। यसकारण हाम्रो बाहिरी इन्द्रिय, भित्री बिज्ञान छवटा र पाँच स्कन्ध, बाहिरी रूप, शब्द, गन्ध, स्पर्श, रस आदि कुन 'म' हो। आँखा, नाक, कान, जिब्रो, शरीरमध्ये कुन 'म' हो। 'म' हाम्रो शरीरको कुन भागलाई सम्बोधन गर्छ। यदि आँखा 'म' भए अन्धा मानिसहरूको 'म' भन्ने रहँदैन ? यदि कान 'म' हो कि भन्दा बैराहरू आत्मा विनाको हो त ? यदि 'म' जिब्रो भए, जिब्रो नभए पनि हामी बाँच्न सक्छौं। यस्तै प्रकारले नाक, शरीरको अंग जस्तै "म" खुट्टा भए खुट्टा नभएको आत्महीन हुनेछ ? यस्तै प्रकारले मुटु, कलेजो, आन्द्रा, केश आदि एक एक गरी छुट्टाएर हेर्नुपर्छ। यदि "म" हात भए हात काटेर भूइँमा राखिदिए त्यस हातले 'म' भन्दैन। यस्तै प्रकारले यो 'म' को खोजी गर्नुपर्छ। यसैको विषयमा बुद्धले भन्नु भएको छ "म" भन्ने जति खोज्यो पनि पाउँदैन। यो 'म' सारा शरीरमा व्याप्त भएको छ पानीको धारा जस्तो। यो म यो हो भनी भन्नु सक्दैन। यो त कुनै कुरोले सिद्ध नभएको नाम मात्र राखिएको हो। यो 'म' यो शरीरबाट अलग गर्नु सक्दैन कारण यो शून्यताबाट आएको हो। तसर्थ यो 'म' को कुनै आकार छैन, रूप छैन, गन्ध छैन, यो 'म' त सपना जस्तो हो, मायाजाल जस्तो मात्र हो। जस्तो कि कुनै जादुवालाले तंत्र मंत्र र टुनाको शक्तिले जतिसम्म तंत्र मंत्र र रसायन प्रदातको शक्ति हुन्छ त्यति समयसम्म मात्र जादुले मायाजाल गर्न सक्छ। यो 'म' पनि त्यस्तै नै हो। मरूभूमिमा भ्रमात्मक पोखरी देखिए झैं नभएको वस्तुलाई भ्रममा परेर देखे जस्तै, बाहिरी भित्री केही नभएको प्रतिध्वनि जस्तो हो, कुनै पनि नभएको काल्पनिक मात्र हो, ऐनाभित्र देखिने प्रतिविम्ब जस्तो देखिनु त देखिन्छ तर साँचो होइन यस्तै प्रकारको यो हाम्रो 'म' भन्ने आत्मा ग्रह स्वभावले सिद्धि नभएको हो।

'म' चिन्नुको निम्ति शून्यताको ध्यान गर्नु पर्छ। जब अद्वैतको ज्ञानबोध भएपछि नदेखेको देख्ने, नजानेको जान्ने ज्ञानबोध भएपछि पुद्गल अनात्म संवृति प्रज्ञा प्राप्त भएर आउनेछ।

दोस्रो परमअर्थको ज्ञानबोध गर्नुका लागि नमूनाद्धारा सिद्ध गर्नुपर्छ। एउटा रथ को नमूना लिऊँ - यो रथ हामीले देख्दा वा देख्नेसाथ रथ रहेछ भनी मनले विवेक गर्छौं। यो रथ देख्न साथ रथ भन्ने विचार मात्र आउँछ। यो रथ कसरी तयार भयो, कसले बनायो, के ले बनायो भन्ने विचार उत्पन्न हुँदैन। यदि यसको कारण खोजे हामीले यसको स्वभाव पाउन सक्दैनौ। कसरी भने रथको चक्काभित्रको अर, काठ वा धातुको डण्डी, खामो, धुर, चौखट, डोरी, हलोको जुवा, अंकुश, छरी, छत्री इत्यादि सबै अलग अलग गरेर छुटाए, भिन्न भिन्नै राखे के त्यसलाई रथ भन्दछ ? यसरी अलग गरेर हेर्दा रथ भन्ने नाम पनि विलिन वा हराएर जान्छ। त्यहाँ आफ्नो आफ्नो अलग अलग नाम मात्र चिन्छौं। फेरि त्यही चक्कालाई नै त्यसको धुर र अर अलग गरी दिए त्यहाँ चक्काको पनि नाम रहँदैन। अब हामी त्यसलाई काठको एक टुक्रा मात्र भन्छौं। त्यो काठको टुक्रा पनि मसिनो गरेर चिरेर राखे त्यो काठको नार्म हराएर एक सिन्कामा परिणत हुन्छ। त्यो सिन्का पनि धुलो पारेर पिसे अणुमा परिणत हुन्छ। अणुलाई पनि अझै भाग गरे परमाणुमा परिणत हुन्छ। परमाणुलाई अझै भाग गरे सुक्ष्म परमाणु भएर त्यहाँ केही रहँदैन शून्यतामा परिणत हुन्छ। यसरी विवेक र विचार गरेर हेर्दा अब अघिको रथको केही अस्तित्व रहेन, सबै शून्य भएर गयो। रथ देख्दा हामीले विवेक र विचार नगर्दा मात्र रथ हो भन्ने कल्पना आउँछ। हुन त साधरण मानिसको लागि रथ, रथै जस्तो

देखिन्छ। यो संसार पनि राम्रो देख्छ, सापेक्ष सत्यमा जस्तो छ त्यस्तै देख्छ। तर निरपेक्ष सत्यमा विवेक र विचार गर्दा सबै शून्य भएर पूर्ण स्वतन्त्र भई मुक्ति, निर्वाण प्राप्त गर्नेछ। कुनै एक उदाहरण लिऊँ - हाँड़ी, घर, टेबल, किताब आदि यी वस्तु हामीले देख्नसाथ हामीले चिन्न सक्छौ कि यो हाँड़ी हो, घर हो, टेबल हो आदि भनी। बाहिरी नजरले हेर्दा यो स्वयं देखिन्छ र सवृंति सत्यमा यो साँचो हो। तर वास्तवमा विचार र विवेक गरेर हेर्दा, जाँच गर्दा परमार्थमा त्यसको स्वभाव शून्य भएर जानेछ। माटोको हाँड़ी हेर्दा त्यो देख्न सक्छ, स्पर्श गर्न सकिन्छ संवृति सत्यमा त्यो साँचो हो। अब परमार्थले विचार गरौं, विवेक गरौं, यो कसरी तयार भयो यो तयार के के मिलेर बनिएको छ भन्ने विचार र जाँच गर्दा यो माटोले बनिएको हो भन्ने थाहा पाउँछौं। के माटो मात्र हो ? होइन माटो र पानी मिलेर एउटा माटोको या हिलोको डल्ला भयो। त्यसपछि कुमालेले उसको एउटा ठूलो काठको चक्कामाथि राखेर आफ्नो हातले यो हाँड़ी तयार बनाएको हो। हाँड़ी तयार भएर सुकाउनु पर्छ घाममा त्यसपछि फेरि भट्टीमा पकाउनु पर्छ। तब मात्र हाँड़ी तयार हुन्छ। यसरी यसको बनिएको कारण हुन्। अब यसको अस्तित्व सोच्नु पर्छ। हाड़ी के ले बनियो भन्दा, माटोले तयार भएको बुझिन्छ। माटो कसरी तयार भयो भन्दा कण - कण मिलेर माटो बनियो, फेरि माटोको कुनै एक कण कसरी तयार भयो भन्दा अणु अणु मिलेर कण भयो, फेरि एउटा अणु लिऊँ अणु कसरी तयार भयो भन्दा परमाणु परमाणु मिलेर अणु तयार भयो। यसरी फेरि परमाणु आफ्नै सुक्ष्म परमाणु सुक्ष्म परमाणु मिलेर परमाणु तयार भयो यसरी गर्दा गर्दा हाम्रो विचार र आँखाबाट विलिन भएर शून्य हुनेछ। यसरी विवेक र विचार गर्दा माटोको अस्तित्व हराएर जानेछ र

परमार्थमा यसको स्वभाव शून्यता भएर जानेछ। यस्तै प्रकारले घर पाने शून्य भएर जानेछ। मन स्थिर नभए सांसारिक वस्तुलाई जस्ताको त्यस्तै देख्छौं अनि त्यही सत्य हो भनी भन्छौं। संवृति सत्यमा सबै जगत साँचो देखिन्छ तर परमार्थ सत्यमा पुग्दा सर्व जगतको स्वभाव शून्य भएर आउँछ। आफ्नो मन चञ्चल भएको कारणले यौ सबै नदेखेको हो। आफ्नो मनको स्वभाव शून्य भए बाहिरी जगत पनि आफै आफ शून्य भएर जानेछ। दृष्टि गर्ने कर्ता नै नभए रूपको के मूल्य ? यसरी नै आफ्नो मन छ या छैन विवेक गर्नुपर्छ। कसरी भने हाम्रो शरीरको कुन अंगमा यो मन छ, के केश मन हो ? किआँखा मन हो ? कि नाक मन हो? कि कान, रगत, राल, नङ, टट्टी, पिसाब, मासु, छाला, हड्डी, मुटु, कलेजो आदि मन हो त ? शरीरको कुनै पनि भागमा यो मन पाइँदैन, बाहिरी दृष्टि रूप आदि हाम्रो आँखाको इन्द्रिय द्वारा प्रत्यक्ष देख्छ। जस्तो देख्छ त्यस्तै सम्झनु रूढ़िको कारण हो, प्रमाणको कारण होइन। योगीहरूले सर्व जगत सपना भ्रम, मायाजाल आदिको दष्टिले हेर्छन्। कतिले यो माया वा भ्रम पनि अरू केही होइन तर चित्त वा मनकै आकार हो भन्छ। बाहिरी रूप आदि देखेको भित्र चित्तले जानेको कारणले हो। तर चित्त नै मायाको आकार भए तब देख्ने दष्टा र रूप दृश्य को हो ? भगवान् बुद्धले भन्नु भएको छ कि चित्तले चित्तलाई देख्दैन आफ्नो मनले आफ्नो मनलाई देख्दैन कारण तलवारजतिकै तिखो किन नहोस, त्यो तलवारको धारले त्यही तलवारलाई काटनु सक्दैन त्यस्तै गरी मनले मनलाई देख्दैन। आफ्नो अनुहार आफैले कहाँ देख्छ र ? यदि आफ्नो अनुहार हेर्नु परे कुनै ऐनाको सहायता लिनु पर्छ। यस्तै प्रकारले विवेक गरेर प्रमाणले सिद्ध गरेर सर्व धर्मको स्वभाव शून्यता हो भनी ज्ञानवोध भएपछि बाहिरी र

भित्री रहँदैन एक हुनेछ, राम्रो र नराम्रो पनि एक हुनेछ मीठो पनि हुँदैन नमिठो पनि हुँदैन, खुशी पनि हुँदैन दुःखी पनि हुँदैन सबै बराबर एक समान हुने छ, पानीमा पानी मिलाए झैं अद्वैत बोध भएर आउँछ।

महापुरूष नागार्जुनले सुहृत पत्रमा पनि यस्तो आज्ञा गर्नु भएको छ – "रूप आत्मा होइन, आत्मा रूपले युक्त भएको छैन, रूपमा आत्मा छैन आत्मामा रूप बस्दैन। "यस्तै प्रकारले बाकि चार स्कन्ध पनि शून्यता हो भनी जान्नुपर्छ। स्कन्ध अकस्मात उत्पन्न भएको होइन, समय वा कालबाट पनि उत्पन्न भएको होइन, स्वभावले पनि उत्पन्न भएको होइन, ईश्वरले पनि उत्पत्ति गरेको होइन, विऊ (हेतु) नभएर पनि उत्पन्न भएको होइन। यो उत्पन्न हुने कारण अज्ञानता, अविद्या कर्म अनि तृष्णाबाट उत्पन्न भएको हो भनी जान्नु पर्छ अनि बुझ्नपर्छ।" धर्म्मताको अनात्मा ज्ञानबोध भए त्यही नै प्रज्ञापरामिता हुन्। धर्म्मता अनात्माको ज्ञान भन्दा अरू ज्यादा र भिन्न ज्ञान छैन यही ध्यानमा अटल ध्यान गर्दा केही भन्न पनि नसक्ने विचार रहित हुनेछ। ध्यानबाट छुटे पछि विचार गर्दा संवृति विज्ञान र अलय विज्ञानद्वारा हाम्रा छ इन्द्रियको विज्ञानको दृष्टि कर्म जस्तै आँखा, नाक, कान, जिब्रो, काया र मन कर्ता भए कर्तासंग सम्बन्ध हुने विषय वा वस्तु नभए कर्ता भएको र नभएको एकै हुनेछ। कर्ताको केही महत्व हुँदैन। आँखा कर्ता भए रूप विषय हुनेछ, त्यस्तै गरी नाक कर्ता गन्ध विषय, कान कर्ता शब्द विषय, जिब्रो कर्ता रस विषय, काया कर्ता स्पर्श विषय, मन कर्ता विचार विषय, हुनेछ। यी कर्ता सबै शुद्ध भए बाहिरी विषय पनि शुद्ध हुनेछ। यसरी कर्ता स्वच्छ, निर्मल, शुद्ध स्वभाव भए बाहिरी

विषय जे जस्तो, सुख दुःख राम्रो नराम्रो, उच्च-निच, धनी-गरीब, चोखो-जुठो, किसिम किसिमको विचार आए पनि देखा परे तापनि यी सब सपना जस्तो हो, सपना कहीले साँचो हुँदैन सपना जस्तै राम्रो भए पनि नराम्रो भए पनि मिथ्या-झुठो हो। त्यस्तै नै यो जगतका विषय वस्तु सबै झुठो हो भन्ने ज्ञानबोध हुनेछ। अहिले हामीले देख्दै गरेको वस्तु विषय सबै मायाजाल मात्र हो, जादुको प्रभाव र शक्तिले देखा परे जस्तो मात्र हो भनी बुझ्नु पर्छ।

"भारत वर्षका एक सिद्ध महापण्डित श्री साराहापा भन्नु हुन्छ - "दया, करूणा नभएको वा करूणारहित शून्यताको ध्यान गर्छ त्यो राम्रो होइन त्यसले उत्तम ज्ञान बोध हुँदैन, उत्तम मार्ग पाउँदैन। करूणा र शून्यता दुई ज्ञानसंगै भए भवसागरबाट मुक्ति प्राप्त हुनेछ।" दिपङ्कर श्रीज्ञानालाई वहाँका चेला डोमत्वेनपाले यस्तो प्रश्न गरे - "सर्वधर्मको अन्त वा शेष के हो ?" दिपङ्कर - "सर्वधर्मको मूलसार अन्तिम ज्ञान करूणा र शून्यताको ज्ञान हो।"

**प्रश्न** - *"शून्यताको ज्ञान त सबैले प्राप्त गरेको छ भन्छ के कारण हो ?"*

**उत्तर** - *"त्यो सब मुखले मात्र भनेको हो।"*

जस्ले यो ज्ञान प्राप्त गरेको छ, वहाँको स्वभाव रूवा (कपास) मा खुट्टाले टेकेको जस्तो कोमल हुन्छ। आटा या चामलको खोले उम्लिँदा सानु घिऊ हाले अम्लिएर पोखिन लागेको खोले फेरि घटेर तल शान्त हुन्छ त्यस्तै नै हुन्छ शून्यताको ज्ञानबोध भए वहाँको स्वभाव।

जेचुन मिला रेपा – "आत्मा ग्रह (स्वार्थपरता) त्याग, त्यो जस्तो ठूलो दान परामिता अरू कुनै छैन। धूर्तता, छल कपट गर्नु त्यागे त्यो भन्दा ठूलो शील परामिता अरू कुनै छैन। शून्यताको गम्भीर अर्थ सुन्दा नडराए नतर्सिए भयभीत नभए त्यो जस्तो ठूलो क्षान्ति (सहनशीलता) परामिता अरू कुनै छैन। नित्य ग्रन्थ पाठ स्मारण गरे त्यो जस्तो ठूलो वीर्य (कोशिश) परामिता अरू कुनै छैन। निसर्ग सचेत अवस्थामा आनन्दित भईरहे त्यो भन्दा ठूलो ध्यान अरू कुनै छैन। सर्ववस्तु, अस्तित्वहीन भनी बोध भए त्यो भन्दा ठूलो प्रज्ञा परामिता अरू कुनै छैन। कर्ताले धर्मको परिणाम बोध गरे त्यो जस्तो ठूलो उपाय कौशल परामिता अरू कुनै छैन। चार मार – देवपुत्र मार,

क्लेश स्कंदा मार, रूप स्कंदा मार र मृत्यु पति स्कदां मारलाई दमन गर्न सके त्यो जस्तो ठूलो बल परामित अरू कुनै छैन। आफू र परहित (अरू) दुवैको फायदा हुने वा दुवैको अर्थ सिद्धि हुन सके त्यो जस्तो ठूलो प्राणीधाणा परामिता अरू कुनै छैन। दिपङ्कर श्री ज्ञाना – "अनात्मको ज्ञानबोध भएको उत्तम पण्डित हुन्। आफ्नो मन वशमा गरे त्यो उत्तम भिक्षु हुन्। सर्व प्राणीको हित र कल्याण गरे त्यो उत्तम गुण हो। सधैं नित्य आफ्नो मनलाई हेर्ने उत्तम उपदेश पाएको हो। सर्व धर्मको वा सर्व जगतको स्वभाव नभएको बोध भए त्यो उत्तम प्रतिपक्ष हो। सांसारिक मानिसको आचरणसंग नमिल्दो आचरण गरे त्यो उत्तम आचरण हो। क्लेश कम्ति कम्ति, सानु सानु भएर गए त्यो उत्तम सिद्ध फल पाएको हो। लोभ कम्ति भएर जाने चिनो उत्तम सिद्ध प्राप्त गर्ने हो। लालच नभएको उत्तम दान हो। मन शान्ति हुने उत्तम शील हो। सानु भएर बस्नु उत्तम क्षान्ति हो। कार्य हल गर्ने

उत्तम वीर्य (कोशिश) हो। मन चन्चल नभई कन स्वयं तयार हुने उत्तम ध्यान हो। सर्व वस्तु नछुट्टाउने उत्तम प्रज्ञा हो।"

**पञ्चमार्ग र दशभूमि ज्ञान क्रमैसित बोध गर्ने विषय -**

*१) सम्भारमार्ग २) प्रयोगमार्ग ३) दर्शनमार्ग ४) भावनामार्ग ५) अशिक्षितमार्ग। यी पाँचमार्गलाई पञ्चमार्ग भन्दछन्।* दशभूमि ज्ञान क्रमैसंग यसप्रकार छन् -

*१) प्रमुदिता २) विमला ३) प्रभाकर ४) अचिष्मिती ५) सुदुर्जया ६) अभिमुक्ति ७) दूरङ्गमा ८) अचला ९) साधुमति १०) धर्म मेघा।*

यी दशभूमि ज्ञान महायान शिक्षा मार्ग हुन्।

श्रावक यान र प्रतेक यान हीनयानमार्गी हुन्। श्रावक भगवान् बुद्धले धर्मको प्रवचन गर्नु हुँदा वहाँको वाणी सुनेर मात्र बस्ने, तर वहाँको वाणी कस्तो छ, के कारण प्रवचन गर्नु हुँदैछ, कुन स्थीतिमा कस्तो प्रवचन गर्नु हुँदैछ ? त्यसको विचार र विवेक केही नगरी सुनेर मात्र बस्ने, वहाँको वाणीलाई मनभित्र चिन्तन ध्यान, विवेक नगरेर सन्नु मात्र खुशी भई प्रसन्न हुने श्रावक हुन्। प्रतेकयान भगवान् बुद्धका वाणी के हो ? कस्तो हो ? के कारण यस्तो वाणी गर्नु हुँदैछ भनी विचार र विवेक गरेर वहाँको वाणीको मर्म तथा अर्थ बुझेर यो संसार दुःख रहेछ भनी थाहा पाएर आफु मात्र यो दुःखबाट मोक्ष पाउने इच्छा गर्ने प्रतेकयान हो। यी दुई श्रावक र प्रतेकयानले हीनयानका पञ्चमार्ग ज्ञान मात्र प्राप्त गर्नु सक्छन् तर महायानका दश भूमिज्ञान प्राप्त गर्नु सक्दैनन्। श्रावक र प्रत्येकयानले पञ्च मार्ग ज्ञान निम्न वर्ग पुरूषका

मार्ग अभ्यास गरी सकेर . यो संसारमा जहाँ जन्म लिए तापनि दुःखै दुःख मात्र रहेछ भनी बुझ्दछन्। त्यसपछि यो पाएको अमूल्य मानव जीवन फेरि फेरि पाउनु, धन सम्पतिको जीवन प्राप्त गर्नु अति दुर्लभ रहेछ भनी बुझ्दछन्। यसरी सर्व जगत दुःख पर्ण रहेछ भनी बुझेर र जानेर वैराग्य चेतना उत्पन्न भइसकेपछि, अन्तरिक (भित्री) मनबाट नै वैराग्य चेतना उत्पन्न हुन्छ। वैराग्य चेतना यस्तो प्रकारले उत्पन्न हुनपर्छ कि अटल र स्थिर वैराग्यपन हुनुपर्छ। अपखिर्तनशील यस्तो प्रकारको वैराग्य चेतना उत्पन्न भइसकेपछि यो संसारको दुःखदेखि आफु मात्र मोक्ष हुने इच्छा भएर दश अकुशलपाप त्याग्ने चेष्टा गर्छ, दश कुशल धर्म र पूण्य गर्ने चेष्टा तथा प्रयत्न गर्छ। यस्तो प्रकारको भित्री हृदयबाट वैराग्य चेतना उत्पन्न भएको सम्भरमार्ग बोध भएको चिनो हो। सम्भरमार्ग ज्ञानबोध भएपछि सकृत्यगामी गुणबोध हुन्छ। सकृत्यगामी भनेको यो संसारमा एकपल्ट फेरि पूण्य र कुशल कर्म गर्न जन्म लिनुपर्छ। तर जन्म लिए तापनि दुर्गतिको जन्म लिनु पर्दैन। महापुरूष वा महापण्डित वा ऋषी कुनै एकको जन्म हुनेछ। सम्भरमार्ग ज्ञानबोध भएपछि नरक, पशु र प्रेतलोकमा कहिले पनि जन्म लिन पर्दैन। सम्भरमार्ग ज्ञानबोध भइसकेपछि मोक्ष प्राप्त हुनका लागि के कसो गर्नु पर्छ, कुशल कर्म र पूण्य संचय गर्नु पर्ने बुझेर दश अकुशल पाप त्याग्छ, अनि दश कुशल धर्म गरेर पूण्य सञ्चय गर्छन्। यसरी पूण्य सञ्चय गरेर, पूण्य बढ्दै बढ्दै जान्छ। जति पूण्य सञ्चय हुन्छ, पूण्य बढ्दै जान्छ त्यति नै हाम्रा पूर्वजन्मका पाप कम्ति कम्ति भएर घटदै जान्छ। जस्तो कि एउटा भाँड़ाको एक लिटर पानीमा एक मुट्ठी नून हालेर यदि कसैलाई पिउन दिए कहाँ पिउन सक्छ र ? नून चर्को भएको कारणले पिउन सक्दैन। त्यही भाँड़ामा यदि पानी पाँच लिटर

हाली दिए अघिको नून चर्को भएको स्वाद हराएर कम्ती मात्रमा नूनको स्वाद हुनेछ, अझै पानी धेर हाले नूनको स्वाद हराएर जानेछ। त्यस्तै गरी पाप कर्मलाई कम गराउन धर्म, पूण्य कुशल कर्म ज्यादा मात्रामा गर्नुपर्छ अनि विस्तार विस्तार अघि जन्मको भए पनि, यही जन्मको पाप कर्म भए पनि कम्ति कम्ति भएर जानेछ। यसरी पूण्य बढ्दै जाँदा पाप घटदै जानेछ अनि प्रयोगमार्ग ज्ञानबोध भएर आउँछ। प्रयोगमार्ग ज्ञानबोध भएपछि स्रोत आपन्न (स्रोतापन्न) गुण प्राप्त हुन्छ। यो गुण प्राप्त भएपछि मोक्षको मार्गमा निरन्तर लागिरहनेछ।

*उदाहरण* - हामी कसैले विदेश जाने इच्छा गरे, इच्छा गरेर मात्र विदेश जान सक्दैन फेरि विदेश जाने योग्यता र क्षमता पनि हुनपर्छ अनि मात्र आफ्ना योग्यतानुसार विदेश जाने इच्छा गर्छ। यसरी इच्छा मात्र गर्नु सम्भरमार्ग प्राप्त गरेको जस्तो हो। अब इच्छाअनुसार त्यस व्यक्तिले विदेश जानका निम्ति तयार गर्नुपर्छ। प्रथम त उसकोमा प्रशस्त मात्रामा धन हुन पर्‍यो, त्यसपछि पासपोर्ट बनाउनु पर्छ, जुन देशमा जान्छ त्यस देशबाट स्वीकार पत्र (भिसा) पाउन पर्छ। यी सबै तयार भइसकेपछि फेरि आफूलाई चाहिने समान, लुगाहरू पनि तयार गर्नुपर्छ अनि मात्र विदेश जान सकिन्छ। त्यस्तै प्रकारले सम्भरमार्ग ज्ञान प्राप्त भइसकेपछि मोक्ष पाउनका निम्ति धेरै कुशल कर्म, पूण्य सञ्चय गरेर, सम्पूर्ण सुकर्महरू जोगाड़ गरेर, बटुलेर यही पूण्य कर्म गरेका कारणले, उत्तम पूण्य बढ्दै गए मात्र प्रयोगमार्ग ज्ञान प्राप्त हुन्छ। सभ्भर र प्रयोगमार्ग ज्ञानबोध भएपछि पुद्गल आनात्मकको ज्ञान सपना जस्तो बोध भएर आउँछ। पुद्गल आनात्मक भनेको चाहिँ "म" भन्ने के हो? कस्तो हो? यसको स्वभाव कस्तो छ ? के कस्तो भन्ने

स्वभाव बुझ्ने जस्तो मात्र, कता कता सपना जस्तो, भ्रम जस्तो, स्पष्ट रूपले चाहिँ बोध गर्न सक्दैन, साधरण रूपले मात्र बोध भए जस्तो हुन्छ ।

*साधरण रूपको उदाहरण* – हामी आफ्ना घरबाट अलग भएर परदेशमा बसेको समयमा यदि कसैले घरको सम्झना गराइदिए या त घरबाट पत्र आए, पत्रमा गाउँ-घरको विषयमा हालखबर पढ्दा घरको सम्झना र कल्पना आफ्नो आँखामा झलझली आउँछ । यसरी पत्र पढ्दा आफू पनि घरैमा छु जस्तो हुन्छ घरका सर्व परिवारका नक्सा आँखामा झलझली आउँछ । यी सब झझल्को वा कल्पना हो । आफू घर नपुगी कसरी स्पष्ट र प्रत्यक्षरूपमा देख्न सक्छ र ? घरमा पुग्दा मात्र स्पष्ट र प्रत्यक्षरूपले सबै देख्न सक्छ । त्यस्तै प्रकारले आनात्मकको ज्ञान कल्पना जस्तो मात्र बोध हुन्छ, प्रेत्येक्ष र स्पष्ट रूपले होइन ।

जब "म" रहित सत्य, "म" भन्ने स्पष्ट सत्य रूपले चिनेर आउँदा स्पष्ट र प्रत्येक्ष रूपमा आत्मग्रह "म" रहितको सत्य ज्ञानबोध हुँदा क्लशष्टति बाट मुक्त हुन्छ । मोटा मोटी क्लश बाट छुटिन्छ अनि दर्शन मार्ग ज्ञान प्राप्त हुन्छ । शून्यताको दर्शन हुँदा मात्र दर्शनमार्ग ज्ञान प्राप्त हुन्छ । शून्यता दर्शन भएपछि शून्यता कस्तो छ भनी प्रश्न गर्दा उत्तर दिन सक्दैन, जसले शून्यताको ज्ञानबोध हुन्छ उसैले मात्र अनुभव गर्न सकिन्छ । यो ज्ञान प्राप्त हुँदा अत्यन्त आनन्द, खुशी प्राप्त हुन्छ जुन आनन्दको सीमा हुँदैन, यस्तो आनन्द भनेर वर्णन गर्न पनि सक्दैन । *उदाहरण* – जस्तो कि अमृत वा चिनी कुनै व्याक्तिले खाएपछि, उसलाई प्रश्न गरे त्यो अमृत कस्तो रहेछ भन्दा – "मिठो रहेछ" भनि जवाब दिन्छ । कस्तो मिठो भनी प्रश्न गरे उसले चिनी जस्तो भनी जवाब

दिन्छ। यदि हामीलाई चिनीको स्वाद कस्तो छ भनी थाहा नभए त्यस अमृतको स्वाद थाहा पाउने छैन। अमृतको मिठो र त्यसको स्वाद यस्तो छ भनी देखाउनु सक्दैन जसले खाएको छ उसले मात्र जान्दछ कि त्यसको स्वाद कस्तो छ भनी। अमृतको मिठास चिनी जस्तो छ भनी उदाहरण दिँदा मात्र बुझ्न सकिन्छ कि अमृत गुलियो रहेछ भनेर। तर चिनीको स्वाद पनि नजानेको भए यस्तो छ भनेर, आँखाले देख्न सक्दैन, थाहा पाउने छैन। जबसम्म आफैले खाँदैन वा चाख्दैन तबसम्म आफुले स्वाद थाहा पाउँदैन। यस्तै गरी शून्याताको ज्ञानबोध भए पछि प्रत्येक्षरूपले यस्तो हुन्छ भनी वर्णन गर्न सक्दैन। जसले बोध गर्छ उसैलाई मात्र थाहा हुन्छ त्यो ज्ञानको मिठास। अर्को उदाहरण - यदि कसैलाई दाँत दुःखे त्यस मानिसलाई कतिको पीड़ा हुन्छ त्यो कष्ट र पीडा उसैले मात्र जान्दछ। यदि यस्तो दाँत दुखाई अरू कसैलाई भए त्यस मानिसले जान्दछ कि यसको पीडा यस्तो हुन्छ भनेर, यस्तो पीड़ा भएको मानिससलाई मात्र थाहा हुन्छ यस्तै गरी अरू रोग पनि त्यस्तै हो जसलाई पर्छ उसले मात्र जान्दछ। यस्तो प्रकारको ज्ञानबोध भएको मानिसले मात्र जान्दछ कि यस ज्ञानको मिठास कस्तो छ भनी।

दर्शनमार्ग प्राप्त भएपछि अनागामि गुण प्राप्त हुन्छ। अनागामिको अर्थ यस संसारमा फेरि फेरि जन्म लिन पर्दैन जन्मको अन्त हुन्छ। अर्थात जन्म र मरणबाट मुक्ति हुन्छ। दर्शन मार्गसम्म पुग्न नदिने मुख्य बाधा क्लेश हुन, जब यो क्लेशबाट मुक्ति हुन्छ त्यस बेलामा दर्शन मार्ग ज्ञानबोध हुन्छ। दर्शनमार्ग ज्ञानबोध भएपछि साधरण पृथकजनदेखि उच्च दर्जका आर्यसंघ हुनेछ। सम्भर र प्रयोगमार्गसम्म साधरण पृथकजन नै हुन्छ वा भन्दछन्। जब दर्शनमार्ग ज्ञानबोध हुन्छ

तब मात्र सांधरण पृथकजनबाट "आर्थ संघ" हुनेछ। आर्य संघ भइसकेपछि ध्यान नगरेको समयमा, फाल्टो समयमा, जब फुर्सद हुन्छ त्यस समयमा आर्यहरू त्यसै समय नष्ट गर्दैनन्। यसरी ध्यान नगरेको फाल्टो समयमा वहाँहरूले षष्ट परमिताबाट पूण्य सञ्चय गर्छन्। जब ध्यान गर्छन्, यही ध्यानभावना अवस्थाबाट शून्यताको ज्ञान भएको कारणले ज्ञान पूण्य संचय गर्छन्। यसरी पूण्य र ज्ञान यी दुइ पूण्यका बलले भावनामार्ग ज्ञान प्राप्त हुन्छ। भावनामार्ग ज्ञानबोध भएपछि भावनामार्गको ज्ञानले अरू रहेको जन्म जन्मको क्लेशष्टति (क्लेशशावरण) जराबाट नै नष्ट गरिदिने छ। क्लेश भन्नाले के हो भने - रिस, राग, मोह, तृष्णा, घृणा आदि हुन्। यी सर्व क्लेशावरणलाई दमन गरी सकेपछि अर्हत प्राप्त हुसन्छ। क्लेश भन्नाले आफूभित्र भएको दुश्मन हो, बाहिरी दुश्मन होइन। अर्हत प्राप्त गरिसकेपछि अशिक्षितमार्ग ज्ञान प्राप्त हुन्छ। हीनयान मार्गीले अशिक्षित मार्गज्ञान प्राप्त गर्छ। हीनयान मार्गीले अशिक्षितमार्ग ज्ञानबोध भएर अर्हत प्राप्त हुँदा बुद्धत्व ज्ञान प्राप्त गरेको भन्छन्। श्रावक र प्रत्येक यानको मार्गज्ञान यहींसम्म मात्र हो।

अब यही मार्गज्ञान महायानमा कसरी बोध हुन्छ भने - प्रथम अघि झैं निम्नबर्ग पुरूषको अभ्यास गरी सकेपछि यस संसारमा (षष्ट गति) जहाँ जन्म लिए तापनि दुःखै दुःख मात्र रहेछ भनी बुझेर यो संसारदेखि मुक्त हुनको निम्ति वैराग्य चेतना उत्पन्न हुन्छ। यसरी वैराग्य चेतना उत्पन्न भएर, संसारका सर्व प्राणीप्रति करूणा उत्पन्न भएर उपेक्षा (समता) देखि लिएर छवटा हेतु विषय ध्यान गर्छन्। आफुलाई जस्तो दुःख हुन्छ त्यस्तै दुःख अरूलाई पनि हुन्छ। आफ्नो दुःख र अरू

प्राणीको दुःख एकै सम्भन्छन्। सर्व प्राणी हाम्रा पूर्वजन्मका माता पिता हुन् भन्ने ज्ञानबोध भएर आउँछ अनि सर्व प्राणीको हित र दुःखबाट मुक्ति गराउने उपाय गर्छन्। यी उपायं गर्नु भन्दा पहिला उपेक्षादेखि छवटा हेतु विषय ध्यान गर्छन्। छवटा हेतु यस प्रकार छ १) आमा चिन्ने २) आमाको गुण सम्भने ३) आमाको गुण फिर्ता गर्ने ४) मैत्री भावना गर्ने ५) करूणाको भावना गर्ने ६) अभ्फ ज्यादा भावना गर्ने (यो छवटा हेतु विषय अघि पहिला नै वर्णन गरी सकेको छ) सर्व प्राणी हाम्रा पूर्वजन्मको माता पिता हुन् भन्ने ज्ञानबोध भएपछि यहि जन्मको आमाले हामीलाई कस्तो गुण गरेका छ। त्यसरी नै सर्व प्राणीले पूर्वजन्ममा हामीलाई कति ठूलो गुण गरेको छ भनी सम्भेर वहाँहरूको गुण फिर्ता गर्ने उपाय गर्ने, कसरी हुन्छ, यस्तो दुःखबाट मुक्ति दिने कोशिश गरेर महासुख दिने चेष्टा गर्नु पर्छ। यसरी दुःखबाट मुक्ति गर्ने र सुख दिने चेष्टा गर्दा प्रथम चार अत्यन्त उत्तम र महत्वपर्ण गुण अभ्यास गर्नु पर्छ। यी चार गुण यस प्रकार छन् –

१) सर्व प्राणीले सुख र आनन्द पाउन सकुन् अनि सुखको हेतु पाउन् भनी मैत्री गर्ने।

२) सर्व प्राणीको दुःख कष्ट जरादेखि नष्ट होस्, अनि दुःखको हेतु पनि नष्ट भएर जावस् भनी करूणा गर्ने।

३) सर्व प्राणीले दुःखरहितको सुख प्राप्त गरून् अनि सुख र शान्ति एक क्षण पनि नछुटियोस् भनी भावना राख्ने।

४) सर्व प्राणीमाथि अटुट उपेक्षाको उत्तम र महत्वपूर्व गुण नित्य स्थिर रहोस् भनी मैत्री राख्ने।

सुख प्राप्त हुने कारण र हेतु दश कुशल धर्म हो। दश कुशल धर्म गरे फल सुख प्राप्त हुनेछ। दुःख पाउने कारण र हेतु दश अकुशल पाप हो। दश अकुशल पाप गरे फल दुःख पाउने छ। उपेक्षाको अर्थ शत्रु वा दुश्मनलाई हामी घृणा र रिस गर्छौं। आफ्नो इष्टमित्र बन्धु बान्धवलाई अति स्नेह, माया र ममता गर्छौं, ईष्टमित्रप्रति पानी उम्लेको जस्तो तृष्णा गर्छौं। यस्तो प्रकारको व्यवहार नगरेर सबैलाई एक समानको दृष्टि राख्ने, शत्रुप्रति रिस पनि नगर्ने इष्टमित्रप्रति माया मोह पनि नगरी, शत्रु, इष्टमित्र दुवैलाई बराबरको करूणा र मैत्रीको दृष्टिले हेर्ने र एक समानको व्यवहार गर्ने उपेक्षा हो।

यसरी सर्वप्राणी हाम्रा पूर्वजन्मका माता पिता हुन् भनी विचार राखेर आफूलाई जस्तो सुख पाउने इच्छा गर्छ त्यस्तै सर्वप्राणीले पनि सुख पाउने इच्छा गर्छ। सुख पाउने इच्छा त गर्छन् तर सुख पाउने विऊ "धर्म कुशल कर्म; गर्न जान्दैनन् र सुखको विऊ रोप्नु जान्दैनन्। दुःख सानु पनि त्याग्ने चेष्टा गर्छन् तर दुःखको विऊ "पाप कर्म, अकुशल कर्म" त्याग्न जान्दैनन्। विऊ विना फल कहाँ पाउँछ ? जस्तो विऊ उस्तै फल पाउँछ। यस्तो अज्ञानतामा परेका प्राणीहरू सबै हाम्रा पूर्वजन्मका माता पिता हुन् भनी भगवान् बुद्धको वाणी र यिनीहरूका हितका निम्ति मैत्री र करूणाका भावना गरे बोधिचित्त उत्पन्न हुन्छ। यसरी बोधिचित्त उत्पन्न भएर आउँदा महायानका सम्भरमार्ग ज्ञानबोध हुनेछ। सम्भरमार्ग ज्ञानबोध भएपछि चित्त स्थिर भई ध्यान गर्दा समाधिबाट धर्मधातुको (शून्यता) गम्भीर अर्थ स्पष्ट रूपले प्राप्त नभई सपना जस्तो साधरणतः रूपले प्राप्त गर्छ। साधरणतःको अर्थ माथि बताए जस्तो काल्पनिक धर्म धातुको गम्भीर अर्थ प्राप्त हुन्छ।

सम्भरमार्गका अंग क्रमैसित निम्न सम्भरमार्ग, मध्यम सम्भरमार्ग र ठूलो सम्भरमार्ग छन्।

निम्न सम्भरमार्गबोध भएर आउँदा यी चार चत्वारि स्मृत्युपस्थानानि ज्ञानबोध हुन्छ , ती हुन् -

१) काय स्मृत्युपस्थान

२) वेदना स्मृत्युपस्थान

३) चित्त स्मृत्युपस्थान

४) धर्मस्मृत्युपस्थान

यी चार स्मृत्युपस्थानानि ज्ञानबोध भइसकेपछि माध्यम सम्भरमार्गको ज्ञानबोध भएर आउँदा फेरि अर्को चार परित्याग ज्ञान प्राप्त हुन्छ।

१) दश अकुशल पाप आफूमा उत्पन्न भएको त छैन भनी जाँच्ने अनि उत्पन्न हुनु पनि नदिने।

२) अलि अलि अकुशल पाप उत्पन्न भएको पनि त्याग गर्ने।

३) कुशल धर्म उत्पन्न नभए पनि मनमा उत्पन्न गराउने।

४) यस्तो कुशल धर्म वृहत् रूपमा बड़ाएर लाने। चार परित्याग ज्ञानको गुण प्राप्त भएको कारणले ठूलो सम्भर मार्ग प्राप्त भएर आउँछ। यी ज्ञान बोध हुँदा चार-चत्वर ऋद्धिपाद शक्ति प्राप्त हुनेछ।

१) इच्छा (छन्द) समाधि प्रहाणाय संस्कार समन्वागत

२) चित्ता समाधि प्रहाणाय संस्कार ऋद्धिपाद।

३) वीर्य समाधि प्रहाणाय संस्कार ऋद्धिपाद।

४) मीमांसा समाधि प्रहाणाय संस्कार ऋद्धिपाद।

सम्भरमार्ग ज्ञानबोध भएपछि सकृदागामी (सकृत्यगामी) गुणबोध हुन्छ॥ सम्भरमार्गमा प्राप्त भएका सर्वज्ञान र गुणको बलले चित्त स्थिर र अचल भई ध्यान समाधिको बलले "युगल संयोग" साधरण रूपले वा काल्पनिक रूपले ज्ञान प्राप्त भएर आउँदा "प्रयोगमार्ग" ज्ञानबोध हुनेछ। साधरण वा काल्पनिक रूपको उदाहरण माथि बताए अनुसार बुझ्नपर्छ। प्रयोगमार्ग ज्ञान प्राप्त हुँदा यी चारवटा ज्ञानबोध हुन्छ।

*१) उष्णता वा उत्साह (उष्ण गतम)*

*२) शिखरा (मूर्दा टुप्पा)*

*३) धैर्य (क्षान्ति)*

*४) उत्तम धर्ममा लीन भएको।*

यी चार ज्ञानबोध भएपछि फेरि यी चार ज्ञान दुइ दुइ गरी दुइ अंगमा विभाजित हुन्छ। प्रथम उष्णता र शिखरा दोस्रो धैर्य र उत्तम धर्म। प्रयोगमार्गको उष्णता र शिखरमा पाँच इन्द्रिय अधिकार (शक्ति) ज्ञान प्राप्त हुन्छ। ती हुन् *१) श्रद्धेन्द्रिय २) वीर्य्येन्द्रय ३) स्मृति इन्द्रिय ४) समाधीन्द्रिय ५) प्रज्ञेन्द्रिय* दोस्रो प्रयोगमार्गको धैर्य र

उत्तम धर्ममा चाहिँ पञ्चबल प्राप्त हुन्छ – ती हुन् –

१) श्रद्धाबल २) वीर्य बल ३) स्मृति बल ४) समाधि बल ५) प्रज्ञाबल ।

प्रयोग मार्ग सम्पूर्ण रूपले प्राप्त हुँदा पञ्च इन्द्रिय शक्ति र पञ्चबल दुवै शक्ति प्राप्त भइसकेको हुन्छ । यी दश शक्ति र गुण प्राप्त भइसकेपछि धर्म धातु– शून्यताको सत्यज्ञान स्पष्ट रूपले देखेर आउँदा यी सत्य ज्ञानको शक्तिले क्लेशावरण जराबाट नै छोड़िन्छ वा त्यागिन्छ । यसरी शून्यता स्पष्ट रूपले देखेर आउँदा दर्शनमार्ग ज्ञानबोध हुन्छ । यो ज्ञान प्राप्त भएपछि यस संसारमा जन्म लिने कारण र मृत्यु हुने कारण थाहा पाउनेछ । दर्शनमार्ग ज्ञान प्राप्त भएपछि संसारका साधरण पृथकजन मार्गबाट आर्य मार्गको प्रथम भूमिज्ञान प्रभुदिता प्राप्त हुन्छ अनि आर्य संघ बन्नेछ वा कहलाउँछ वा आर्य संघको उपाधि पाउनेछ । प्रथम भूमिदर्शन मार्गज्ञान प्राप्त भएपछि यस संसारमा जन्म लिनु पर्दैन । यो ज्ञान प्राप्त भएपछि अत्यन्त आनन्द प्राप्त हुनेछ । अलौकिक काम गर्न सक्नेछ । यो ज्ञान प्राप्त भएपछि सत्य धर्म लिन पर्ने र त्याग्न पर्ने क्लेश पाप आदि, त्रिरत्नको गुण र ज्ञान सबै स्पष्टसंग बुझेर आउने छ । समुदयार्य सत्य र दुःखार्य सत्य छोड़न पर्ने हो अनि त्याग्ने समर्थक ज्ञान प्राप्त हुन्छ । निरोधार्य सत्य र मागार्य सत्य प्रताङ्ग बोध हुने गुण र ज्ञान प्राप्त हुन्छ । सप्त प्रताङ्ग बोधि चित्त (बोधिचित्त) यस प्रकार छ –

*१) सम्यक स्मृति २) सर्वधर्म विवेचना ३) वीर्य ४) प्रमुदिता आनन्द ५) शुद्धता ६) समाधि ७) उपेक्षा वा समता ।*

यति ज्ञानबोध भइसके पछि ध्यानबाट छुटेर फाल्टो समयमा जब ध्यान गरेको हुँदैन, विश्राम अवस्थामा जब फूर्सदको समय हुन्छ, त्यसबेला आर्य संघहरू त्रिरत्नलाई ढोग गर्नेछन्, त्रिरत्नको शरण गमन गर्नेछन्, चैत्य, त्रिरत्नका प्रतिमा, भगवान् बुद्धका परिक्रमा गर्ने गर्छन्, त्रिरत्नको पूजा गर्छन्, षष्ट परमिताबाट दान गर्छन्, शीलपालन गर्छन्, क्षान्ति अभ्यास गर्छन्, वीर्य कोशिश गर्छन्। यस्तो प्रकारले कुशल पूण्य सञ्चय गर्ने काम गर्छन्। फेरि ध्यान समाधि गर्छन्, ध्यान भावना आवस्थामा धर्म्मता - शून्यताको ध्यान गर्दा शून्यता प्रत्यक्ष रूपले बोध भएर आउँदा ध्यानावस्थामा नै ध्यानाभ्यास (भावना) अधिकार (शक्ति) प्राप्त हुन्छ। यस मार्गबाट भावना मार्गको ज्ञान बढ्दै जान्छ र आर्य अष्टांगिक मार्गको ज्ञान प्राप्त हुन्छ। आर्य अष्टांगिक मार्ग यस प्रकार छ।

१) सम्यक दृष्टि

२) सम्यक संकल्प

३) सम्यक वाक्

४) सम्यक कर्म्मान्त

५) सम्यक आजीव

६) सम्यक व्यायाम

७) सम्यक स्मृति

८) सम्यक समाधि

प्रमुदिता प्रथम भूमिज्ञान दुई भागमा विभक्त भएको छ। पहिलो भाग दर्शनमार्ग अनि दोस्रो भाग भावनामार्ग हुन्। दर्शनमार्ग प्राप्त भएर जब फेरि शून्यताको ध्यानमा रहँदा भावनामार्ग प्राप्त हुन्छ जब भावनामार्ग प्राप्त हुन्छ अनि भावनामार्गभित्र नै दश भूमिज्ञान सम्म मेलैसंग प्राप्त हुनेछ। दशभूमि ज्ञान मेलैसंग प्राप्त गर्ने निति अभिसमय अलङ्कार (ङोन तोग गेन) बमोजिम यस प्रकारले बताएको छ –

"प्रथम ठूलो, मध्यम र सानु गरी तीन भागमा गरिएको छ। यी ठूलो पनि तीन भागमा विभक्त गरिन्छ १) ठूलोको ठूलो २) ठूलोको मध्यम ३) ठूलोको सानु। फेरि मध्यम पनि तीन भागमा विभक्त गरिन्छ १) मध्यमको ठूलो २) मध्यमको मध्यम ३) मध्यमको सानु। त्यस्तै गरि सानु पनि तीन भागमा विभक्त गरिन्छ १) सानुको ठूलो २) सानुको मध्यम ३) सानुको सानु। यहाँ ठूलो भन्नाले ठूलो कोशिश, ध्यान बुझ्नु पर्छ। ठूलो भन्नुको मतलब के हो भने प्रथम भूमि ज्ञान बोध भएर आउँदा भावना मार्ग प्राप्त गर्नुको निम्ति मनको स्वभाव र शून्यताको ध्यान धेरै ठूलो, जोड़ लगाएर गर्नुपर्छ। यसरी ठूलो कोशिश गरेर ध्यान गरे मात्र विस्तारैसित ज्ञान बढ्दै जानेछ। १) ठूलोको ठूलो कोशिश र ध्यान अति जोड़ले गर्नुपर्ने बताएको हो। यस अवस्थामा पुगेका योगी निम्नस्थरको बुझ्नुपर्छ।

*उदाहरण* – घनघोर अँध्यारो भए बत्ती पनि ज्यादै शक्ति भएको छ भने मात्र अँध्यारोलाई काटेर उज्यालो दिनसक्छ। यस्तो घनघोर अन्धकारमा बत्तीको शक्ति कम्ति भए केही देख्न कठिन पर्छ। यस्तै प्रकारले बत्ती पनि ज्यादा उज्यालो गर्ने सक्ने हुनपर्छ। फेरि लुगाफाटामा मैला ज्यादा भए, त्यो लुगा धुनु साबुन पनि ज्यादै लगाएर जोड़संगले

धोए मात्र मैला जानु सकिन्छ। त्यस्तै प्रकारले निम्न वर्गको माधकलाई पनि ज्ञानबोध गर्न प्रथम कोशिश ठूलोको ठूलो गर्नुपर्छ। ८

जब ठूलोको ठूलोबाट घटेर ठूलोको मध्यममा पुग्दछ त्यसबेला अलिकति ज्ञान बड़ेर गएको हुन्छ। त्यसपछि ठूलोको सानुमा पुग्दा अझ अलि कति ज्ञान बड़ेर जानेछ। यस्तै प्रकारले मध्यम अवस्थामा पुग्छ। मध्यम अवस्थाको ठूलो, मध्यम र सानु अवस्थामा पुग्नेछ। सानुको पनि त्यस्तै प्रकारले ठूलो, मध्यम र सानु अवस्था पार भएर जान्छ। ज्ञान बढ्दै जानेछ। जब सानुको सानु अवस्थामा पुग्छा सबभन्दा उत्तम भएर पूर्णज्ञानबोध हुनेछ। जब आफुले ज्ञान पूर्ण रूपले बोध हुँदा कोशिश र ध्यान पनि सानु भएर जानेछ जस्तै घाम लागेको समयमा उज्यालो हुनेछ अनि बत्तीको जरूरत पर्दैन। जब आफुमा अविद्या र अज्ञान नै नरहे ज्ञानको पनि आवश्यकता पर्दैन र अज्ञानलाई हटाउने कोशिश पनि कम भएर जानेछ।

यसरी पहिलो भाग नवम गरेर दोस्रो भाग चाहिँ दशौ भूमि हो। छोड़नु पर्ने, त्याग्नु पर्ने क्लेशष्टति (क्लेश आवरण) र ज्ञेयष्टति (ज्ञेयावरण) यी दुइमा पनि माथि बताए झैं तीन भागमा विभक्त गर्नु पर्छ। १) ठूलो मध्यम २) मध्यम ३) सानु, यी तीन भागको पनि तीन तीन भाग गरेर नौ भाग हुन्छ। माथि बताए अनुसार कोशिश ठूलोको ठूलो गर्नुपर्ने कारण क्लेशावरण र ज्ञेयावरण ज्यादा वा ठूलो भएकोले हो। जब कोशिश र ध्यान ठूलोको ठूलो गर्दा यी दुई क्लेशावरण र ज्ञेयावरण अलिकति घटेर ठूलोको मध्यम अवस्थामा पुग्छ त्यस बेला कोशिश र ध्यान पनि ठूलोको मध्यम अवस्थामा पुग्छ। यसबेला क्लेशावरण र ज्ञेयावरण केही मात्रामा मात्र छुटिनेछ वा त्याग्न सक्ने

छ। यसरी कोशिश र ध्यानको स्थर विस्तारैसंग ठूलोबाट मध्यम अवस्थमा पुग्दा क्लेशावरण र ज्ञेयावरण पनि विस्तारै छोड्दै छोड्दै मध्यम अवस्थामा पुग्नेछ। क्लेशावरण र ज्ञेयावरण ज्यादा मात्रामा हुँदा कोशिश पनि ठूलोको ठूलो हुनुपर्छ अनि मात्र क्लेशावरण र ज्ञेयावरण कम भएर जानेछ, ज्यादा मात्रामा त्याग्नुपर्ने र छोड्नुपर्ने त्याग्न सकिन्छ। ध्यान र कोशिश कम हुँदै ठूलोबाट मध्यम, मध्यमबाट सानु भएर जाँदा क्लेशावरण र ज्ञेयावरण पनि ज्यादा मात्रामा त्यागी सकेको हुनेछ, प्रायः जस्तो सम्पूर्ण रूपले त्यागी सकेको हुन्छ। क्लेशावरण र ज्ञेयावरण लुगामा गाड़िएको मैला जस्तो हो, जसरी गाड़िएको मैला एकै पल्टमा जान सक्दैन, विस्तार विस्तारसंग जानेछ। कलेशावरण मोटा मोटी हिसाबले अर्हतज्ञान प्राप्त गर्दा नै सबै त्यागी सकेको हुन्छ। तर त्यस्को तुस बसेको हुन्छ। ज्ञेय आवरण अनादि कालदेखि गर्दै आएको दुषित कर्म, क्लेशावरणको तुस हो। यो ज्ञेयावरण दश भूमिज्ञान प्राप्त नभईऽजल आफ्नो मनबाट छुटेको हुँदैन। यो तुस, ज्ञेयावरण आफुमा छ वा छैन भनि छुट्ट्याउन सक्दैन।

*उदाहरण* - कुनै एउटा भाँड़ामा लसुन हालेको भए त्यो लसुन भएको कारणले त्यस कोठामा लसुनको गन्ध आईरहेको हुन्छ र लसुन गह्नाउँछ। जब त्यस भाँड़ाबाट लसुन निकालेर पनि लसुनको गन्ध बसिनै रहेको हुन्छ। त्यो भाँड़ाबाट लसुनको गन्ध जानु निकै समय लाग्नेछ। धेरै पल्ट धुँदा धुँदा मात्र त्यो लसुनको गन्ध त्यस भाँड़ाबाट हराएर जानेछ। पहिला लसुन भएको कारणले त्यो भाँड़ा धुनु पनि निकै जोड़ले धुनुपर्छ। पहिला हाम्रोमा दुषित कर्मको क्लेशावरण ज्यादा मात्रामा हुँदा कोशिश पनि ज्यादा हुनु पर्छ तब मात्र क्लेशावरण केही

मात्रमा छोड्न सकिन्छ। लसुनको तुस, गन्ध भएको थाहा पाउसक्दैन, तर कम्ति कम्ति हुँदै हराएर जानेछ। त्यसरी नै हाम्रो ज्ञेयावरणको पनि पछिसम्मै तुस बस्नेछ। यही ज्ञेयावरण भएको कारणले गर्दा सर्वज्ञ हुनु सक्दैन।

*उदाहरण* – यही ज्ञेयावरण भएको कारणले गर्दा मौदगल्यायानले आफ्नो आमाकहाँ जन्म लिएको ज्ञान जान्न नसकेको हो। श्यारी पुत्रले पनि एउटा गृहस्थीको पूर्वजन्ममा भिक्षु हुने विऊ भएको थाहा पाउन नसकेको हो।

पहिला रोग लागेको मानिसलाई रोगको कारणले विरामी हुन्छ। रोग निकै ठूलो भए दवाइ वा औषधी पनि निकै शक्ति भएको खानु पर्नेछ। औषधी खाँदा खाँदा विमार पनि कम्ति कम्ति हुँदै जान्छ। विमार कम्ति भएर जाँदा औषधी पनि कम्ति कम्ति गर्दै खानुपर्छ तब विस्तार विस्तार गरेर विमार जाति हुँदा औषधी पनि खानु पर्दैन। त्यसरी नै आफ्नो ध्यान र कोशिश ठूलोबाट मध्यम अवस्थामा पुग्दा क्लेशावरण र ज्ञेयावरण पनि एक एक गरी अलि अलि गर्दै कम हुँदै जान्छ। छोड्न पर्ने वा त्याग्न पर्ने क्लेशावरण र ज्ञेयावरण ज्यादा मात्रामा छोड्दा भावना वा ध्यान र कोशिश गर्न पर्ने पनि कम भएर जानेछ। जसरी दवाईको असरले विमार कम भएर जान्छ, दवाईको शक्ति ज्यादा र ठूलो भए विमार पनि कम्ति कम्ति हुँदै जानेछ। दवाई भावना,ध्यान, कोशिश जस्तो हो, विमार क्लेशावरण र ज्ञेयावरण हो। ध्यान अवस्थामा रहँदा एक एक गरि क्लेशावरण र ज्ञेयावरण त्यागिन्छ। ध्यान अवस्थावाट छुटेर फेरि ध्यान नगरेको समय विश्राम गर्छन्। यसरी एक भूमिबाट दोस्रो भूमिमा पुग्छ। जस्तै ध्यान अवस्थामा रहँदा

एक भूमिबाट दोस्रो भूमिज्ञान प्राप्त हुन्छ। फेरि ध्यानबाट छुटेर विश्राम गर्छन्। फेरि ध्यान गर्छन् यही ध्यान अवस्थामा नै तेस्रो भूमिज्ञान प्राप्त हुन्छ। फेरि ध्यानबाट छुटिन्छन् अनि विश्राम अवस्थामा रहन्छ। जब ध्यान अवस्थामा हुन्छ त्यस बेला शून्यताको ध्यान वा भावना गर्दा सम्वृदिको विचार केही रहँदैन। जब यस्तो प्रकारको शून्यताको ध्यान गरेर बस्दा कुनै वस्तु वा सांसारिक कुरोको विचार रहँदैन शून्यतामा लीन भएर ध्यान गर्छन् तब ज्ञान वर्ग संचय गर्छन्। फेरि ध्यान वा भावनाबाट छुटेर विश्राम अवस्थामा रहँदा पूण्य संचय गर्ने काम गर्छन् जस्तै प्राणीमाथि मैत्री र करूणाको भावना गर्ने गर्छन्, षष्ट पारमिता दान, शील, वीर्य, क्षान्ति, समाधि र प्रज्ञाको अभ्यास गर्छन्। जीनापुत्रका चार्या गर्छन्। ध्यान नगरेको समयमा पूण्यको काम गर्छन्। एक भूमिबाट अर्को भूमिमा सरेर जाँदा वा प्रगति हुँदा ध्यान वा भावना अवस्थामा शून्यताको ध्यान गर्दा ज्ञानवर्गको बलले सरेर जान्छ। प्रथम भूमि प्रभुदिताको ज्ञान प्राप्त हुँदा दान पारमिता प्राप्त हुन्छ। प्रमुदिता ज्ञान प्राप्त भएपछि ध्यानबाट छुट्टिएर विश्राम गरेको बेला क्षणभरमा नै एक सय बुद्धहरूको दर्शन गर्न पाउँछ। वहाँहरूको अधिष्ठान गर्ने ज्ञान पनि प्राप्त हुन्छ। एक सय बुद्धहरूका क्षेत्रमा पुग्नसक्नेछ। एकसय बुद्धक्षेत्र प्रकाशवान गर्न सक्नेछ। यो संसार जस्तो अरू संसार धेरै छन् तर हाम्रो शक्ति नभएकोले गर्दा देख्न सक्दैनौं, जान्न सक्दैनौं यस्तो प्रकारको संसार अनगन्ती छ। त्यसमध्ये एकसय संसारमा जानु सक्ने शक्ति पाउनेछ। एकसय कल्पको ज्ञानबोध हुन्छ। एकसय कल्प पूर्व वा भूतकालको ज्ञान सबै जान्नसक्छ। एकसय कल्प भविष्यको ज्ञान पनि सबै जान्नसक्छ र बोध भएको हुन्छ। एक सय विषम (भिन्नाभिन्न) प्रकारको समाधि प्राप्त हुन्छ। एक सय धर्म विषय

भिन्न भिन्न रूपले स्थपना गर्न सक्छ, जस्तै एक सय धर्म केन्द्र स्थापना गर्न सक्छ अनि क्षमता हुन्छ। एक सय प्राणीहरू (मानिस) लाई धर्मको वाणी सुनाएर मन फकाउनु सक्छ अनि धर्मको मार्गमा लगाएर मोक्ष प्राप्त गराउन सक्छ। आफ्नो शरीर एक साथमा एक सय निमार्ण वा प्रकट गर्नु सक्छ। आफ्नो शरीर एक एक गरी सबै आफु जस्तो एकै साथ एक सय शरीर (रूप) प्रकट भइ भिन्न भिन्न ठाउँमा भिन्न भिन्न धर्म प्रवचन दिनु सक्छ। एक सय प्रत्यक्ष रूपमा प्रकट भएको शरीर (रूप) ले एक सय बोधिसत्वहरूको परिक्रमा गर्न सक्छ। दोस्रो भूमि विमला ज्ञान प्राप्त हुँदा यो भन्दा दुइ गुणा ज्यादा शक्ति प्राप्त हुन्छ। प्रथम भूमि प्रमुदिता ज्ञान प्राप्त भएपछि कर्मको अधीनबाट मुक्ति हुन्छ र आफ्नो इच्छानुसार कर्म गर्न सकिन्छ, कर्म पछि हुन्छ। कर्म आफ्नो अधिनमा हुन्छ।

उदाहरण - अहिले हामी कर्मको अधीनमा छौं, कर्मले जता लैजान्छ त्यतै जानपर्छ, मर्ने बेलामा - म नरकमा **जाँदिनँ**, प्रेतलोकमा **जाँदिन** पशुलोकमा **जाँदिनँ**, म देवलोकमा जान्छु भनेर आफ्नो इच्छा अनुसार जन्म लिन सक्दैन। आफ्नो कर्मले तानेर कर्मअनुसार जन्म लिनेछ। जस्तो कि बाख्रालाई, बाख्राको मालिकले तानेर लगे जस्तै, बाख्राको मालिकले जता लगे पनि त्यतै जानुपर्छ। त्यो बाख्रा आफ्नो इच्छाअनुसार कहीँ जानु सक्दैन। यदि बाख्रालाई नबाँधेर खुल्ला छाड़ीदिए त्यो बाख्रा आफ्नो इच्छा अनुसार जता पनि जानसक्छ। त्यस्तै बाख्रा हामी हौ, कर्म बाख्राको मालिक हो। जब प्रथम भूमिज्ञान प्राप्त भएपछि कर्मको अधीनमा हुँदैन, हाम्रो अधीनमा कर्म हुन्छ। जहाँ गए पनि खुशी, आफ्नो इच्छाअनुसार जन्म लिनसक्छ। जन्म लिँदिनँ भने

पनि खुशी हुनेछ। यदि जन्म लिने इच्छा भए मनुष्य लोकमा जन्म भए सारा संसारमा राज गर्नु सक्ने राजाको जन्म लिने छ।

**त्रिशिक्षाको ज्ञानबोध हुनेछ -**

*१) अधिशील शिक्षा २) अधिसमाधिशिक्षा ३) अधिप्रज्ञा शिक्षा।* यी त्रिशिक्षाको ज्ञान र गुण पूर्ण रूपले प्राप्त हुन्छ। प्रमुदिता ज्ञानबोध भएपछि ध्यानबाट छुटेर केही समयको निम्ति विंश्राम गर्छन्। ध्यान नगरेको समयमा पूण्य वर्ग सञ्चय गर्छन्। फेरि ध्यान अवस्थामा रहँदा शून्यताको भावना गर्छन् र ज्ञान वर्ग सञ्चय गरेर ध्यान अवस्थामा रहँदा नै दोस्रो भूमिज्ञान "**बिमला**" प्राप्त हुनेछ। दोस्रो भूमिज्ञान प्राप्त भएपछि केही समयको निम्ति ध्यानबाट छुटिन्छ जस्तो कि काम गर्दा गर्दा थकाई लाग्छ अनि एक क्षन आरम गर्छ त्यस्तै नै ध्यान गर्दागर्दा थाकेको जस्तो केहीक्षण ध्यानबाट छुटिन्छ र यता उति हेरे जस्तो गर्छन्। ध्यान नगरेको समयमा कुशल कर्म गरी पूण्य सञ्चय गर्ने गर्छन्। फेरि आफ्नो ध्यानमा, भावना गर्छन्। यसरी ध्यान गर्दा गर्दै, ध्यान अवस्थामा मात्र फेरि अर्को तेस्रो भूमि प्रभाकरज्ञान प्राप्त हुन्छन्। जब ध्यानबाट छुटिन्छ त्यस समय आफुमा दोस्रो तेस्रो भूमिज्ञान बोध भएकोले धेरै शक्ति प्राप्त भएको हुन्छ, हजारौं कल्प पूर्व वा भूत कालका ज्ञान जान्नसक्छ। हजारौं बुद्धका दर्शन प्राप्त हुन्छ। यस्तै धेरै ज्ञानबोध हुन्छ। यसरी ज्ञानबोध भएको साधरण पुरूषले थाहा पाउँदैन। कति ज्ञान प्राप्त भयो भनी बुद्ध र बोधिसत्वहरूले मात्र जान्दछन्। जस्तो कि कुनै मानिस विद्वान भए, वहाँ (उ) विद्वान छ छैन अर्को विद्वानले मात्र जान्दछ साधारण मानिसले जान्दैन। फेरि ज्ञान बढ्दै भूमि ज्ञान प्रथम देखि दोस्रो, तेस्रो प्राप्त हुँदा, संसारका सरकारी फौज,

पुलिस, पल्टनमा जस्तो मान बढ्दा एक तारा नाइक सुविदारबाट दुई तारा सुविदार भए जस्तो होइन। ज्ञान प्राप्त हुँदै जाँदा मानसिक बुद्धिको प्रगति हुँदै जान्छ। तारा लगाएर उपाधि जुटाए जस्तो हुँदैन। यसरी कुनै चिनो दिएर जुटाउने होइन। मानसिक बुद्धि ज्ञान मात्र ज्यादा ज्यादा बढ्दै जान्छ। जस्तो कि दश कक्षा (श्रेणी) मा जुन भूगोल, इतिहास, विज्ञान, इत्यादि पढ्नु पर्छ अनि पढ्रेर दशौ श्रेणीको क्षमता र योग्यता अनुसार बुझ्दछ र जान्दछ। त्यही पाठ कलेजमा पुगेर पढ्दा बृतान्तरूपमा पढ्रेर धेरै बुझ्दछ र ज्ञान पाउनेछ। त्यही पाठ अझ बृतान्त र गहिरो रूपले Hons र M.A मा पढ्नु पर्छ त्यस्तै प्रकारको ज्ञान पाउँछ। अघि दशौ श्रेणीमा जानेको र M.A पुग्दा जुन ज्ञान पाउँदछ, त्यो ज्ञानमा फरक पर्छ। त्यस्तै गरी भूमिज्ञान पनि जति माथि माथि प्राप्त हुन्छ, मानसिक बुद्धि ज्ञान ज्यादा ज्यादा हुँदै जान्छ। प्रथम भूमिज्ञान प्राप्त हुँदा द्वितीय दिनको चन्द्रमा जस्तै हो। द्वितीय दिनको चन्द्रमा र पूर्णिमाको चन्द्रमा एउटै हो। यति फरक छ कि द्वितीय दिनको चन्द्रमा सानु मात्र हुन्छ, सानु भए तापनि चन्द्रमा नै हो। पूर्णिमाको चन्द्रमा पनि चन्द्रमा नै हो। पूर्णिमाको चन्द्रमा पूर्ण चन्द्र हुन्छ जति बढ्नु थियो त्यो बढ्रेर पूर्ण रूपले बढेको र अब त्यहाँदेखि बढ्ने जग्गा नै छैन। भूमिज्ञान पनि चन्द्र बढ्दै ठूलो ठूलो हुँदै गए जस्तो ज्ञान बढ्दै जान्छ अखिरमा पूर्ण चन्द्रमा भए जस्तो सम्पूर्ण रूपले ज्ञानबोध गर्दा जान्नुपर्ने पनि हुँदै सबै जानिसकेको बुझिसकेको हुन्छ, त्याग्न पर्ने क्लेश पनि सबै त्यागि सकेर बाँकी रहँदैन। यस्तै प्रकारले चौथो अर्चिष्मति, पाँचौं सुदुर्जया, छटौं अभिमुक्ति, सातौं दूरङ्गमा, आठौं अचला, नवौं साधुमति र दशौं धर्म मेघ मेलैसंग प्राप्त हुन्छ। एक एक भूमिज्ञान मेलैसंग प्राप्त भएर जाँदा क्लेशावरण

र ज्ञेयावरण पनि एक एक गर्दै छोड्दै जान्छ. त्याग्दै जान्छ। यसरी त्यागी सकेपछि फेरि फेरि ज्ञेयावरण उत्पन्न नहुनको निम्ति स्वभूमिको निरोध सत्य गुण पनि एक एक गर्दै प्राप्त हुन्छ। जस्तो कि चोरले घरभित्रको समानहरू चोरेर लानेछ तर घरभित्र चोर पसेको थाहा लागे चोरलाई घरबाट निकालेर धपाउने गर्छ. जब चोर भागेर गए पछि त्यो घरभित्र फेरि फेरि चोर नपस्नुको निम्ति ताला लगाउँछ र ताला लगाए पछि चोर पस्नु सक्दैन त्यस्तै गरी आफ्नोमा भएको ज्ञेयावरण निकालेर गएपछि. त्यागी सके पछि फेरि फेरि फर्केर नआउनुको निम्ति निरोध सत्य गुण प्राप्त हुन्छ अनि ज्ञेयावरण फेरि फेरि आउनु सक्दैन। दशौं भूमि-धर्म मेघज्ञान प्राप्त भईसके पछि ध्यान अवस्थामा लीन हुन्छ। दशौं भूमिज्ञानको अन्त निरन्तर ध्यान र भावनाको धारा हुन्। दशौं भूमिज्ञान प्राप्त भईसकेपछि निरन्तर अटुट ध्यान र भावनामा लीन हुन्छ। यस समय केही विचार उत्पन्न हुँदैन। उत्तम ज्ञान प्राप्त भएर आउनेछ। यसरी अटल. ध्यान र भावनामा रहँदा कसैले भङ्ग गर्ने, बाधा दिने चेष्टा गरे पनि चेष्टा सफल हुने छैन। यस्तो प्रकारको ध्यान र भावना बज्र समाधि भन्दछ। बज्र समाधि अवस्थामा परमाणु, बम विस्फोट गराए तापनि केही असर पर्ने हुँदैन। यसै बज्र समाधिको बल र शक्तिले क्लेशावरण र ज्ञयावरणको तुस समेत, जरासहित सबै नष्ट हुन्छ अनि अशिक्षित मार्ग ज्ञानबोध भएर बुद्धत्व प्राप्त हुनेछ। अशिक्षितको अर्थ यस्तो प्रकारले बुझ्न पर्छ - कसैबाट शिक्षा लिनु नपर्ने अवस्था. जान्नु पर्ने सम्पूर्ण जानी सकेको, बुझ्न पर्ने सम्पूर्ण रूपले बुझी सकेको. नजानेको र नबुझेको केही नभएको पूर्णिमाको चन्द्रमा जस्तो बढ्नु पर्ने सम्पूर्ण रूपले बढिसकेको । त्याग्नु पर्ने क्लेशावरण र ज्ञेपावरण जरासहित एउटै बाँकी नरही त्यागी सकेको अनि पाउनु

पर्ने ज्ञान पनि सम्पूर्ण रूपले प्राप्त भएको यस अवस्थामा धर्मकाया सम्यक सम्बुद्ध प्राप्त हुन्छ जसलाई सर्वज्ञ सभ्यक सम्बुद्ध पनि भन्दछन्। धर्मकाया सभ्यक सम्बुद्ध प्राप्त भए पछि आकनिष्ठ (होगमिन शिङ) भूमिमा जान्छ। अकनिष्ठ भूमिक्षेत्रमा बुद्ध ज्ञान प्राप्त गर्नेहरू मात्र जान सक्छन् जहाँ बुद्धहरूको बासस्थान हुन्। अकनिष्ठ बुद्ध क्षेत्रमा गइसकेपछि बज्र समाधिमा लीन भएर शून्यतामा विलिन भएर रहन्छ। यस अवस्थामा प्राणीहरूको कल्याण र उद्धार गर्नु हुन्छ कि हुँदैन भन्ने प्रश्न उठने छ। आफु शून्यतामा लीन भए तापनि अघि बोधिचित्त उत्पन्न हुने समयमा वहाँहरूको प्राणीहितको प्रार्थना गर्नु भएको बलले प्राणीहरूको कल्याण र उदार भई नै रहन्छ। अकनिष्ठ भूमि क्षेत्र बाट पञ्चाल नियत (ङेपाङादेन) को शक्तिले १००कडोड़ सम्भोगकाय बुद्धहरू निर्माण (श्रृष्ठि) गर्न सकिन्छ। अरब, खरब, निर्माण कार्य श्रृष्टी (निर्माण) गर्न सक्छन्। धर्माकाया, सम्भोगकाया र निर्माण काय को उदाहरण यस प्रकार बुझाउनु सकिन्छ।

*१) धर्माकाया बुद्धत्वप्राप्ति आकाश जस्तो* – जसको अन्त पनि छैन, सीमा पनि छैन, जसको नाप पनि छैन, छुनु-स्पर्श गर्नु पनि सक्दैन। सम्भोगकाया तारा, घाम, चन्द्रमा नक्षत्र जस्तो हो। निर्माण कार्य ताराको किरण, घामको किरण जस्तो हो। किरण र प्रकाश मात्र पृथिवीसम्म आउने छ।

२) धर्मकाया चलचित्र देखाउने, कलयंत्र चलाउने मानिस जसलाई यंत्रको विषयको पूर्णज्ञान छ र धर्मकाया जस्तो हो। सम्भोगकाया कलयंत्रभित्र भएको फिलिम जस्तो हो।

निर्माण कार्य पर्दामा देखाउने चलचित्र जस्तो हो। हामीलाई

चलचित्र हेर्नुसंग मात्र मतलब छ, फिलिम, कल पूर्जा यंत्र र यंत्र चलाउनेसंग मतलब हुँदैन। मतलब नभए तापनि उनीहरू बिना हामीले चलचित्र हेर्न पाउँदैन।

३) धर्मकार्य दूरदर्शन प्रकाशक केन्द्र जस्तो हो, सम्भोग कार्य दूरदर्शन केन्द्रबाट संचार गरेको दूरदर्शन तरंग (T.V Wave) जस्तो हो। निर्माण कार्य दूरदर्शनको पर्दामा देखिने चलचित्र, नक्सा, आवाज आदि जस्ता हुन्। यसकारण धर्मकार्यका मूख्य गुण श्रोत नभए सम्भोगकार्य निर्माणकार्य हुने छैन। प्राणीहरूलाई फायदा गर्ने, उद्धार गर्ने, कल्याण गर्ने निमार्ण कार्य हो। जस्तो कि आकाशले पनि हामीलाई उद्धार गर्दैन घाम र जुनले पनि हाम्रो उद्धार र फायदा गर्दैन तर घामको किरण र जुनको किरणले मात्र हामीलाई फायदा गर्छन। फेरि आकाश र घामले फायदा गर्दैन भन्नु पनि सक्दैन कारण किरण वा प्रकाशको मूल श्रोत घाम नै हो। घामको श्रोत आकाश हो। आकाश नै नभए घामको आधार पनि नरहने। घाम नै नरहे किरण पनि नहुने हो। यस्तै प्रकारले बुझ्नपर्छ। धर्मकार्य र सम्भोगकार्यको दर्शन पाउन सक्दैन निर्माणकार्यको मात्र दर्शन पाउन सकिन्छ। धर्मकार्यबाट सम्भोगकार्य र निर्माणकार्य श्रृष्टि गरी त्रिकार्यको फल एकैचोटि प्राप्त हुन्छ। बुद्धका शरीर ।नेर्माणकार्य, बुद्धका वाणी सम्भोगकार्य, बुद्धका चित्तमा भएको ज्ञान धर्मकार्य हुन्। यसरी कार्य, वाणी र चित्तको फल प्राप्त हुन्छ। त्रिकार्यको फल प्राप्त गरी सर्व प्राणीहरू दुःखबाट धर्मका चार कर्मद्वारा पार गरिदिन्छ। १) आकाश जहाँसम्म छ त्यहाँ सम्म प्राणीहरूले भरिएको छ, यी सब प्राणीहरू दुःखै दुःखमा परेका छन्, यस्ता दुःखमा परेका प्राणीहरूलाई निर्माणकार्य द्वारा शान्ति कर्मबाट उद्धार गर्न सक्नेलाई शान्तिरूपले उद्धार गर्छन्। यस कर्मलाई शान्तिङ

कर्म भन्दछ।

२) शान्ति कर्मबाट प्राणीहरूलाई फायदा र उद्धार गर्न नसके परिपूर्ण रूपले कर्म गरी उद्धार गर्छन् यसलाई पुष्टिङ कर्म भन्दछ। ३) परिपूर्णरूपले पनि उद्धार गर्न नसक्ने प्राणीहरूलाई अलिक आफ्नो शक्ति प्रयोग गरी आफ्नो अधीनमा परी उद्धार र फायदा गर्छन्। ४) यसरी पनि उद्धार गर्न नसक्ने प्राणी धेरै छन्। जस्तो कि यही संसारमा पनि मानिसहरू एक अर्कासंग झगड़ा गर्छन् कुव्यवाहार गर्छन्। यसरी नराम्रो चाल चलन गर्नेहरूलाई राम्रो मार्गमा लगाउनका निम्ति प्रथम राम्रो प्रकारले सम्झाएर बुझाएर शान्ति प्रकारले व्यवाहार गर्छन्। बुझ्नेहरू शान्तिसंगले नै बुझी सबै संग मेल मिलाप गर्छन्। शान्ति प्रकारले सम्झाउँदा पनि नमान्नेलाई निकै कड़ा गरी सम्झाउने गर्छन् यसरी पनि नमान्नेहरूप्रति पुलिस लगाएर मुद्धा गरी गर्ने गर्छन्। अझै पनि नमान्ने भए, कुटेर हुन्छ कि पिटेर हुन्छ या त प्राणहत्या गर्छु, यदि मानेन भने डर देखाई प्राणीहरूलाई ठीक राम्रो व्यवाहार गर्ने बनाउँछन्। त्यस्तै गरी प्राणीहरू शान्तिसंग नभए कुनै उपाय गर्दा पनि नभए त्यस बेला आफू क्रोधी रूप लिई जस्तै "हाया ग्रीवा", गरूड़ा, बज्रपाणीहरूका रूप धारण गरी प्राणीहरूको उद्धार गर्छन्। यसलाई "मराया" कर्म भन्दछ। आकाश जहाँसम्म व्याप्त छ प्राणीहरू पनि त्यति नै छ। ती प्राणीहरू सबै दुःख र कष्टमा परेको छ। संसारमा जहाँ जन्म लिए तापनि दुःखै दुःख मात्र छ। राजा भए पनि राजा कै दुःख छ, मंत्री भए पनि मंत्री कै दुःख छ , प्रजा भए आफ्नै दुःख छ। दुःखी नभएको प्राणी एउटा पनि छैन। हामीहरू एक अर्कालाई देख्दा सुखी छ भन्ने सम्झन्छौ तर सबैको आफ्नो आफ्नो दुःख हुन्छ। यसकारण सर्व प्राणीहरू दुःखको सागरमा डुबेर बसेका छन्। यसरी दुःखका सागरमा डुबेका प्राणीहरू

लाई शान्तिङ, पुष्टिङ, वाश्यम र मराया कर्मको बलले दुःखका सागर सुकाईदिएर दुःखबाट मुक्ति गराइदिन्छन्।

हीनयान र महायान यी दुइ बौधमार्गीले पञ्चमार्ग ज्ञानमा कतिको फरक छ ती सबै मेलैसंग बुझाएको छ। यी दुइ पञ्चमार्गमा मुख्य के फरक र भिन्नता छ भन्दा हीनयान मार्गमा बोधिचित्त बिना नै पञ्च मार्ग ज्ञान प्राप्त गर्छन्। महायान मार्गमा प्रथम सम्भरमार्ग प्राप्त गर्नु भन्दा पहिलानै बोधिचित्तको विऊ उत्पन्न गरी, सम्भरमार्ग प्राप्त गर्दा बोधिचित्त उत्पन्न हुन्छन। महायान मार्गीले प्रथम सर्व प्राणीको हित र कल्याणको निम्ति बुद्धज्ञान प्राप्त गर्नु सकोस भनि प्रथम सम्भरमार्गमा लाग्ने समयमा नै बोधिचित्तको भावना गरिसकेको हुन्छ। महायान मार्गमा बोधिचित्त नै बुद्धत्व प्राप्त गर्ने विऊ हुनाले बोधिचित्त उत्पन्न हुनु अत्यन्त अवश्यक छ।

*तंत्रको संक्षेप निति* – गुह्य तंत्रको निति अनुसार कुनै इच्छुक व्याक्ति गुह्य तंत्रमा प्रवेश गर्ने इच्छा भए प्रथम त्यस व्यक्तिलाई चार प्रकारको अभिषेक गर्न जरूरी छ –

१) बुम्षा (कलश) को वाङ (अभिषेक) – यो कलशको अभिषेक आफ्नो शरीर, वाक र चित्त शुद्ध पार्नका निम्ति हो। मंत्रले शुद्ध पारेको कलशको पवित्र पानी दिएर पूर्वजन्मकोदेखि लिएर अहिलेसम्मको सर्व क्लेश पखालेर शरीर, वाक र चित्त शुद्ध पारी तांत्रिक गुह्य धर्ममा प्रवेश गर्ने योग्यता हुनेछ।

२) त्यसपछि "साङ वे वाङ" रहस्यम, गुप्ती अभिषेक जुन गुरुले अभिषेक गर्छ वहाँ आफै कुनै एक तांत्रिक देवताको उत्पन्नक्रम

गरी वहाँ स्वयं तांत्रीक रूप धारण गरेको भावना गरी अनि बज्रयोगिनी शक्तिको रूपमा आफुसंग संयोग भएको ध्यान गरी यसरी संयोग गर्दा जन प्रकारको आनन्द हुन्छ त्यो आनन्द वीर्यको रूपमा तांत्रिक धर्ममा प्रवेश हुने व्यक्तिलाई अभिषेक गरी आनन्द प्राप्त गरेको भावना गर्नु पर्ने छ।

३) त्यसपछि गुरुले आफ्नो शक्ति बज्रयोगिनी तंत्रमा प्रवेश हुने व्याक्तिलाई दिनेछ, त्यस व्याक्तिले पनि आफु शक्तिसंग संयोग भएको भावना गरी अत्यन्त आनन्द प्राप्त भएको अनुभव गर्नु पर्ने छ।

४) त्यसपछि शब्दको (छिगगी वाङ) अभिषेक गर्छन्।

यी चार प्रकारको अभिषेक गरी सकेपछि मात्र चारै बुद्धज्ञान प्राप्त हुने गुप्ती मार्ग, गम्भीर, रहस्यम बज्रयानको उपदेश दिन्छन्। बज्रयान मार्ग दुइ भाग छ -

*१) उत्पन्नक्रम र २) सम्पन्नक्रम।* यी दुईको पूर्व अभ्यास गरी सकेपछि आफू धर्मकार्य प्राप्त गरी बुद्ध ज्ञान प्राप्त हुन्छ अनि अरू प्राणीहरूका कल्याणको निम्ति रूपकार्य, सम्भोगकार्य र निर्माणकार्य, भवसागर र निर्वाण, यी दुइ गहना अलङ्कर भैं हुनेछ।

तेस्रो अन्तिम यस ग्रन्थको सार प्राप्त गर्ने प्रार्थना वा प्राणीधान।

यसरी मार्गको नीति संक्षेपमा बताएको अघिका सत गुरुका र महात्माहरूको वाणी अनुसार लेखे तापनि अविद्याको वशमा परेको कारणले गर्दा यी माथिका लेखाईमा शुब्दमा अर्थमा जे जस्तो भूल त्रुटि हुन गए, म जीनापुत्रलाई (बुद्धहरू) माफ (क्षमा) माग्छु, क्षमा

गरिदिनु हवस भनी विन्ति गर्छु। यी कुशल धर्मले षष्ट गतिका प्राणीहरू सबै गुरुका वाणी अनुसार शिक्षा लिएर अधर्म (पाप कर्म) देखि मन फर्काएर पाप कर्म त्यागी, कुशल धर्मको मार्गमा धर्मानुसार लागी आफ्नो भूल पाप, भ्रमको संदेह हटाएर यो मनमा जे जस्तो भूल पाप या भ्रम उब्जिएर आउँदा यो मनमा महाज्ञान प्रकट (उत्पत्ति) भएर त्यो भूल र भ्रमको क्लेश संदेहबाट मुक्ति भएर जावस्। अहिले वर्तमान युगमा पनि शुभ मंगल होस्। कुशल धर्म फैलिएर जावस्, यमरी फैलिएर, मौलिएर बुद्ध रत्न शासन र त्यसमध्ये पनि आर्यलोकेश्वरको तप गर्ने मार्ग उत्तम मौन व्रत्त (न्युइने) धर्म दशै दिशामा फैलिएर र मौलिएर जावस। यी शिक्षा र उपदेश पाउने सर्व प्राणी मानिसहरू सबैले असंख्य अनादि कालदेखि गर्दै आएको पाप कर्म सबै प्रायश्चित भए बोधिको उत्तम मार्ग प्राप्त भएर आफु पनि मुक्ति भएर अनि आफ्नो बाधिचित्तको दया, मैत्री र करूणाले अरू प्राणीहरूलाई पनि दुःखका सागरबाट पार गरी, दुःखबाट मुक्ति गराई, चाँडै बुद्धज्ञान प्राप्त भएर जावस्।

यो ग्रन्थ लेख्नुको मूल कारण श्रद्धा र करूणाले मन भिजेको लोसङ डोल्मा (सुमति तारा) नामक एक भिक्षुणी (आनीला) ले बिन्ती गर्दा अनि आफ्ना इष्टदेव र गुरुका आज्ञा संकेत हुँदा, अरूलाई फायदा र कल्याण होस् भनी सम्फेर म शेरव दोर्जे (ङावाङ पालंसङ पहिलो जन्म डुक्पा रिन्पोर्छे) देश देश घुमिहिँड़ने भए तापनि सर्व प्राणीको फायदा र कल्याणको इच्छा लिएर यो ग्रन्थ जेचुन मिलारेपा बस्नु भएको ठाउँ लब्ची गङ भन्ने हिमालको डाँड़ामा बस्दा रहँदा त्यस बेलमा लेखेको हो, अनि सर्व दिशा दशौं दिशामा फैलिएर जावस अनि जगतको कल्याण होस् भनी प्रार्थना सर्व मंगलम गर्छु।

**समाप्त**

